## प्रकाशक परिचय



अगमबहादुर योक्पाङदेन



श्रीमती निरन्तरा कन्दङवा योक्पाङदेन

लिम्बुवानको पान्थर जिल्ला सदरमुकाम फिदिम बजारछेउबाट बग्ने हेङवा खोलाको किनारमा भारपा गाविस-९, चुक्फारा भन्ने सानो रमाइलो सुन्दर गाउँमा पिता महलमान र माता रणश्वरी नेम्बाङको कोखबाट वि. सं. २०१७ असार १० गते एक दिदी र दाजुपछि कान्छा भाइको रुपमा अगमबहादुर योक्पाङदेन जन्मनुभयो।

बाल्यकालमा स्थानीय केटाकेटी झैं घाँस, दाउरा, गोठाला गर्दै फाल हान्ने, छेलो, डण्डिबियो, दौड, कुस्तीवाजमा कुशल वहाँले फिदिम माविबाट सेन्टअप पास गरी २०३४ सालमा सिंगापुर पुलिस फोर्समा भर्ना हुनुभयो। त्यहाँबाट पहिलो बिदामा घर आउँदा कोशी अञ्चल चुह्रानडाँडा निवासी अम्बरबहादुर कन्दङवाकी कान्छी छोरी निरन्तरा कन्दङवासँग वि. सं. २०३७ जेठ २८ गते शुभविवाह भयो।

साक्षर असल गृहिणी निरन्तरासँग जीवन जिउने क्रममा छोरा जेम्स, छोरी लिन्डा, ललिता, लतासमेत एक छोरा, तीन छोरीका आमाबुबा बनी बुहारी, देवीमाया खापुङ, नाति प्रज्वलसहित स-परिवार ललितपुर-१५, खुमलटारमा बसोवास गर्दै आउनुभएको छ। सिंगापुर पुलिसबाट सब-इन्स्पेक्टर पदबाट पेन्सन २०६१ मा आउनुभई सादा जीवन, उच्च विचारका अगमसिंले इमान्दार, वफादार, सरल स्वभावका धनी फलस्वरूप Long service medal, Good service medal, Admin efficiency medal, Conduct medal प्राप्त गर्नुभएको छ।

अवकाशपश्चात् सामाजिक जीवनमा घुलमिल गरेपनि कुनै पनि पदमा बस्न नरूचाउने, कम बोल्ने, मृदुभाषी, मिलनसार, भद्रभलादमी, भरपूर साथीहरूसँग रसमय बस्ने भएपनि किरात याक्थुङ चुम्लुङको आजीवन सदस्य, किरात धर्म तथा साहित्य उत्थान संघको आजीवन सदस्य, किरात ज्योतिष उत्थान संघको आजीवन संरक्षक सदस्य आदि सामाजिक संघ, संस्थामा रहेर मुलुक र समाजको सेवा गर्नुभएको छ।



9789937 201971

किरातका गाथा, कथा र लोककथाहरू

चन्द्रकुमार सेर्मा

# किरातका गाथा, कथा र लोककथाहरू



चन्द्रकुमार सेर्मा

चन्द्रकुमार सेर्मा लिम्बु

# किरातका गाथा, कथा र लोक कथाहरू



**प्रकाशक :**
अगमबहादुर योक्पाङदेन
श्रीमती निरन्तरा कन्दङवा योक्पाङदेन

# किरातका गाथा, कथा र लोक कथाहरू

लेखक/संकलक : चन्द्रकुमार सेर्मा लिम्बु
सर्वाधिकार : किरात याक्थुङ पापोहाङ
सेर्मा चन्द्रकुमार लिम्बु प्रतिष्ठान
प्रथम संस्करण : २०६४ पुस ३, प्रति : ११००
दोस्रो संस्करण : २०६६ पुस ३, प्रतिः ११००
टाइपिङ : नोवाहाङ सेर्मा लिम्बु
डिजाइन : स्नेह डिजाइन, बागबजार, फोन : ९८०३९९२१५३
प्रकाशक : अगमवहादुर योक्पाङदेन
श्रीमती निरन्तरा कन्दङवा योक्पाङदेन
व्यक्तिगत मूल्य : रू. 200/-
संस्थागत मूल्य : रू. 300/-
सहयोग वापत रू.

ISBN : 978-9937-2-0197-1

**KIRATKA GATHA, KATHA RA LOK KATHAHARU**
by Chandra Kumar Serma Limbu



## आनोमुई शुभकामना

किरात धर्म, भाषा, लिपि, साहित्य, संस्कार एवं ज्योतिषसम्वन्धी मूलतः मुहिगुम अङसीमाङ फाल्गुनन्द लिङ्देनबारे खोज अनुसन्धान गरी लगातार लेखिरहने, ज्ञानको संकलन तथा संग्रह गर्दै प्रकाशमा ल्याउने उत्कृष्ठ काम चन्द्रकुमार सेर्मा लिम्बुले गर्दै आउनुभएको छ।

आफूले साधेको प्रिय चेलाको सुकार्यप्रति म अत्यन्त प्रसन्न छु। सरस्वती पुत्र, निसाम्माङसा, ज्ञानी, मानी मेरा भक्त सेर्माको सारा उन्नति, प्रगति र सिद्धिशक्तिको शुभकामना, शुभआशिष दिन चाहन्छु।

प्रस्तुत पुस्तक किरात सावायेत्हाङसा मेन्छाम्मोन नाम्याप्मीसाहरूमा लुकेर वसेको ज्ञानमय मुन्धुम आज उजागर भएको छ। यसले मुन्धुमको गाथा, कथा र लोककथाको क्षेत्रमा महत्वपूर्ण थप टेवा दिनेछ भन्ने आशा लिएको छु। लेखकको ५८औं नुमाङगेन्नामा प्रथम संस्करण र पुनः ६०औं नुमाङगेन्ना शुभजन्मोत्सवको अवसरमा दोस्रो संस्करण प्रकाशन गरि ऐतिहासिक तथा ज्ञानमूलक कृतित्व प्रकाशित गरिदिने आर्थिकदाता अगमवहादुर योक्पाङदेन र श्रीमती निरन्तरा कन्दङवा योक्पाङदेनप्रति हार्दिक शुभआशीर्वाद आनुःमुई दिन चाहान्छु। तागेरा निङवाभूमाङ, परमात्मा, परमेश्वरले हामी सबैको कल्याण गरून्।

तियाहा!
किरात धर्मको जय!

**अङसीमाङ आत्मानन्द लिङ्देन 'सेइङ'**
*प्रमुख संरक्षक*
किरात धर्म तथा साहित्य उत्थान संघ
किरात चोःलुङ अङसीमाङगेन्ना सेवा
किरात ज्योतिष उत्थान संघ, फोनः ०२३ - ६९४४०९
गुरूआश्रम, वाँभो-९, लारूम्वा, इलाम
फोन नं. ०२३-६९४४०९



# शुभकामना

किरात भाषा तथा साहित्यको क्षेत्रमा निरन्तर क्रियाशील ज्योतिष एवं धार्मिक स्रष्टा-द्रष्टा चन्द्रकुमार सेर्मा लिम्बुको ५८औं नोमाङगेन्ना शुभजन्मदिनको अवसर पारेर विमोचन हुन गइरहेको वहाँकै कृति 'किरातका गाथा, कथा र लोककथाहरू' नामक पुस्तक प्रकाशन हुन लागेको थाहा पाउँदा अत्यन्त खुशी लाग्यो।

सबै जाति, भाषा, धर्म र संस्कृतिका जनताको सुदृढ एकतामा आधारित हुँदै सिङ्गो मुलुक समावेशी तथा सहभागितामूलक संघीय लोकतान्त्रिक गणतन्त्रतर्फ उन्मुख भइरहेको आजको ऐतिहासिक पृष्ठभूमिमा किरात जनजातिवीच रहेका श्रुति, गाथा तथा कथाहरू प्रकाशन हुनु सामयिक र महत्वपूर्ण हुने कुरामा विश्वस्त छु। मुख्यतः मुन्धुमी ज्ञानमा आधारित प्रस्तुत पुस्तकले यस क्षेत्रमा एउटा नयाँ ईंटा थपेको महसुस गरेको छु। प्रकाशित पुस्तक ज्ञानमय, चेतनामय हुनुको साथै पठनीय र संग्रहणीय हुने विश्वासका साथ पूर्ण सफलताको लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछु।

●

२०६४ मंसिर १९

**सुवास नेम्वाङ**
*संविधानसभा अध्यक्ष*
*सिंहदरवार*



# शुभकामना

किरात धर्मका आध्यात्मिक चिन्तक तथा ज्योतिषी मनिषी मेरो भतिज चन्द्रकुमार सेर्मा लिम्वुले मिहेनतपूर्वक खोज संकलन अनुसन्धान गरि किरात समाजमा विद्यमान लुकिछिपि राखेको किरात याक्थुङ लिम्वु जातिहरूको मुन्धुम सशी खेदा, पाङदा लोपोन्मुख भइरहेको सम्पत्तिलाई पुस्तकको रूपमा उजागर गर्नु भएको *किरातका गाथा, कथा र लोक कथाहरू* प्रकाशन हुन गइरहेको सुन्न पाउँदा अत्यन्तै खुसी लाग्यो।

हाम्रा समाजमा कैयौं ज्ञानका बुँदाहरू श्रुतिको रूपमा जीवन्त छन्। यही नै पुर्खाहरूको सम्पत्ति सम्झेर हामीले गहिरो अध्ययन मनन गर्यौं भने आफ्नो पहिचान जान्न सकिन्छ। यही कुरा यस पुस्तकले शिक्षा दिने तथा पाठ सिकाउने छ भन्ने लागेको छ। यस योग्य कामको प्रकाशन गर्ने अगमवहादुर योक्पाङदेन श्रीमती निरन्तरा कन्दङवा धन्यवादको पात्र वन्नु भएको छ।

अन्त्यमा पुस्तक ज्ञान वर्द्धक, पठनीय, मननीय र संग्रहनीय वन्न सफल होस् यही सफलता नै लेखकको सफलता हुनेछ भन्ने दृढ विश्वासका साथ अन्य थप पुस्तकहरू प्रकाशन हुँदै जाने सिर्जनात्मक कार्यमा निरन्तरता रहोस् शुभकामना, शुभआशिष ज्ञापन गर्दछु।

भतिजोको ६०औं शुभजन्मोत्सवको उपलक्षमा उत्तरोत्तर उन्नत्ति प्रगति सुःख समृद्धी एवं चिरायुको लागि परमात्मा परमेश्वर तागेरा निङवाभूमाङसँग प्रार्थना गर्दछु।

धन्यवाद।
जय नेपाल।

●

**पूर्णकुमार सेर्मा लिम्बु**
*माननीय स्थानीय विकासमन्त्री*

# प्रकाशकीय



पृथ्वी गोलो मात्र नभएर उकालो र ओरालो पनि छ। ब्रम्हाण्ड असीमित औ ज्ञान अथाह एवं अखण्ड छ। संसार विचित्रको छ। जीवनको आरोह अवरोह यात्रामा अनेक तीतामीठा अनुभवहरू अनुभूति गर्न पाइयो। यद्यपि, जीवन अपूर्ण नै रहयो। वास्तवमा, मान्छे जन्मेपछि मरेर जाँदा लगिने वस्तु शुन्य रहेछ। रित्तै आयो, सित्तै जाने ईश्वरीय विधिको विधान प्रकृतिको अकाट्य नियम संसारिक जीवनले गरेको काम कीर्ति मात्र अमर रहने रहेछ भन्ने थाहा भयो। मरेर जाँदा पनि पाप र धर्मको कुम्लोमध्ये एक लिएर गइने रहेछ।

मानवले अध्ययन, मनन गरी बुझ्नुपर्ने मूल तत्व भाषा, लिपि, संस्कार, इतिहास र धर्म हो भन्ने तथ्यलाई हृदयंगम गर्दै जसको जगेर्ना गर्ने दायित्व हामी सवैको साझा कर्तव्य भएको अनुभव भयो। यस सन्दर्भमा मेरा विद्वान भतिज चन्द्रकुमार सेर्मा लिम्वुले धेरै अगाडिदेखि संकलन, लेखन, पाण्डुलिपि लिएर आउनु भई एकाएक अक्षरसः पढी वाचन गरी सुन्दा साह्रै आनन्द लाग्यो। यसभित्रका मुन्धुमहरूले मेरो आत्मा छोयो। मन धोयो। ज्ञान वाङमयमा संकलित मुन्धुमहरू अजेय, अपराजेय र अमृतमय छन्। आजसम्म प्रकाशनमा आउन नसकेका ज्ञानवाहक मुन्धुमहरू मानवीय, मननीय, पठनीय, मुन्धुममय छन् जस्तो लाग्यो, फलस्वरूप प्रकाशन गरौं, गरौं मनमा भाव उब्ज्यो। कीर्ति पनि रहने, मातृसेवा पनि हुने, मुन्धुम ज्ञान पनि बाँडिने, लेखक मेरो प्यारो भतिजको पनि चित्त बुझ्ने आदि विचार गरी दृढ विश्वासमा रहेर पुस्तक प्रकाशन गर्ने इच्छा गरें। यो मेरो सेवा पहिलो प्रयास हो।

पुस्तकभित्रका संकलन, संयोजन, लेखनप्रति लेखक स्वयं जिम्मेवार हुनुहुन्छ। मैले केवल आर्थिकभार मात्र सम्हालेको छु। लेखक र प्रकाशकको निवेदनप्रति संवेदनशील हुनुभई हामीलाई शुभ आशिष दिनुहुने किरात धर्मका धर्मगुरू अङसीमाङ आत्मानन्द लिङ्देन 'सेइङ' ज्यूको चरणमा दण्डवत सेवा चढाउँदै शुभकामना दिनुहुने सम्माननीय संविधानसभाध्यक्ष सुवासचन्द्र नेम्वाङ, माननीय स्थानीय विकासमन्त्री पूर्णकुमार सेर्मा लिम्वुप्रति हार्दिक धन्यवाद नदिई रहन सक्दिन। हामी सवैलाई तागेरा निङवाभूमाङले रक्षा गरून् भनी प्रार्थना गर्दै हार्दिक मंगलमय शुभकामना चढाउँदछौं। धन्यवाद।

सेवारो!
किरात धर्मको – जय!!


**डब्लु. ओ. टु. अगमबहादुर योक्पाङदेन**
**श्रीमती निरन्तरा कन्दङवा योक्पाङदेन**
ललितपुर उपमहानगर पालिका-१५, खुमलटार
फोन नं. ०१-५५४११२०
मोवाइल नं. ९८५१०८९७०



# लेखकीय

धेरै वर्ष अघिदेखिको संकलन पाण्डुलिपि प्रकाशन गरौं भन्दाभन्दै कति दिन, कति रात बितो। सृष्टि हुनलाई पनि साइत अर्थात् संयोग चाहिंदो रहेछ। तागेरा निङवाभूमाङको कृपाविना कुनै पनि कार्य सम्पन्न नहुने मुन्धुम वास्तविक रहेछ।

*माङनिङवारे माङ; हाङनिङवारे हाङ; योक निङवारे योक आवोङलो।*

माङले हेने इत्ताङे, इङ्गा केतुङ भन्छ। जस्तो दृष्टि, उस्तै सृष्टि। मुन्धुमी वचन वास्तवमा ईश्वरीय वचन हो। यस मुन्धुमी वाङ्मयमा ज्ञानवर्द्धक गाथा, कथा र लोकथाहरू लुकिछिपी बसेको अनमोल मोतीका दानाहरू संग्रहित पुस्तकले पृथक अस्तित्व, छुट्टै पहिचान राख्नेछ भन्ने मेरो ठहर छ।

मेन्छाम्गेन नाम्याप्मीसा माङ, साम्माङ, च्याङ नु खेदापाङदा, मना पोङमा मानव सृष्टि, नावाचईत, देवता, ग्रह, योगिनीसमेतको मुन्धुमहरू यसका मूल आत्मा तत्व हुन्।

*साम्यो याम्बकले आःवोरो*
*लायो खाःजोङले आमेक्लो*
*यम्वा निङवारे अङसी आवोङलो।*

धर्मले बढ्ने, पाप कर्मले नासिन्छ। महान् वन्न खोजे महान् होइन्छ। यसरी सत्य, निष्ठा, धर्म चिताउँदा मेरो पुस्तकमा १४औं कृति बढेर आएको यो स्वयं प्रत्यक्ष प्रमाण हो। तागेरा निङवाभूमाङको कृपाले मेरो कामना पूरा भएको छ।

मुन्धुम संकलनमा सहयोग दिने पान्थर, स्यावरूम्वाका दलवहादुर चेम्जोङ, लुङवाफू निवासी बृजहाङपति चवेगु, तेह्रथुमका दुर्गाप्रसाद फोपाहाङ दमक-१३ का भीमविक्रम चवेगुहरूप्रति सदा ऋणी छु। पुस्तकको फल कस्तो हुने हो, पाठकवृन्दमा सुम्पन्छु।

अन्त्यमा, मेरो ५८औं नुमाङगेन्ना र ६०औं नुमाङगेन्ना शुभजन्मोत्सवको अवसरमा २/२ पटक प्रकाशन गरिदिने काका अगमवहादुर योक्पाङदेन र श्रीमती निरन्तरा कन्दङवाप्रति अनुगृहित छु। पुस्तकमा शुभकामना दिनुहुने अङसीमाङ आत्मानन्द लिङ्देन 'सेइङ' को पाउमा श्रद्धाभक्ति दर्शाउँछु। पुस्तकको न्वारान, विमोचन र शुभकामना दिनुभई मलाई सदैव साथ दिइरहने सम्माननीय संविधानसभाध्यक्ष सुवासचन्द्र नेम्वाङ र माननीय स्थानीय विकासमन्त्री पूर्णकुमार सेर्मा लिम्वु काकाप्रति कृतज्ञ छु।

तियाहा!
सेवारो!!
किरात धर्मको - जय!!!

●

चन्द्रकुमार सेर्मा लिम्वु
वलने-५, पान्थर
दमक-१०, झापा
कीर्तिपुर, काठमाण्डौ
२०६६ पुस ३
६०औं नुमाङगेन्ना सेवा

# विषयक्रम

# मेन्छाम्गेन नाम्याप्मीसा पोङमा मुन्धुम

सृष्टिकर्ता ईश्वर पोरोक्मी यम्भामीमाङ देवले सवै चराचर प्राणी सृष्टि गर्दै आए तापनि अन्त्यमा मानव जाति वेगर यो विशाल धरातल विश्वको माटोलाई नसुहाउने देखेर अव मानव जातिको सृष्टि गर्ने प्रयास गरे। यो विश्वको माटोलाई सुहाउने माटोकै मानव वनाउनु पऱ्यो भनेर प्रथम दिन तिनेवा, तिनेवा भनेको सावायेत्हाङ भाषावाट आँखा हुन्छ, र नेपालीवाट आइतवार भन्दछन्। यो प्रथम दिनमा माटोको मानव मूर्ति वनाइ श्वास पनि लगाए। अव वोल्छ कि वोल्दैन भनेर ए मानव मूर्ति हु भनेर वोलाउँदा हुँ भनेर वोलेन। तसर्थ, होइन के भयो र वोलेन भनी राम्रो जाँचवुझ गर्दा सवथोक वनाए तर जिव्रो राख्न भुलेछ। भगवानको पनि भूल हुन्छ भनेको अर्थ यसरी भएको हो। माछाको जिव्रो झिकेर त्यस मानवको जिव्रो राखी दोस्रो पटक ए मानव मूर्ति हु भनेर वोलाउँदा हुँ भनेर वोलेछ। त्यसो हुनाले सृष्टिका सुरूवातमा सृष्टिकर्ता ईश्वर र हामी मानव जातिवीच वोलिने भाषा ए र हुँ वाहेक अरू भाषा नै थिएन। त्यसैलाई हाम्रो मुन्धुमबाट माःपान र नेपालीवाट देवभाषा भनिन्छ। माटोवाट वनेका मानव जातिहरू कस्ता भए भनेर खोर्सानीको वोटलाई झटारोले हान्ने, उन्यूका वोटलाई वञ्चराले ढाल्ने। वाखाको वड्किउँलाको भारी विसाउने जन्मेको आठ दिन पुग्दा मरिजाने त्यस्ता मात्र भए। त्यसो हुनाले पोरोक्मी यम्भामीदेवले यो माटोमाथि राजकाज गरी खान र साथै यो पृथ्वीको माटोलाई सुहाउँदो मानव जाति भएन भनेर उठाई फालिदिँदा

यो पृथ्वीको माटो मुनि पर्न गएर आजसम्म जीवितै छन्। र, ती मानव खाम्जिरी खाम्वोङवा खाम्जिरी खाम्वक्थिम्वासा भन्दछौं। अतः किरात सावायेत्हाङ तथा सुशुलिलीमसा हो। वर्तमान लिम्बु जनजाति मृतक भई मट्टीमा दवाई सतगद गर्नु परेमा लाश दवाउने चिहानमा ती खाम्वोङवाहरूसँग दुई चार पैसा दाम राखेर किनेर मात्र दबाउन पाइन्छ यसलाई 'खाम्इङमा' भनिन्छ। त्यसरी नकिनी त्यसै दवाएमा मृतात्मालाई ती खाम्वोङवा जातिहरूले मृतकलाई दुःख, पिर दिन्छन्। र, मृतकको देहले हामी जीवित देहलाई सराप दिन्छन्, भलो हुँदैन। त्यसैलाई हाम्रो भाषावाट खेमाकारी साङव्रा र नेपालीमा पितृसराप भन्दछन्। त्यसो हुनाले त्यस खाम्वोङवा जातिहरू सृष्टिका जेठा मानव हुन्। तर, ती जातिहरू पूरा मानव हुन सकेनन्, र विफल भए।

दोस्रो पटक कस्ताकस्ता ठाउँमा घर घडेरी खन्दा माटोभित्र चराको फूल जस्तै सेतो वोक्रा भएको पाइन्छ। तर, भित्र भने 'कुघाङ छैन' माटो मात्र हुन्छ, त्यसैलाई माटोको अन्डा तथा खाम्वकथिम्वा भन्दछन्। मानवसृष्टि त्यसरी विफल हुन जाँदा फोरावा, फोरावा भनेको किरात भाषावाट नेवो (नाक) हुन्छ। नेपालीवाट सोमवार भन्दछन्। दिनवारमा सँधैभरी उज्योलोको भइरहने भनेर सुनचाँदी, इयुङको मानव मूर्ति वनाई सकेर मुखवाट फुकिदिँदा श्वास पसेन भनि पुनः .पोरोक्मी यम्भामीमाङ देवले उठाई फालिदिँदा कोही माटोमुनि र कोही भीरपहरामा पर्न गई आइन्दा कुनै भीर पहरामा मानिसजस्तै शिलाढुङ्गाको आवोला देवताहरू भएर वसेको पाइन्छ, ती हुन् सृष्टिका दोस्रो मानव जाति।

तेस्रो पटक मिकहाङवा, यो वारलाई हाम्रो भाषावाट नेखो-कान हुन्छ। नेपालीवाट मंगलवार भनिन्छ, दिनवारमा नदी वा नदीको किनार तथा वयागेन योक्पाङ तेम्वे भन्ने ठाउँमा अर्थात् गुराँस भएको जंगलमा मालिङ्गो, निगालोघारी थियो। सो मालिङ्गो घारीमा सोदुङलेः मुतेम्वेबाट वज्र खसेकाले वज्र आगोले डढिहाल्यो। मालिङ्गो खरानी भएको थियो। र, हाम्रो भाषावाट सिरूको नाम यस प्रकार छ। हकलिंवा निलिंवा युकमिलिंवा सिदिलिंवा भन्दछौं। आकाशवाट खसेको शीत पानी, सो सिरूको टुप्पामा जमी वसेको थियो। हाम्रो भाषावाट लिसम्थोम्वा पङगेन वहित भन्दछौं।



सो पानी र मालिङ्गो निगालोको खरानी मुछेर त्यसको मानवमूर्ति वनाए। मुन्धुममा आगो तीन किसिमको छ। ती आगोहरूको नाम वस्ने स्थान यसप्रकार छ, सवभन्दा जेठो आगो मियाकुनाम मी, यो मिया कुनामतेम्वेमा हुन्छ। माइलो आगो मुन्धाङसेरी मी, आगो सोधुङलेः मुतेम्वेमा हुन्छ। अव कान्छो आगो चाहिँ मेन्छाम नाम्याप्मी मी तथा सावायेत्हाङ फोक्वा मी, यो आगो पृथ्वीमा मानवजातिको साथमा आजसम्म छँदैछ। दोस्रो कुरा माथि सिरूको टुप्पामा जमी वसेको शीत पानी 'पङ्गेन वहित' लाई हिजोआज फेदाङमाहरू के भन्छन् भने पंङ्गेन वाहितलाई वाही भन्न लागे। वाही भनेको कुखुराको सुली हुन्छ। मानव जाति कुखुराको सुली र खरानीवाट सृष्टि भएको हौं भनी सारा मुन्धुम विकृतिपूर्ण विगारेका छन्। त्यस्ता खरानी र कुखुराको सुलीवाट मानव सृष्टि भएको होइन। माथिका अनुसार खरानी र शीत पानी वहित मुछी मानव मूर्ति बनाएर मुखवाट फुकिदिँदा पेटमा श्वास पस्यो।

त्यसरी श्वास पस्दा वोल्छ कि वोल्दैन भनेर ए मानव मूर्ति हु भनेर वोलाउँदा हुँ भनेर वोल्यो। वोल्दा पोरोक्मी यम्भामी देवको मनमा घमण्ड उठेर कस्तो कस्तो सुनचाँदीको मानव वनाउँदा नवोल्ने खरानी र पानीको वनाउँदा वोल्ने, थुक्क भनेर मानवको मुखमा थुकी दिंदा त्यस मानवको शिर खसेर मऱ्यो। त्यसरी मर्दा खरानीवाट वनेको देह उही खरानी भयो। त्यसो हुँदा मानिसले मानिसका मुखमा कहिल्यै नथुक्नु, थुकेमा शिर खसेर मरिन्छ भन्ने प्राचीन चम्जीक मुन्धुम छ। काम गर्दा कहिल्यै पनि घमन्ड नगर्नु, घमन्ड गरे आफ्नै कामको हानी हुन्छ भन्ने अर्थ यसरी भएको हो। क्रमैसँग आइतबार, सोमबार, मंगलबार तीन दिनसम्म गरेको कुनै काम पनि सफल नभएकोले उप्रान्त कुनै काम गर्नुपरेमा आइतबारको दिन कहिल्यै नथाल्नु ढिलो हुन्छ भनेको हो। चौथो पटक खेक्सुबा यो दिनबारलाई हेबु दाँत हुन्छ भने सो बुधबार हो। अतः यो दिन बारमा पोरोक्मी यम्भामीमाङ देवले आफ्नै देवशक्तिले आफ्नै देव अङ्गबाट आठ जना देवहरू सृष्टि गरे। ती आठ देवहरूको नाम यस प्रकार छ, प्रथम छोरा सोधुङगेन लेमुहाङ, दोस्रो छोरा सामकेलो केवाफूमाङ, सोलिलाममाङ, सिंहीती लुङहितीमाङ, तकमुई याङमुई चुल्लिफियामाङ, माङचोङ खाजोङ कुजोकसु कुबाछु कुगेछुमाङ,

युन्छोलेम्माङ तानछोसेम्माङ माङ, लायोलासोत नु याम्वक फेन याम्वक कुसेन्छु, कुवाछु, कुजोकसु तथा पाप धर्मको निरीक्षण देवमाङ ८, यही आठ देवहरूलाई सावारा येततुङगेमाङ भन्दछौं। नेपालीबाट आठ ऋषि तथा अष्ठ दिक्पाल भन्दछन्।

पोरोक्मी यम्भामीमाङ देवले सृष्टि गरेपछि मूल अङ्ग तथा जेठो छोरा सोधुङगेन लेप्मुहाङलाई यसरी आदेश दिनु भयो, हे सोधुङगेन लेप्मुहाङ यो पृथ्वीको माटोमाथि यो पृथ्वीको माटोलाई सुहाउने अर्थात् यो माटो जहाँसम्म रहन्छ, त्यहाँसम्म नमासिने। ढुङ्गा रोडालाई गनेर गनी नसकिने जस्तै फैलेर जाने मास्दा नमासिने मानव जाति सृष्टि गर्नुपर्छ भनेर आदेश दिए। आफ्ना पिता ईश्वर पोरोक्मी यम्भामीमाङवाट आदेश भएकाले सोधुङगेन लेप्मुहाङको पालो पाँचौ पटक कुरूप्पा यो बारलाई हाम्रो भाषावाट मुरा, नेपालीवाट मुख हुन्छ। अव यो दिनमा सोधुङगेन लेप्मुहाङको पालो उनका देव शक्तिले उनकै देव आङवाट पाँच जना छोरी तथा पञ्चकन्या देवी र दुई जना छोरा औ देवपुत्र सृष्टि गर्नुभयो। त्यसरी सृष्टि गर्न थाल्नु भएको छैंटौ दिन फसुप्पा, यो बारलाई शुक्रबार र हाम्रो भाषावाट हुक र नेपालीवाट हात हुन्छ। सो दिनबारमा आफ्ना देवपुत्र सोधुङगेन लेप्मुहाङको सृष्टिका काम कुरा सफल भएको देखेर मनमा साह्रै खुसी लागेर सेन्छ्रेङवा, यो शनिबारलाई हाम्रो भाषाबाट लाङ र नेपालीवाट खुट्टा हुन्छ, यो शनिवार दिनमा पोरोक्मी यम्भामीमाङ पोरोक्मी यम्भामी तेम्वेको आसनमाथि वसेर आराम गर्न लागे। त्यसैले शनिबारका दिन आराम गर्नुपर्ने प्रथा यसरी भई आएको हो भन्ने किरात सावायेत्हाङ सुशुलिलीम याक्थुङहाङ चम्जीक मुन्धुममा छ।

सृष्टिका सुरूवातकालीन दिनबारका नामहरू नामाकरण भएको र त्यस्तै चार साताको एक महिना, वाह्र महिनाको एक वर्ष भन्ने प्रथा चलन भई आएको आजसम्म त्यही परम्परा कायमै रही आएको छँदैछ। सोधुङगेन लेप्मुहाङको सृष्टिका जेठी छोरीको नाम मुजिना खेयङनामा हो। तिनै मुजिना खेयङनामालाई कसैले के भन्छन् भने सोधुङगेन लेप्मुहाङको छोरी नभई सियाक्पेरे थेयाक्पे थाप्नु खेजिरे मुजिथाप्तु तसर्थ भीर पहराको छोरी हुन् भनेका छन्। माइलीको नाम खाप्पुना मरङना, साइलीको



नाम इपनासोशरङहाङमा काइलीको नाम साप्परी मेम्परिहाङमा, कान्छीको नाम ईरिरे इधुलुङमा भयो।

सृष्टिका छोरा दुई भाइमा जेठाको नाम न्योसुगेन चगेनहाङ। तिनै चगेनहाङको अर्को नाम सगेक्सो समेनलाहाङ, युक्पुहाङ, चोकेक चोफुल्लुममाङ यसरी एउटैको चारवटा नाम हुन गयो। उदाहरण एउटाले हलो जोत्यो भने हली र तिनै हलीले घर बनायो भने कर्मी हुन्छ भने कामअनुसारको नामाकरण हुन गएको हो। योसुगेन चगेनहाङ जब उमेर पुगे तब दक्षिण दिशा गए र उनले पनि आपसेआफ आफै सृष्टि गर्न थाले। उनका सृष्टि थालनीमा जेठी लुप्लिवदनहाङमा, माइली नेतीफूङदिङनामा, तिनै नेतीफूङदिनामाको अर्को नाम मुअक्ली अक्वानामा एउटाको दुईवटा नाम भयो। कान्छीको नाम नावारा चवेहाङमा, तिनैको अर्को नाम सिंशारातायोहाङमा असाथोहिम केगोमा यसरी तीनवटा नाम हुनगयो। तीनवटा नाम हुन गयो भन्नलाई अर्थ यस्तो छ, चौतारा बनाउँदा यो चौतारामा मानिस बसेर खाजापानी खाँदा सेहेंसिन्दु हटाई दुःख बिमार हुन नदिई हटाएर खोलोपैरो नलागी बस्नु भनी किताव ढुङ्गामाथि पूजा आराधना गरी रूँगालु राख्ता चवेकेगोमा चवेहाङमा भनि खोलामा साँघु थाप्दा यो साँधुमा सेहें सिन्दु हिंड्न नदिई रूँगी बस्नु भनी पूजा आराधाना गरी रूँगालु राख्न सिंशातायोहाङमा भनी र अब बाटोघाटोमा धर्मशालापट्टि घर वनाउँदा यो पाटीघरमा कुनै सेहें, भूतप्रेत वास बस्न नदिइ हटाउनु भनी पूजा अर्चना गरी रूँगालु राख्दा असाथोहिम केगोमा भनेर नामाकरण हुन गएको हो। जेठी मुजिना खेयोङनामा उमेर पुगेपछि आजुनी आलेखामाङले देख्नु भयो। र, अन्तरध्यानबाट ऋतुदान दिएकाले पछि देवपुत्र पाई त्यस देवपुत्रबाट सृष्टि भएको तथा जन्मेका शाखा सन्तानले यो विश्वको माटोमाथि राजा भई बसेका छन्। त्यसमध्येको जेठो हाँगा किरातमध्ये सायायेत्हाङ तथा सुसुलिलीम याक्थुङहाङ वर्तमान लिम्बु मात्र नभएर सम्पूर्ण जनजाति हुन्। प्राचीनका लोक परम्परा र नीतिअनुसार सशी मुन्धुम हुनुपर्छ। मुन्धुमअनुसार ठाउँ र ठाउँअनुसारको सबुद प्रमाण हुन सक्नुपर्छ। अनिमात्र सत्य मुन्धुम ठहर्न सक्छ। नत्र हुँदैन। मुजिना खेयङनामाको सशी-मुन्धुम तेस्रो अध्यायमा उल्लेख छ।

माथिका माइली खाप्पुना मरङनामालाई पनि उमेर पुगी आजुनी आलेखा देववाटै ऋतुदान पाई पाँच कन्या देवी पाइन्। तिनीहरूमा जेठीको नाम थोसुफियालुङमा, माइलीको नाम सुसारीमा, साइलीको नाम योसुमुगपलुङमा, काइलीको नाम योसुफन्दारीमा, कान्छीको नाम येतिहाङमा।

यी देवीहरू जव उमेर पुगे, तव आफू विवाह गर्नको लागि जेठी र माइली केटाको खोजीमा उत्तर गए। तर, उत्तर दिशामा केटा कतै नपाउँदा निराशा भई आफ्ना वावुको घरमा फर्केर आइ उत्तर दिशामै वस्न लागिन्। त्यसरी वस्दा दिदीको सुसार चाकर गर्दा दिदी मालिक्नी र वहिनी दासी भइन्। अव साइली र काइली पनि जव उमेर पुगे तव आफू विवाह गर्नको लागि केटाको खोजीमा दक्षिण दिशा गए। तर, दक्षिण दिशामा केटा कतै नपाउँदा आफना वावु माइती घर आइ निराश भएर दक्षिण दिशामै वस्न लागिन्। त्यसरी वस्दा दिदीको सुसार चाकर गर्दा दिदी मालिक्नी र वहिनी दासी भइन्, यो मुन्धुम तेस्रो अध्यायमा वर्णन छ।

कान्छी येतिहाङमालाई पनि आजुनी आलेखा देववाटै ऋतुदान पाई छोरीछोरी आठ जना पाइन्। तिनीहरूमा तइनामगेनहाङमा, तई नामथाहाङमा, सिंयुक्मुदेनहाङमा, तेमेनवारङहाङमा, सेक्मारीहाङमा, सार्पाचिनुपुनहाङमा, सिंचाँगुहाङमा, विनायोहाङमा थिए। यिनीहरूले पछि आठ राजा तथा सावायेत्हाङहरूसँग विवाह गरे। अतः ती सावायेत्हाङ वंशीवाट जन्मेको शाखा सन्तान धेरै फैलिन गई चार दिशा चारवासामा गई त्यही दिशाका वंशीको आफैआफ आपुङगी राजा भई विश्वभर ढाकेर वसेका हुन् भन्ने ऐतिहासिक मुन्धुम छ। माथिका इपनासो सरङहाङमाले जुम्ल्याहा छोरा पाइन्। त्यसको मुन्धुम चौथो अध्यायमा उल्लेख छ।

अव साप्परी मेम्वरिहाङमा चाहिं वाजाइवाले घर वनाउँदा घरका मूल खम्वाले थिचेर मृत्यु हुँदा सो घर भइन्। सोधुङलेप्मुहाङले हामी मानव जाति सृष्टि गर्दै ल्याउँदा अन्त्यमा कस्ता अनौठोको सृष्टिका छोराछोरी पाए भने कान्छा छोरा वाजाइवा तेनदुम्याङवा र इरेरेइधुलुङमा छोरी चेली र माइती हुन्। तर ती दुईजना चेली र माइती अलग अलग जन्मेको नभई जुम्ल्याहा हुन। अतः ती दुईजना गर्भमा वास वस्दा गर्भभित्रै चेली र



माइतीको सम्भोग हुन गयो। त्यसरी सम्भोग हुन जाँदा गर्भकी वालक इधुलुङमा पनि उही गर्भिनी हुन गइन्। जव महिना पूरा भयो, तव वाजाइवा र इधुलुङमा पनि जन्मिए। जन्मनासाथै इधुलुङमाले पनि दुईजना जुम्ल्याहा छोरा जन्माइन्। त्यसबेलाको देव समाजले जेठाको नाम लाकेरेक र कान्छाको नाम नामकेरेक भनी नामाकरण गरे। वावुआमा छोरा एकैचोटी जन्मेकाले पछि एकैचोटी सँगसँगै उमेर पुग्न लागे। त्यसरी उमेर पुग्दा वाजाइवाले एकदिन उनका वहिनी इधुलुङमालाई भने, हेर वहिनी अव म उमेर पुगें। अघि गर्भमा वस्दा तिम्रो र मेरो सम्भोग भई दुईजना छोरा जन्माएको छौं, तापनि त्यो भनेको गर्भको कुरा हो। अव गर्भदेखि वाहिर यो पृथ्वीको माटोमाथि जन्मेपछि आकाश, पृथ्वी, हावा, पानी, अग्नी यी पञ्च देवले चेली र माइती हुन् भनी देखे जानेपछि गर्भमा वसेजस्तै आज पनि हामी दुईजना लोग्ने र स्वास्नी भई वस्नु हुँदैन। वसेमा यी पञ्चदेवले कठोर देवकष्ट दिनेछन्। तसर्थ, म अर्कै केटी मागेर विवाह गर्छु। केटीको खोजीमा जान्छु, र केटी साथमा लिएर आउँदा वहिनीले विवाहको सामग्री जुटाइ राख्नु।

यति भनेर वाजाइवा केटीको खोजीमा पूर्व दिशा जान लागे। यता इधुलुङमाले के अपराध सोचे भने हामी गर्भैदेखि लोग्ने र स्वास्नी भई दुईजना छोरा जन्माई सकेकोमा आज म छँदाछँदै मलाई सौता हाल्छ भने विवाहको सरजाम जुटाउने मेरो के खाँचो भनी आफ्ना साडी थाङनाको मजेत्रो ओढी विवाहको सरजाम केही नजुटाई मुख अँध्यारो पारेर उभिरहिन्। त्यसैवेला वाजाइवाले पूर्व दिशाकी नाम्मोनहाङमा नाम गरेकी केटी वावुआमासँग मागी साथमा लिएर आइपुगे। त्यसरी आइपुगेको त इधुलुङमा सिखुवामा मुख अँध्यारो पारी उभिरहेको त्यस नाम्मोनहाङमाले देखेर वाजाइवालाई भनिन्, मेरो विवाह भएको छैन भनेर मलाई ढाँट्नु भएछ। अन्त्यमा तपाई कन्या केटा नभई विवाह भइसकेकै हुनुहुँदो रहेछौ। म कन्या केटी त्यस्तो स्वास्नी भएको मानिससँग विवाह गरी माग्न राजी छुइन भनेर नाम्मोनहाङमा आफ्नो माइत घरमा जुनबाटो लिएर आएको त्यही बाटो फर्किन्।

तव लौ भएन भनेर पश्चिम दिशामा गई फेरि नामथाहाङमा नाम

गरेकी केटी वावु माइतीसँग मागी साथमा लिएर आए। पुनः त्यसरी लिएर आउँदा अघि जसरी उभिएकी थिइन् फेरि त्यसरी नै उभिएको देखी त्यो केटी पनि जुन वाटो आएकी थिई त्यही बाटो हातको हात खुट्टाको खुट्टै फर्केर जान्छु भनी फर्केर गइन्।

त्यो पनि फर्केर जाँदा भएन भनेर फेरि उत्तर दिशामा गएर सिङयुक्मुदेनहाङमा नाम गरेकी केटी वावु माइतीसँग हाजीरा मागी लिएर आएको त इधुलुङमाको उही चालामाला देखेर त्यो पनि फर्केर गइन्। त्यसरी तीन दिशाका केटी सवै तीन दिशा नै फर्केर गइसकेकाले साह्रै भएन भनेर दक्षिण दिशामा गई योसुगेन चगेनहाङको जेठी छोरी लुप्लिवदनहाङमासँग विहावारीको कुरा चलाउँदा सो केटीले वाजाइवालाई सोधिन्, तपाईले मलाई विवाह गरी माग्न भनेर आउनु भयो। म पनि तपाईसँग जानलाई राजी नै छु। तर, तपाईको देशमा तपाईले आफू वस्ने घर वनाई घरमै वस्नु भएको छ कि अथवा यस अवस्था केमा वस्नुभएको छ?

यस्तो प्रश्नले वाजाइवा छक्क परेर लौ त्यस्तो घर आजसम्म कतै वनाएको छैन र वस्ने घर भन्ने चीज आजमात्र तपाईका मुखवाट सुन्न पाएको छु भने। बाजाइवाले त्यसो भन्दा वदनहाङमाले त्यस्तो वस्ने घर आजसम्म वनाएको छैन भने तपाई आफ्नो देशमा फर्केर जानोस् र पहिले आफूवस्ने घर वनाउनोस् अनि बनाइसकेपछि मलाई लिन आउनोस् भनिन्। अनि मात्र म तपाईसँग गएर घरमा वस्ने छु। न घर, न द्वार केमा गएर वस्नु के गरी खाने हो? तसर्थ तपाईले जवसम्म आफू वस्ने घर वनाउनु हुन्न, तवसम्म म तपाईसँग विवाह गर्ने छैन। यति भनेर वाजाइवालाई विदा गरे।

अव वाजाइवा आफ्नो देशमा फर्केर गई कसरी आफू वस्ने घर वनाउने हो भनी कल्पना गर्न थाले। त्यसपछि पशु र पंक्षीहरू कसरी घर वनाई वसेका छन् भनी चिन्तनक्रममा हेर्दै जाँदा भगिया माकिया चराले फदुरा केक्तुरामाथि गुँढ वनाइ वसेको देखेर आफू वस्ने घर वनाउने प्रयास गरे। त्यसरी रूखमाथि घर वनाउँदा आफू उडुवा पंक्षी नभई भुँइमा हिड्ने मानव जाति भएको हुँदा रूखमाथि घर वनाएमा लडिने सम्भावना



देखेर त्यस प्रयासलाई पनि छोडिदिए। त्यसपछि अझै हेर्दै जाँदा वँदेलले वनाएको गुफामा घैमल थुपारी वसेको देखेर त्यसको अनुकरण गर्दै आफू वस्ने घर बनाउने प्रयास गरे। त्यसरी घर वनाउँदा वर्षा याममा भलपानीले असुरक्षित देखेर त्यस प्रयासलाई पनि छाडिदिए। त्यसवेलासम्म आफू वस्ने घर यसरी वनाउनु पर्छ भन्ने कुरा अक्कल वुद्धि केही थिएन। त्यसो हुनाले आफू वस्ने घर कसरी वनाउने हो भनी अक्कल वुद्धि माग्न आफ्ना पिताको देश सोधुङलेप्मु तेम्वेमा गएर आफ्ना पिताको पाउमा शीर राखी ढोगेर दुई हात जोडी हे पिता सोधुङलेप्मुहाङ आफू वस्ने घर कसरी वनाउने हो अक्कल वुद्धि केही नहुँदा अहिले वुद्धि पाउँ भनी शरण परेको छु।

आफ्नो छोराको त्यस्तो विन्ती सुनेकाले सोधुङलेप्मुहाङमाङको दया पलाई यसरी अर्ती उपदेश दिनुभयो, हेर छोरा अव तिमी आफ्नो देशमा जाऊ र वनमा रूख भालुले रूखमाथि रूखका हाँगा भाँचेर चाङ थापी वस्छ भने तिमीले पनि त्यस्तै चाङ घर वनाउनु। त्यो मानव वस्ने घर हुनेछ भनेर उपदेश दिए।

आफ्ना पिता सोधुङलेप्मुहाङवाट त्यस्तो अर्ती उपदेश थापेर आएपछि सो मुताविक पहिले घर वनाउने घर घडेरी थुपारेर खम्वा रोप्ने डोव खनेर ठिक्क पारी बीचमा वलियो सखुवाको खम्वा रोप्ने विचार आयो र रूख हेर्दै जाँदा दक्षिण दिशामा एउटा सखुवाको रूख मनपर्दो भेटे। तर, एउटा अचम्मको कुरा के भने वाजाइवाको दिदी साप्परी मेप्वरीमा माथि थिइन्। अतः उनलाई एउटा केटा आएर मेरा घरमा जाउँ भनेर फकाई लाँदा त्यो केटा र साप्परीहाङमा एउटा सखुवाको रूखमा पुगेपछि त्यो केटा त्यही हराई जान्थ्यो, र साप्परीहाङमा मात्र फर्केर आउँथिन्। यसो हुनाको कारण के रहेछ भने अघि हामी मानव जातिको सृष्टि हुनुभन्दा अगाडि पशुपंक्षी, रूखपातको जमानामा यो पृथ्वीमाथि एकैदिनमा आठ वटा घामहरू उदाउने अस्ताउने हुँदा आठ वटा घामहरूमध्ये सात वटा घामहरू दुम्सीले मार्दा सो घामहरू सोघा भई मरेकाले ती सोघाले साप्परीहाङमालाई त्यसरी फकाई लगेकाले साप्परीहाङमालाई अघिबाटै सोघाले गाँजिसकेको थियो। तर, उनले

थाहा पाइनन्। अतः आठ वटा घामहरू दुम्सीले मारेर सोघा भएको चम्जीक मुन्धुम तल उल्लेख छ।

वाजाइवाले त्यही केटा हराउने रूखलाई ढाली ताछतुछ गरी बोक्दा त्यही सोघाले थिचेर गह्रौ हुँदा छोडी आएर उनकी चेली साप्परीहाङमालाई गुहार मागेर चेली माइती दुवैजना त्यस खम्वा भएको ठाउँमा पुगेर फेदपट्टि साप्परीहाङमाले र टुप्पापट्टि वाजाइवाले बोकी अब डोवमा खम्वा रोप्न खोज्दा साप्परीहाङमाले कपालमा सिउरी राखेको काइँयो 'परी' कपालवाट खसेर डोवमा झऱ्यो। त्यसरी झर्दा साप्परीहाङमाले वाजाइवालाई भने, एकछिन थाम मेरो काइँयो खस्यो, म झिक्छु। यति भनेर साप्परीहाङमा 'परी' झिक्न डोवमा पसे। त्यसैवेला त्यो सोघाले खम्वा धकेलिदिँदा वाजाइवाले थाम्न नसकी छोडिदिँदा साप्परीहाङमा खम्वाले थिचेर सोघा भई मरिन्। अतः सोघाको उत्पत्ति यसरी भएको हो भन्ने याक्थुङहाङको चम्जीक मुन्धुम छ। वाजाइवा एक्लैले त्यो खम्वा उखेली अर्को ठाउँ सार्न नसक्दा त्यसै खम्वालाई पुरपार गरी सोमाथि चाङ घर वनाई तयार गरे। वाजाइवाले त्यसरी घर वनाएको ठाउँ चाहिँ तमोर खोलाको मुरिङ्ला तेम्वे भन्दछन्। हाल ताप्लेजुङ जिल्लाभित्र पर्दछ। अतः सृष्टिका सुरूवातमा मानव वस्ने घर वाजाइवाले वनाएको होहल्ला हुँदै त्यो हल्ला सोधुङलेप्मुहाङ तेम्वेसम्म पुगेर सोधुङलेप्मुहाङको कानसम्म पुग्यो। खवर पुग्दा अव मेरो छोराले वनाएको घरमा धमिरा लाग्छ, तसर्थ धमिरा फालिदिनु पऱ्यो भनी धमिरा झार्ने पूरोहित सामकेलोवा, केवा फूङवामाङ र नाचगान गर्ने केलाङ लाङदेन फूङदेनहाङवामाङहरू खुशीले गदगद हुँदै सोधुङलेप्मुहाङ तेम्वेवाट यो पृथ्वीलोक वाजाइवाले वनाएको घरमा नाचगान गर्दै आएको देखेर वाजाइवाले थमथम्याउँदै यसरी सम्झाए, अघि यो घर बनाउँदा घरका मूल खम्वाले साप्परीहाङमालाई थिचेर घरभित्रै मृत्यु भइन् त्यसो हुनाले त्यस्तो मृत्यु भएको घरमा यसरी नाचगान गर्नु हुँदैन भनेर आग्रह गरे। अव वाजाइवाको मुखवाट नाचगान गर्न नहुने आग्रह भएकाले ती पूरोहितहरूको पालो वाजाइवाले यसरी संकेत दिए कि तपाईले वनाएको नयाँ घरमा धमिरा नलागोस् भनेर धमिरा झारिदिन भनेर आएका थियौं। तर, साप्परीहाङमाको मृत्यु भएको खवर सुनाई हामीले नाचगान गर्न



नहुने आग्रह गर्दा हाम्रो चित्त वुझ्यो। अव हामी त्यसै फर्केर हाम्रो देशमा जान्छौं। तर, तपाईले यो कुरा याद राख्नोस् कि आजको आठ, नौ दिन पुग्दा तपाईको घरको गतिविधि के हुँदोरहेछ आफैं थाहा पाउनुहुनेछ। यति भनेर धमिरा काठटिम्वुर 'वारेक्पासिङ' घरको चारै सुरमा सिउरी राखेर सोधुङलेप्मुहाङलगायत आफ्ना वाजागाजासाथ फर्केर गए।

यता त्यो धमिरा काठवाट धमिरा सरेर धमिराले खाइ आठ, नौ दिन पुग्दा वाजाइवाको घर ढल्यो। त्यसो हुनाले मृत्यु भएको घरमा सुध्याँई नहुञ्जेल नाचगान गर्न हुँदैन भन्ने चम्जीक मुन्धुम यसरी भई आएको आजतक कायमै छ। त्यसरी धमिरा लागेर घर ढलेकाले वाजाइवा रूँदै त्यसै ठाउँ त्यसै खम्वालाई नै साविकै राखी वनाएर फेरि अर्कोपटक तयार गरे। जव तयार गरेपछि अव त्यसमा धमिरा झार्नलाई धमिरा झार्ने पूरोहित लिन आफ्ना पिताको देश सोधुङलेप्मुहाङ तेम्वेमा गएर हे पिता सोधुङलेप्मुहाङ पहिले वनाएको घर धमिराले खाएर ढल्यो। ढलेकाले फेरि अर्को घर बनाई तयार पारेको छु। धमिरा झार्ने पूरोहितहरू पठाइदिनु भए मेरो कल्याण हुने थियो भनेर विन्ती गरे। छोराको त्यस्तो विन्ती सुनेर सोधुङलेप्मुहाङको आत्मामा दया पलाई धमिरा झार्ने देव तथा माङहरूलाई वोलाएर धमिरा र साम केलोवा, केलाङ लाङदेन, फूङदेनहाङवाहरू हो, तपाईहरूले मेरो छोराकोमा धमिरा झारेर आउ भनी छोराको साथमा लगाई पठाए। ती देवताहरूलाई पृथ्वीतल आफूले वनाएको नयाँ घरमा ल्याई आहार सत्कार गरे। त्यसपछि ती पूरोहितहरूसँग वाजाइवाले विन्ती गरे, हे पूरोहितहरू हो अव धमिरा झार्नलाई के सरजाम चाहिन्छ, सो कुरा वताइ दिनुपऱ्यो भनेर सोधे।

ती पूरोहितहरूको पालो भनेको धमेरा झार्नलाई मुख्य च्याव्रुङ वाजा चाहिन्छ, त्यो वाजा भिरेर थकथाम भनेर बाजाको तालवाट घर वरिपरि घेरा मार्दै नाच्नुपर्छ। उतातिर धमिरा झार्ने चम्जीक मुन्धुम गाउँदै रातभर गाना 'साम्लो' गाउनु पर्छ भने। त्यसो भन्दा वाजाइवाको पालो त्यस्तो च्याव्रुङ मेरो देश यो पृथ्वीतलमा कतै पनि छैन, मैले कहाँबाट ल्याउनु भने। त्यो कुरा सुनेर ती देवताले भने तपाईका पिताको देश सोधुङलेप्मुहाङ तेम्वेमा सिङहित्ती लुङहित्तीमा बसेको छ। त्यहाँ गएर मलाई च्याव्रुङ्

चाहियो, च्याब्रुङ बनाइ दिनुपर्‍यो भनेर बिन्ती गर्नु। त्यसरी बिन्ती गर्दा उनले थोसुसाङसिङ योसुहङसिङ काठ कुँदेर त्यसपछि उसँग बाघ तथा केसामीको छाला छ, त्यो छालाले च्याब्रुङ मोरी दिन्छ। अनि त्यो बाजा बजाउँदा बाघ कराएको जस्तो हुई हुई गर्ने टाडोबाट बाघको जस्तो आवाज सुनिने आउँछ भनि सुनाए।

अब ती पुरोहितका कुरा सुनेपछि बाजाइबा सोधुङलेप्मुहाङ तेम्बेमा गई सिङहित्ती लुङहित्तीमाङसँग नालिकुजेङ राखेर बिन्ती गर्दा सिङहित्तीमाङ लुङहित्तीमाङले च्याब्रुङ कुँदी बाघको छालाले मोडी दिए। त्यसो हुनाले सृष्टिका सुरूवातमा के होरिकले मोडेको हुँदा त्यस बाजाको नाम नै 'के' भनी विश्व प्रख्यात छ। त्यसकारण आइन्दा अरू बाजाको र च्याब्रुङको आवाज धेरै फरक छ अर्थात् माथि भने झैं बाघ कराएजस्तै हुई हुई गर्ने आवाज आउँछ। यो च्याब्रुङ एउटा किसिमको नाचमा कुसरक्पादेखि लिएर घोरल, चित्तल, मृग, हात्ती, ढुकुर, परेवा, मयुर, कलचौंडा, पुतली, माछा इत्यादि विभिन्न पशुपंक्षीसहितको नाच आउँछ। जुन पाराको बाजा बज्छ, त्यही पाराले नाच आफै अदलबदल हुँदै जान्छ। कासन दिइरहनु पर्दैन। अब बाजाइबाले सोधुङलेप्मुहाङ तेम्बेबाट च्याब्रुङ 'के' ल्याइदिएकाले त्यो बाजा केलाङ लाङदेनहाङबा फूङदेनहाङबाहरूले भिरेर घर वरिपरि घेरा मार्दै थकथाम थाम भनी बाजाको तालबाट सामकेलोबा फूङबामाले धमिरा झार्ने मुन्धुम ल्याई रातभर धमिरा झारे। त्यसरी धमिरा झार्दा ती झरेका धमिराहरू धमिरा खाने चरी मुथके थक्नापु मुयेके येक्नापु तेल्लारा लनालापु तेलारा लारूप्थोमापुले सबै धमिरा खाइदिए। पहिले माथि धुरीदेखि तलामा, तलाबाट भुँइतला घरको मूल खम्बामा झारी जम्मा गर्नलाई मूल खम्बालाई वरिपरि घेरा मार्दा एउटा सोघा भएको संकेत पाए। त्यसरी संकेत पाउँदा ती पूरोहितले सोधे ए बाजाइबा यो तपाईका घरभित्र एउटा सोघा भएको देखिन्छ, हो कि होइन भनेर खारखेर गर्दा बाजाइबाको पालो अघि यो घर बनाउँदा घरको मूल खम्बाले दिदी साप्परीहाङमालाई थिचेर सोघा भई मरेकीले त्यस सोघाले तर्साएर रातदिन बस्न सुत्न दिँदैन। तसर्थ, अब त्यस सोघालाई पनि मारिदिनुहोस् भनेर नालिकुजेङ राखेर बिन्ती गरे।



बाजाइबाको त्यस्तो बिन्ती सुनेर त्यस सोघालाई मार्न खोज्दा उम्केर एक कदम पश्चिम दिशामा जान लागे। त्यसरी जाँदा ती देवतालाई झुक्याउनको लागि कहिले पशुपंक्षी कहिले कुइरीमण्डल यसरी वर्ण वर्णको रूप लिंदै भागे। ती पूरोहितले पनि त्यो सोघाले जे जे रूप लिन्छ, त्यही रूप लिंदै खेदेर लाँदालाँदै जहाँ आकाशपताल टुङ्गिन्छ त्यही पुगी। त्योदेखि उत्तर दिशा जाने भाग्ने ठाउँ कतै नपाउँदा चमेराको रूप लिएर एउटा ओढारमा झुण्डिइ बसे। त्यहीं भेट्टाएर अझै योदेखि पनि पर भाग्ने ठाउँ भए भागेर जा नभए यही अब मार्छौं भनी मार्न तयार हुँदा त्यो सोघा आफै यसरी बोले, हे सामकेलो केवाफूङबामाहरू मलाई नमारी छोडिदिनुहोस् मलाई छाडिदिनु भए तपाईहरूको खाने बाटो सधैंलाई रहिरहन्छ। यदि मारी दिनुभयो भने सधैंलाई तपाईहरूको खाने बाटो नै हराई जान्छ। त्यसो हुनाले बाटो मात्र छेकथुन गर्नु। कसरी भने घुङ्रिङ स्याउला, हाँडीको खबटा, सल्लाको खोटो, कुखुराको फुल यतिले बाटो छेकथुन गर्नु। म आठ, नौ वर्षसम्म आउने छैन।

जसको अर्थः घुङ्रिङले छिरी नसक्नु मालिङ्गो घारी भएर स्याउलिले घनाजंगल भएर हाँडीको खबटाले नाघी नसक्नु पहाड पर्वत भएर सल्लाको खोटोको अग्नी ज्वालो भएर कुखुराको फुलले तरी नसक्नु सात समुद्र भएर बाटो छेक्ने थुन्ने छ भनी बाचाबन्धन गर्नु। म त्यही सत्यबाचामा बसेर आठ, नौ वर्षसम्म आउने छैन। अनि बाटोमा एउटा फट्याङ्ग्रा मारेर लगी हामीले सोघा मोरेको चिनु यही भनेर ढाँटी देखाउनु। त्यसपछि तपाईहरूले अबदेखि सोघाले दुःख पीर दिँदैन भनी आफ्ना देशमा फर्केर जानु तपाईहरूको सधैंलाई खाने बाटो रहिरहनेछ यसरी खाने बाटो सिकाए।

त्यसरी सोघाले सिकाएअनुसार बाटो छेकथुन गरी बाटोमा फर्की आउँदा एउटा किथ्रा 'पियात' मारी ल्याएर सो देखाउँदै भने, हेर बाजाइबा हामीले सोघा मारेको चिनु यही हो। अबदेखि त तपाईका घरमा धमिरा लाग्न र सोघा सेहेंले कहिल्यै पनि तर्साउने छैन। अब हामी हाम्रो देशमा फर्केर जान्छौं। यो च्याब्रुङ 'के' पछिलाई काम दिनेछ। तपाईको जिम्मा भनेर त्यो च्याब्रुङ बाजाइबालाई जिम्मा दिएर त्यो देवताहरू आफ्ना

देशमा फर्केर गए। त्यसो हुनाले च्यावुङको उत्तरतिर नयाँ घर वनाउँदा धर्मिरा झार्ने यसरी भइआएको हो। साथै सोघा मारेर कहिले पनि मर्दैन किनभने ती देवताहरूले नै नमारेको हामीले कसरी मार्ने हो। वाटो छेकथुन गर्नेसम्म हो। अव वाजाइवाले सृष्टिका सुरूवातमा हामी मानव जाति वस्ने घर यो पृथ्वीको माटोमाथि बनाएका हुन्।

त्यसरी घर वनाई सकेकाले लुप्लिवदनहाङमाको वोल वन्दोवस्तअनुसार वाजाइवाले गएर ल्याए। ल्याउँदा दिदीलाई पुऱ्याउन उनका वहिनी नेतीफूङदिन्नामा पनि लोकन्दी भएर 'नेःसाशे' आइन्। अव विवाहको कर्मकाण्ड सकेर विदा दिंदा नेतीफूङदिन्नामा आफ्ना वावु माइती घर फर्केर जान पटक्कै मानिनन्। नमान्दा वाजाइवाले के गरे भने अव तपाई फर्केर जादिंनौ भने यो घरको मूल थाममा जहाँसम्म पृथ्वीको माटो रहन्छ, त्यहाँसम्म उभिएर वस्नुपर्छ। घरका वलेसी काटेर वाहिर जान पाउने छैनौं। पछि सावायेत्हाङ वंशी घर वनाउँदा वास्तुदेव तथा अक्वानामा नाउँले पूजा आराधना गर्नेछ। त्यही तपाईको खाने वाटो हो। यसरी वाचावन्धन गरेकाले अक्वानामाको सृष्टि भएको हो। साथै दिदी वहिनी पुऱ्याउन जानुपर्ने प्रथा यसरी भइआएको हो। यसमा फेदाङमाहरूले के भनिराखेका छन् भने साप्परीहाङमा पो थामले थिचेर मार्दा त्यो पो अक्वानामा भएको हो भनिराखेका छन्। अव कुरा सत्य मान्ने हो भने सवैको घरघरमा मूलथाममा सोघा छ। त्यस्ता सोघालाई घरको मूलथाममा देवता मानी पूजा गरेपछि कसरी शुभलाभ हुन जान्छ? के यो कुरा सत्य होला?

त्यसपछि वाजाइवाले वदनहाङमालाई घरमा ल्याए। तर, त्यस युगमा विहावारीको कर्मकाण्ड गर्ने फेदाङमा, साम्वा, येवा ईत्यादि सृष्टि भएकै थिएनन्। त्यसो हुनाले विवाहको कर्मकाण्ड गर्ने पूरोहित लिन वाजाइवा आफ्ना पिताको देश सोधुङलेप्मु तेम्वेमा गए। सामकेलो केवाफूङवामा साथै विवाहमा वाजागाजा वजाई नाचगान गर्ने केलाङ लाङदेन फूङदेनहाङवा गएर आफ्ना साथमा लिएर आए। आएपछि सामकेलो केवाफूङले सवैभन्दा पहिले विवाहको पोसाक 'तागावा' वनाई त्यसमाथि तिवाचो राखे। अर्थ के भने 'ति' को मतलव सुन्दर, 'वा' को



# किरात सावायेतहाङ मुन्धुम

मानव सृष्टिको मुन्धुमवाट मानव पूरा हुन सकेन। बाँकी यो तेस्रो अध्यायमा हामी विश्व मानव सृष्टिको किरात सावायेत्हाङ तथा सुसुलिलीम चम्जीक मुन्धुम यस प्रकार छ। माथि दोस्रो अध्यायमा सोधुङलेप्मुहाङको छोरी मुजिना खेयङना थिइन् भनी लेखिसकिएको छ। अव मुजिना खेयङना जव उमेर पुगिन् तव आफू विवाह गर्नको लागि केटाको खोजीमा पूर्व दिशा गइन्। तर, पूर्व दिशामा केटा कतै नपाउँदा फर्केर आई पश्चिम दिशा गइन्। तर, पश्चिमदिशामा पनि केटा कतै नपाउँदा फर्केर आई उत्तर दिशामा गइन्। त्यहाँ पनि केटा कतै नपाउँदा फर्केर आई दक्षिण दिशामा गइन्। तर, दक्षिण दिशामा पनि केटा कतै नपाउँदा निराश भएर आफ्नै देशमा फर्केर आइन्। तर, उनलाई कामदेवले भने झनझन सताउन लाग्यो। त्यसो हुँदा अन्त्यमा केही शिप नचलेपछि वहुलाईजस्ती भएर कहिले रून्थिन्। कहिले गीत गाउँथिन्। कहिले पात वजाउँथिन्। यसरी हुँदै जाँदा एकदिन वनमा गएर उच्च ठाउँमा रूखको छायाँमुनि दायाँ खुट्टा रूखको हाँगामा चढाई बायाँ खुट्टा भूईंमा राखी खुट्टादेखि शिर उत्तर दिशा, अनुहार पूर्व दिशा पारेर मनमा विरक्त चलेकाले सुसेली खेलिन्। सुइसुइ सुसेली खेल्दा दक्षिण दिशावाट हावा बेगले उडि आएर मुजिना खेयङनाको साडी उडाई पेटमा चिसो हावा पस्यो। किरात तथा सुसुलिलिम याक्थुङ माझमा सुसेली खेल्ने चलन यसरी भएको हो। त्यसरी सुसेली खेल्दा जस्तै होस् केही हावा आएकै हुन्छ।

मुजिना खेयङनाको पेटमा चिसो हावा घुसेकाले त्यसै वेलादेखि

कामदेवले सताउन छोड्यो। हावा पेटमा पसेकोले त्यही हावावाटै मुजिना खेयङना गर्भधारण हुन गइन्, र पछि जव महिना पूरा भयो तव एउटा सुन्दर देवपुत्रको जन्म दिइन्।

त्यसरी देवपुत्र पाउँदा वेगर लोग्ने कन्या केटीले कसरी पुत्र जन्माइन् भनेर पृथ्वी, आकाश, अग्नी, वरूण यी चार देवबीच ठूलो छलफल हुँदै गर्दा त्यसैवेला सभामा वायुदेव पनि आइ पुगेर उनले ती चार देवहरूलाई सम्झाए कि हे देवताहरूको लोग्ने वेगर कन्या केटीले देवपुत्र पाउनुको कारण यो विश्वको माटोमाथि राजकाज गरी खाइ वस्नसक्ने मानव सृष्टि गर्नको लागि आजुनी आलेखादेवले मेरो बीज मुजिना खेयङनाको उदारमा लगी राखिदिनु भनी मलाई आदेश दिएकाले सो वमोजिम मैले ल्याई राखिदिंदा त्यसरी वेगर लोग्ने कन्या केटीले देवपुत्र जन्म दिएकी हुन् भनेर सुनाए। अव वायुदेवको मुखवाट त्यस्तो कुरा सुनेपछि विश्व मानव सृष्टिको देवपुत्र जन्माउन भएको रहेछ भन्ने थाहा पाएपछि ती पाँचै देव एकजुट भएर त्यो देवपुत्रको वालक नाउँ सुशुलालाहाङ राखेर सभा विसर्जन गरे। त्यसपछि त्यो देवपुत्र शुक्लपक्षको चन्द्रमा जस्तै प्रतिदिन वढ्दै गयो। तर जव तीन महिना पुगे तव त्यो वालकको ओजन घटेर गई वोक्ता हावाजस्तै हलुङगो र राख्दा अञ्जुलीमा अटाउने भयो। त्यसो हुँदा मुजिना खेयङना छक्क परेर के यस्तो भयो भनेर अर्ती वुद्धिका मालिक तागेरा निङवाभूमाङसमक्ष पुगिन्। हे तागेरा निङवाभूमाङ मेरो छोराको वजन घटेर गई वोक्दा हावाजस्तो, राख्दा अञ्जुलिमा अटाउने केही जानि नसक्नु यस्तो भयो अर्ती उपदेश पाउँ भनी विन्ती गर्दा तागेरा निङवाभूमाङको आत्मादया पलाई यसरी अर्ती उपदेश दिनु भयो कि हे मुजिना खेयङना तपाई आफ्नो देशमा फर्केर जाउ र दक्षिण दिशामा 'योसुगेन चगेनहाङमा' वसेकी छ उनको अर्को नाउँ 'चोकेफ चोफुलुम' पनि भन्दछन्।

त्यहाँ गएर नालिकुजेङ दिएर मेरो छोराको कोक्रो वुनिदेउ भनेर कोक्रो वुनिमाग्नु त्यसरी वुनिमाग्दा उनले 'सिदीमादि याङ्दाङ' तथा आवुसायो याङदाङ वुनिदिन्छ त्यो ल्याएपछि पूर्व दिशाको भीर तथा सियाक्पे कम्मेल्ये थेयाक्पे कम्मेल्ये त्यस ठाउँमा 'केक्यनाफेक्वा' औ



सराको पात सुकेको छ त्यो सुकेको पात ल्याउनु र नानीको ओढ्ने ओछ्याउने वनाएर त्यस कोक्रोमा नानीलाई सुताएर यस किसिमले वाल गीत गाउँदै कोक्रो हल्लाउनु पर्छ। 'साप्मायासाए कुमाङआसाए थाङ् पोरेपोरे थाङ तिदिङतिदिङ' त्यसो गर्दा तातो हुन्छ र नानी सञ्चले सुत्न पाउँछ। जति निदायो ती आफैं वढेर जान्छ। घटेको कारण के भने चिसोले निदाउन नपाउँदा त्यसरी घटेको हो भनेर अर्ती उपदेश दिनुभयो। अव तागेरा निङवाभूमाङवाट त्यस्तो अर्ती उपदेश पाएर आई सो मुताविक त्यसरी कोक्रोमा सुताउँदा अघिजस्तै दिन प्रतिदिन वढेर गयो। तुरून्तै वढेर गई जव तीन वर्ष पुगे घरका पेटी वरिपरि खेल्न लागे। अघि सृष्टिको सुरूवातमा लत्ताकपडा नहुँदा सराको सुकेको पात केक्यनाफेक्वा ओढे, ओछ्याए भन्ने मुन्धुम छ। सुशुलालाहाङको शाखा सन्तान हुँदा सुसुलिलिम याक्थुङहाङ भनेको हो, जसलाई युक्पुङगेन सावान्केम्वा पनि भन्दछन्।

सुशुलालाहाङ जव पाँच वर्षको उमेर पुगे तव फित्कोली खेलाउन लागे, अनि झिंगाहरू मारेर आमा मैले शिकार मारे, यो शिकारको मासु खान हुन्छ कि हुँदैन भनेर प्रश्न गर्दा आमाले कुन खान हुने, कुन खान नहुने भनेर छुट्याइ दिन्थिन। जव आठ वर्ष पुगे, तव केही वरपर गई भाले मुंग्रो, भ्यागुताहरू मारेर ल्याई आमा मैले शिकार मारेर ल्याएँ। यो शिकारको मासु खान हुन्छ कि हुँदैन भनेर देखाउँदा यो शिकारको मासु खान हुँदैन। मात लाग्ने हो भनेर फलिदिन्थिन्। यसरी हुँदै जाँदा जव वाह्र वर्ष पुगे, तव आमा मलाई धनुवाण वनाई दिनु भनेर धनुवाण वनाई मागे। त्यसरी वनाई माग्दा मुजिना खेयङनाले भने कि हेर छोरा तिम्रो वावु मेरो लोग्ने नभएको र दोस्रो कुरा म आईमाई जाति हुँदा आफैं साक्फारी मुल्लारी तेम्वेमा गई त्यस ठाउँमा वाँस काट्ने हतियार सोधुङलेप्मुहाङको सिङयुक मुदेनफेया छ, त्यही हतियारले धनुवाँस काटेर धनु वनाउनु साथै वाण वनाउने गोपेवाँस छ, त्यसको वाण वनाउनु भनेर सम्झाइन्।

मुल्लारी तेम्वे भनेको मालवाँसे भन्छन् र हाल ताप्लेजुङ जिल्ला सावादिन गाविसमा पर्छ। अव सुशुलालाहाङ आफै त्यस ठाउँमा गएर धनुवाण वनाई ल्याएर एकदिन शिकारमा जाँदा भोगीया माकिया चराहरू

फदुरा केकतुरा सम्दो तथा ढोडेमाथि साह्है प्रेमप्रितीसाथ जोरजोरै वसेर हाँसखेल गरी वसेको अवस्थामा सुशुलालाहाङले देखेर तीर हानेको त भाले जुरेलीलाई लागेर त्यहाँ नै मृत्यु भयो। आफ्ना लोग्नेतिर लागेर मृत्यु भएको देखेर पोथी जुरेलीले आँखावाट अविरल आँसु खसाउँदै सुशुलालाहाङलाई सरापे। हामी लोग्ने स्वास्नी प्रेम प्रितीसाथ जोरजोरै वसेकोमा मेरो लोग्ने मारी मलाई ज्युँदै टुहुरा विधुवा गराउनु भयो भनेपछि तपाईका शाखा सन्तानमा म जस्तै विधुवा हुनुपरोस् भनी अघि-अघि चरीको सराप परेकाले हामी याक्थुङ जातिको दुखका कार्यलाई 'नुतुक्खे साम्लोमा गर्दा इम्विमेन्लो कुसङगमेन्लो आन्छेना आन्छेन थोकपूरापाला कुवुरापाला पुखेकनी पोङमेन साखेकनी पोङमेन पुयेच्छा पोङमेन सायेच्छा पोङमेन पुतुक्खे चामेन, सातुक्खे चामेन पोक्से येःवा आम्वी' फूलफूल्यो चाँपै मन वुझाउँ आफैं, यसरी शोकलहरी गाउँछन्। त्यसरी तीर लागी खसेको भाले जुरेलीलाई टिपेर ल्याई आमा यो शिकारको मासु खान हुन्छ कि हुँदैन भनेर देखाउँदा यसो हेरेर यो शिकारको मासु खान त हुन्छ तर छोरा आज ठूलो अपराध काम गऱ्यौ। किनभने भालेपोथी दुवै मारेको भए कसैले कसैको शोक वोकिरहनु नपरी आनन्द हुने थियो। तर, एउटा मरी एउटा वचेर जिन्दगीभर शोकले विव्हल भएर आँखावाट अविरल आँसु खसाउँदै रून लागिन्।

सुशुलालाहाङ जतिजति उमेर पुग्दै गए उतिउति शिकारमा जोसिन थाले। त्यसवेला आफ्नो नाउँ पनि शिकारी नाउँले सावायुक्पुगेम्वा औ सावायुक्पुङहाङले आफ्ना शिकारी सहयोगी हेन कोचो र माक कोचो नाउँ गरेको दुईवटा शिकारी कुकुर पनि साथमा थिए।

एक दिन युक्पुङहाङले आफ्ना शिकारी कुकुरसाथ वनमा जाँदा एउटा मृग भेटी तीर हानेकाले सो मृग तीरले लागि घाइते भई भाग्दा ती शिकारी कुकुरहरूले पछि लागि खेदेर लाँदा मृगले टेकेको पाइला अगाडि कुकुरले टेकेको पाइला पछाडि परेको शिलाढुङ्गा यही पारूङतेम्वे फक्ताङलुङमा दायाँभाग डुढपानी भन्ने ठाउँ तेह्रथुम जिल्लाअन्तर्गत वसन्तपुर गाविसमा पर्दछ। यस प्रमाणले सुसुलिलिम याक्थुङहाङ कुनै अन्त देशवाट आएको कदापि होइन भन्ने जनाउँछ। सृष्टिकै सुरूवातदेखिको



प्राचीन आदिवासी हौं। मंगोल अथवा अन्त देशवाट आउने वेग्लै हुन्। अर्कातिर मंगोल देशमा मात्र मानव सृष्टि हुनु अरू देशमा नहुनु भन्ने भगवानको आसय पनि थिएन होला। यो पारूङतेम्वे फक्ताङलुङ भनेको राम, कृष्ण, वुद्धजस्ताले अवतार लिएको ठाउँको शिर हो। र, हामी सृष्टिकै सुरूवातदेखिको प्राचीन आदिवासी हौं, र आजसम्म मूलथलोमै वसेका छौं। यी माथिका अनुसार सुसुलालाहाङ युक्पुङहाङको मूल पेशा नै वनमा शिकार गरी हिँड्ने हुनाले अर्थात् डर भर नभएको भनेको हाम्रो सावायेत्हाङ भाषावाट कुगीमा केहोपा भनेकोले पछि किरात शब्दमा प्रयोग भयो भन्ने साम्जीक मुन्धुम छ। युक्पुहाङ नाम किरात भएको अवस्थामा भगवान शिव पार्वतीले पनि हामी पनि किराती हौं भनेर घोषित गरेको सवैमा विदितै छ। त्यसो हुनाले शिवपुत्र किरात नभई शिवभन्दा किरात जेठो देखिन आउँछ र किरातको छोरा सुहाम्फे उनका पुत्र सावायेत्हाङ भए। उनको छोरा माङओल, उनको छोरा सुसुलिलिमहाङ, उनको छोरा येले तथा यलम्वर हो उनको छोरा घस्क उनको छोरा वलम्व, उनको छोरा सिंयुकमुदेनहाङ, उनको पालामा नेनेबातेन राजधानी हुँदा उनका दुई छोरामा जेठा संवंस तथा वमसम्वम कान्छा हुमति थिए। त्यसवेला किरात याक्थुङ भाषाको लिपि आविष्कार भएको थिएन। आफ्नो भाषाको लिपि कसरी आविष्कार गर्ने भनी सधैं चिन्तित थिए।

साप्योक लिङयोकमाङको तप गर्न लागे। हुँदै जाँदा एकदिन साप्योक लिङयोक तेम्वेवाट झरेर साप्योक लियोकमाङ वमसम्वमको अगाडि देखा पऱ्यो। त्यसरी देखा पर्दा झस्केर वमसम्वम डराएको देखेर नडराउ म साप्योक लिङयोकमाङ हुँ। तपाईले मेरो तपस्या गरेकोले तपस्यादेखि खुसी भएर वर दिन आएको हो। के माग्ने हो भन म इच्छा पूरा गरिदिनेछु। साप्योक लिङयोकमाङवाट त्यस्तो आदेश भएको सुनेर वमसम्वमले दुईहात जोडी विन्ती गरे कि हे साप्योक लियोकमाङ अरू केही होइन, भविष्यसम्मलाई रहनसक्ने लिपि अक्षर नहुँदा सो लिपि अक्षर पाउँ भनी ध्यान गरेको हो कृपया जो निगाह। वमसम्वमको तेस्रो विन्ती सुनेपछि साप्योक लिङयोकमाङको आत्मामा दया पलाई वमसम्वमलाई साथमा लिएर फक्ताङलुङमा साप्योक लिङयोक फुक्कुमा लगि तीन

महिनासम्म विद्या सिकाए। त्यसरी सिकाएको मुख्य लिपि यतिमात्र थियो ओत् माङ। त्यसवेला ओतवाहेक अरू लिपि नै थिएन। अनि त्यही ओत माङको सारवाट उपसार झिकेर कुवुङ शक का, पा, आ, मा, ता, ना, सा अक्षर वनाउँदै लगेका हुन्। वमसम्वमलाई साप्योक लिङयोकमाङले तीन महिनासम्म अक्षर सिकाएपछि अन्त्यमा विर्सन सक्छ भनेर पछिसम्मलाई होस् भनेर हाङयामसिङको पातमा किराले खोलेजस्तो आकार प्रकारको अक्षर दिंदै यसरी सम्झाए कि यो अक्षरको नाम येलेहाङ शक हो भनेकोलाई चैत वैसाकमा रूखपातका पुराना पात झरेर नयाँ पाउलो पात फेर्छ भने अर्कोतिर पशुपंक्षीले पनि त्यस्तै नयाँ वोली र भाषा फेर्छ भने हामी मानव जातिमा पनि बोली र भाषा फेरिन जाँदा येलेहाङ शकशकको सट्टामा याक्थुङ शकशक भन्न लागेर वर्तमान याक्थुङ शकशक भनी प्रचलनमा आएको छ। अर्कोतिर के छ भने यो वमसम्वम लिपिका वारेमा के भन्दैछन् भने प्रथम सिरीजंगा राजाले अविष्कार गरेको लिपि भन्ने र कसैले भने दोश्रो त्येअङसी सिरीजंगा सिङथेवेले अविष्कार गरेको हुँदा सिरीजंगा लिपि हो भन्ने गर्दछन्। यसवाट के देखिन आउँछ भने चैत वैसाकको खहरे खोलाले सङ्लो वगिरहेको खोला नदीलाई धमिल्याए जस्तै वमसम्वम लिपिलाई धमिल्याएको देखिन आएको वुझिन्छ। किरात युक्फु किरातका मूल पेशा नै वनमा शिकार गरी हिंड्ने हुनाले एकदिन उनका आमा मुजिना खेयङनालाई यसो भने कि आमा ममाथि सिह्निमा शिकार गर्न जानुपर्‍यो। त्यसो हुनाले खानेकुरा वनाई दिनु भनेर खानेकुरा वनाई मागे। आमा मुजिना खेयङनाको पालो भने कि हेर छोरा मैले आज राति साह्रै नराम्रो सपना देखें। त्यसमाथि आज शनिवार पनि भयो शनिवारको दिन आमा छोरा छुट्नु हुँदैन। छुटेमा फेरि कहिल्यै पनि भेट हुने छैन। अतः शनिवारका दिन आमा छोरा छुटेकोले पछि फेरि भेट भएन।

शनिवारको दिन आमा, छोरा तथा छोरी छुट्नु हुँदैन भनेको अर्थ यसरी भइ आएको हो। आमा मुजिना खेयङनाले रोक्दारोक्दै पनि मानेन र किरातको पालो आफ्ना शिकारी कुकुरहरूलाई सुसेलीवाट वोलाई यसो भने कि आमा म चाँडै शिकार मारेर ल्याउँछु। तपाईले धान कुटेर सामल



वनाई राख्नु यसरी फकाई राखी शिकारमा जान लागे। यता आमाको पालो ओखलमा धान हालेर धान कुट्न लागिन् धान कुटेको ढुङ्गाको ओखल लुङसुमदाङ भएको ठाउँ हाल ताप्लेजुङ जिल्लाअन्तर्गत आठराई चाँगे गाविसभित्र पर्छ। त्यहाँ ढुङ्गाको ओखल भएकाले लुङसुम्दाङ भन्ने नामले प्रख्यात छ। त्यस ढुङ्गाको ओखलमा मुजिना खेयङनाले धान हालेर धान कुट्न लागे उता किरातको पालो माथि लेकमा पुगी एउटा मृग भेटेर तीर हाने। तर, सो मृग घाइते भएर भाग्यो।

त्यसरी भाग्दा माथि दोस्रो अध्यायमा थोसुफियालुङमा र थोसुसुसारीमा केटाको खोजीमा उत्तर दिशामा गएको केटा नपाउँदा उत्तर दिशामै वस्न लागे भनी लेखिएको छ। अतः थोसुफियालुङमा र थोसुसुसारीमा जुन ठाउँमा वसेकी थिइन्, त्यो घाइते मृग त्यही ठाउँमा पुग्यो। जव त्यसरी पुग्दा त्यस घाइते मृग आफ्ना अगाडि आएको देखेर शिकारको धनी को रहेछ खोजी गर्दै आउँछ कि आउँदैन भनेर त्यो घाइते मृगलाई मारेर आफू तान वुनिवसेको मुनि लुकाई आफ्ना साडीले छोपी राखेर सोमाथि आफू वसेर चुपचाप तान वुनी वसे। उनकी वहिनी चाहिं त्यसबेला पानी लिन पँधेरा गएकी थिइन्।

त्यसैवेला हातमा तीर बोकेर काँधमा धनु भिरेर एउटा सुन्दर केटा दुईवटा शिकारी कुकुरका साथ आउँदै गरेको देखेर हत्तपत्त आई एउटा सुन्दर केटा आउँदैछ भनी कुरा सुनाउँदै थिइन्। त्यही मौका त्यो सुन्दर केटा पनि आइपुगेर थोसुफियालुङमा तान वुनिवसेको देखेर हे वहिनी! एउटा घाइते मृग यतातिर आएको कतै देख्नुभयो कि भनेर सोधे। सोध्दा ढाँटेर देखिन भने तर आखिरमा भने मुसुमुसु हाँसे। शिकारी कुकुरहरूले भने किरातको मुखमा हेर्दै फियालुङमा तान बुनी वसेको मुनि भुक्न लागे। किरातको पालो भने कि वहिनीले देखिन भनेर ढाँट्नु हुन्छ, तर यही छ भनेर मेरो शिकारी कुकुरले अघिवाटै संकेत दिइसकेको छ। त्यसो भन्दा फियालुङमाले हाँस्दै आफूले लुकाई राखेको शिकार झिकिदिइन्। अव आफ्ना शिकार त्यसरी झिकिदिएपछि त्यो शिकार त्यही नै पोलपाल चिरफार गरेर गुरू शिकारीलाई शिकार चढाएर पोली पकाई थोसुफियालुङमा अनि थोसुसुसारीमा आफूलगायत भएर मजासँग खाए

पिए। किरातले आफ्ना घर जाने र आमालाई विर्सिसके। त्यसदिन वेला वितेकाले किरात त्यहाँ नै वास वसे। किरात र थोसुफियालुङमाले नाता साइनो केलाए। नाता साइनो केलाउँदा कतैवाट पनि नाता साइनो नलाग्ने हुँदा किरात युक्पुङकेम्वा र थोसुफियालुङमा एकै ओछ्यानमा सुते। त्यसरी सुत्दा कामदेवको वसमा परी लसपस भए। सो हुनाले त्यतिकै भरले ती दुईको विवाह भई त्यस दिनदेखि ती दुईजना लोग्ने स्वास्नी भए। अनि हुँदैजाँदा थोसुफियालुङमालाई गर्भ हुन गई र चार पाँच महिना पुग्दा थोसुफियालुङमालाई अमिलो, पीरो, खाउँ खाउँ लाग्यो। त्यसरी खाउँखाउँ लाग्दा अमिलो, पीरो, खोजी गर्न किरात र थोसुफन्दारीमा नयाँ दासी वहिनीलाई वनमा पठाइन्। अव किरात र फन्दारीमा वनमा एक्लै जाँदा ती दुईको पनि उही लसपस हुँदाहुँदा ती दुईको पनि त्यत्तिकै भरले विवाह भई त्यस दिनदेखि ती पनि लोग्ने स्वास्नी भए।

समय वित्दै जाँदा थोसुसुसारीमालाई पनि गर्भ रहन गयो, र पछि महिना पूरा हुँदा ती दुवैजनाले छोरा छोरा पाए। अब त्यस युगमा त्यसवेलाको नाम जुराउने पूरोहितले मालिक्नीको छोराको नाम थोसु सुहाम्फेवा तथा सुछुरू सुहाम्फेवा र वहिनी दासीको छोराको नाम थोसुसाङदाङखेवा भनेर नाम राखे। उत्तरपट्टि शिकारमा जाँदा दुईजना स्वास्नीवाट दुईजना छोरा जन्माएपछि अव दक्षिण दिशामा चित्तलको शिकारमा जाने विचार गरेर किरात सावानकेम्वाले आफ्ना स्वास्नीहरूलाई यसो भने कि तिमीहरू दुईजनाले आ–आफ्ना छोरा आ-आफैले राम्रो पालन पोषण गर्दै गर्नु। म दक्षिण दिशामा चित्तलको शिकार गर्न जान्छु, र केही समयमा म आफै फर्केर आउनेछु। यति भनेर आफ्ना शिकारी कुकुरहरूलाई सुसेलीवाट वोलाई दक्षिण दिशामा भए। त्यसरी दक्षिण दिशामा पुगी एउटा चित्तल भेटेर तीर हान्दा तीरले लागी घाइते भएर भागे।

त्यसरी भाग्दा माथि दोस्रो अध्यायमा योसु मुगुप्लुङमा र योसुफन्दारिमा केटाको खोजीमा दक्षिण दिशामा गएको दक्षिण दिशामै वसे भनी लेखिसकिएको छ। अतः योसु सुमुगुप्लुङमा र योसुफन्दारीमा जहाँ वसेकी थिइन् त्यो घाइते चित्तल त्यहाँ पुग्यो। त्यसरी पुग्दा घाइते चित्तल



आफ्ना अगाडि आएको देखेर त्यसलाई मारी आफू तानवुनी वसेको मुनि लुकाई आफ्ना साडीले छोपी सोमाथि वसेर आफू चुपचाप तानवुनी वसे। त्यसैवेला हातमा तीर वोकेर काँधमा धनु भिरेको एउटा सुन्दर केटा आइपुगे। अतः योसु मुगुप्लुङमा तान वुनी वसेको देखेर हे वहिनी मेरो घाइते चित्तल यतातिर आएको कतै देख्नु भयो कि भनेर सोधे।

योसु मुगुप्लुङमाको पालो ढाँटेर देखिन भनिन्, तर मुसुक्क हाँसिन्। त्यो हाँसो किरातका तीखा आँखाले देखिहाले। अनि किरातको पालो भने कि वहिनीले देखिन भनेर ढाँट्नु भयो तर यहाँनिर छ भनेर मेरा शिकारी कुकुरले संकेत दिइसके। त्यसो भन्दा योसु मुगुप्लुङमाले हाँस्तै आफूले लुकाइराखेको शिकार झिकी दिइन्। शिकार त्यसरी फेला परेकाले त्यो शिकार त्यहाँ नै चिरफार पोलपाल गरी गुरू शिकारीलाई चढाइ त्यो शिकार त्यहाँ नै योसु मुगुप्लुङमा अनि फन्दारीमा साथै आफूलगायत तीन जना भएर मजासँग खाए, पिए। किरातले भने आफ्ना आमालाई घरमा जाने कुरा सवै विर्सिहाले। अनि त्यस दिन वेला वितेकाले किरात त्यहाँ नै वास वसे। नाता साइनो केलाउँदा कतैवाट पनि नाता साइनो नलाग्ने हुँदा किरात योसुमुगुप्लुङमाकै ओछ्यानमा सुते, कामदेवको वसमा परी सम्भोग हुन गयो। त्यसरी हुन जाँदा त्यतिकै भरले ती दुईको विहावारी भई त्यस दिनदेखि ती दुईजना लोग्ने स्वास्नी भए। हुँदै जाँदा केही दिनपछि मुगुप्लुङमालाई गर्भ रहन गयो, गर्भ रहनु जाँदा चार पाँच महिना पुग्दा मुगुप्लुङमालाई अमिलो, पिरो, खान मन लाग्यो। त्यसैले अमिलो पिरो खोजी गर्नलाई किरात र दासी अथवा वहिनीलाई वनमा एक्लै पठाए। एक्लै वनमा जाँदा कामदेवको वसमा परी उही लसपस गरे। त्यसरी लसपस हुँदा ती दुईको पनि त्यत्तिकै भरले विवाह भई त्यस दिनदेखि लोग्ने स्वास्नी भए। अनि हुँदै जाँदा फन्दारीमालाई पनि गर्भ रहन गयो र पछि महिना पूरा भएपछि ती दुवैजनाले छोरीछोरी जन्माए।

त्यस युगमा त्यस वेलाको ज्योतिष लेखी सोलीलाममाङले जेठी मालिक्नीको छोरीको नाम योसुलाहादोङना र दासी तथा वहिनीका छोरीको नाम यो लिङदाङखेवा राखे। त्यसपछि दक्षिण दिशामा शिकारमा जाँदा दुईजना स्वास्नीवाट दुईजना छोरीछोरी जन्माएपछि अव एकदमै माथि

वरफ भएमा कस्तुरीको शिकार गर्न जाने विचार आएकाले किरातले उनका स्वास्नीहरूलाई भने कि अव म कैलासपुरीमा कस्तुरीको शिकारमा जानुपर्‍यो त्यसो हुनाले बाटोमा खाने खाजा सामल वनाइ देउन भनेर खाजासामल वनाइ माग्दा योसु मुगप्लुङमा र योसु फन्दारीमाले भने कि हामीसँग त्यस्तो खाजा सामल छैन र दिँदैनौ। माथि उत्तर दिशामा तपाईका जेठी स्वास्नी फियालुङमा र सुशारीमा वसेका छन्। उतै गएर उनीहरूसँग माग्नु भनि जवाफ दिए। त्यसरी जवाफ दिँदा किरातको मन मरेर खाजा सामल केही नलगी आफ्ना शिकारी कुकुरहरूलाई सुसेलीवाट वोलाइ हिँड्न तयार हुँदा योसु मुगुप्लुङमा र फन्दारीमाले रोकेर यसरी भने कि लौ तपाई शिकारमा जानुहुन्छ। तर, हामीलाई यो तपाईका छोरीहरूलाई त्यसै कसले पालनपोषण गर्ने हो? यसको अर्थ नलाई त्यसै जान पाउने छैनौ भनेर रोके। त्यसरी रोक्दा किरातको पालो यसो भने कि योसु मुगुप्लुङमालाई योसुफन्दारीमाले र योसुलाहादोङ्नालाई योसुलिङदाङखेवाले पालनपोषण गर्नु। यति भनी राखेर थोसुफियालुङमा र थोसुसुशारीमा भएको ठाउँमा आई त्यहाँ पनि त्यसरी नै खाजा सामल वनाई मागे। अव त्यसरी माग्दा तल तपाईका कान्छी स्वास्नी योसुमुगुप्लुङमा र योसुफन्दारीमाहरूसँग माग्नु। हामीसँग त्यस्तो खाजासामल छैन र दिँदैनौं पनि भनेर जवाफ दिँदा किरातको साह्रै मन भाँचिएर खाजासामल तल माग्दा माथि र माथि माग्दा तल यसरी कपाल हालाहाल गरी आखिरमा दुबैतर्फवाट खाजासामल दिने निधो नभएकोले खाजासामल केही नलिइ आफना शिकारी कुकुरहरूलाई सुसेलीवाट वोलाई हिँड्न लाग्दा थोसुफियालुङमाले र थोसुसुशारीमाले रोकेर यसो भने कि लौ तपाई त त्यसरी शिकारमा जानुहुन्छ तर हामीलाई यो तपाईका छोराहरूलाई कसले पालनपोषण गर्ने र पछि यो तपाईका छोराहरू कहाँ गई वस्ने के हुने हुन्? पछि हुने कुरालाई आजै भनी राखेर मात्र जान पाउनेछौ नत्र त्यसै जान पाउनेछैनौ भनेर रोके।

किरातको पालो भन्न लागे कि थोसु फियालुङमालाई थोसु सुशारीमाले र थोसु सुहाम्फेवालाई थोसु साङदाङखेवाले पालन पोषण गर्नु। अव पछि हुने कुरालाई यो मेरा छोरा र छोरीवीच कुटुनीको अपराध जालसाजबाट



चेली र माइतीबीच आ–आफैमा पातक विवाह हुनेछ। र, त्यसवाट जन्मेका छोराहरू सावायेहाङवंशी भई ती सावायेत्हाङ वंशीका शाखा सन्तानहरू ढुङ्गा रोडा भई गनेर गनी नसक्ने गरी संसारमा फैलिएर यो विश्वको माटोमाथि आपुंगी राजा भई राजकाज गरी खाइ वस्नेछन्। विश्वको माटोलाई सुहाउने मानव जाति तिनै हुनेछन्। तिनीहरू नै माटो, ढुङ्गा, रूखपात, पशुपंक्षी, खोलानाला इत्यादिको मालिक अथवा राजा हुनेछन्। यसरी सबै कुराको अर्थ लगाई सकेपछि किरातको पालो दुवैतर्फवाट केही खाजासामल नलिई आफ्ना शिकारी कुकुरहरूलाई सुसेलीवाट वोलाई उत्तरको वाटो लिएर जाँदाजाँदा माथिकै लासापुरीमा पुग्दा भोकले सताएर हिँड्न नसक्दा धनुको लौरो टेकेर उभिए अव त्यसरी उभिँदा आठ, नौ दिनसम्म उभिरहे अन्त्यमा केही लागेन ढले। त्यसरी ढले तर पनि आफ्ना मालिकलाई माया मार्न नसकेर शिकारी कुकुरहरूले आठ नौ दिनसम्म भोकभोकै रूंगी वसे। तर, अन्त्यमा किरातको लाशवाट दुर्गन्ध आउन लागेकाले अव हाम्रो मालिक रहेनछन् भनेर माया मारी छोडी राखेर आमा मुजिना खेयङनालाई खवर दिन आए त्यसरी आउँदा आमा मुजिना खेयङनाले आफ्ना छोराको वाटो हेर्दै ओखलमा धान कुटी रहेकी थिइन्। शिकारी कुकुरहरू मात्र आएको देखेर मेरा छोरा खोई किन आएन भनी सोधेमा त्यसै वेला ती शिकारी कुकुरहरूले माथि कैलासपुरीमा पुग्दा भोकले सताएर ढली त्यहाँ नै चोला वदली भयो भने। त्यसरी चोला फेरेता पनि हाम्रो मालिकको मायाले आठ, नौ दिन रूँगेर वसेमा उनको लाशबाट दुर्गन्ध आएकोले माया मारेर तपाईलाई खवर दिन आएका हौं।

यसरी युक्पुङ सावान्केम्वा किरातको मृत्युको खवर सुनाई मालिक वेगर टुहुरो भएर शोकले विव्हल भई आँखावाट अविरल आँसु खसाउँदै वनजंगल पसी गएर वनकुत्ता ताम्फूङख्यावा भयो। वनजंगल पसी गएर आज पनि वनकुत्ता भइ वनमा वसेको वसेकै छन्। यता आमा मुजिना खेयङनाको पालो शिकारी कुकुरहरूवाट आफ्ना छोराको मृत्युको खवर सुनेपछि मेरो छोराको जहाँ मृत्यु भयो त्यहाँ पुगेर लाशसम्म हेर्नु पर्‍यो भनेर शोकले विव्हल भएर आँखावाट आँसु खसाउँदै धान कुटेको मुसल

काँधमा बोकेर उत्तर दिशाको बाटो लिएर जाँदाजाँदा र घोरजंगलमा पुग्दा रात परेर अँध्यारोले बाटो देखिएन। र, एउटा ओढारमा वास बसे। त्यसरी वास बस्दा एक्लै साथी कोही नहुँदा सेसन्तरले सातो खाएर मुजिना खेयङनाको पनि त्यहाँ नै मृत्यु भयो। अघि शुरूमा शनिवारका दिन आमा छोरा छुटेकाले पछि भेट नभई आमा छोरा दुवैको मृत्यु भयो। त्यसो हुनाले शनिवारका दिन आमाछोरा छुट्न हुँदैन वा परिवारमा छुट्नु हुँदैन भनेको अर्थ यसरी भएको हो। युक्पुङकेम्वा किरातले अवतार फेर्दा उनका अङ्गबाट निम्न रूपमा सृष्टि हुन गए। किरातको नली खुट्टाबाट ढुङ्गेबाँस सृष्टि हुन गयो। खुट्टाको औंलाबाट अदुवा, पाखुराको हाडबाट मलबाँस, हातको औंलाबाट उखु, टाउकोबाट चिन्डो, केशबाट युक्मिवा, आँखाबाट रीट्ठा, जिब्रोबाट अमलिसो, कानबाट च्याउ, भुँडीबाट गुन्द्रुगानु, आन्द्राबाट माङगुईलहरा, नलबाट वैगुन, फलबाट पिडाँलु र अरू यस्तै यस्तै इत्यादि सृष्टि हुनगयो। तसर्थ, हामी किरातमध्ये सावायेत्हाङ तथा सुसुलिलिम याक्थुङ वर्तमान लिम्बु जनजातिका वीचमा यस्तो चम्जीक मुन्धुम प्रख्यात रहेको छ।

किरातका छोराछोरीहरू अघि किरातले जे जे आदेश दिएका थिए सो मुताविक आफै पालनपोषण गर्न थाले। माथिका अनुसार जो मालिक मालिकनीहरू बसीबसी खाने, जो दास दासिनी थिए तिनीहरूले जतै गएर पनि खोजमेलगरी ल्याएर खुवाउनै पर्नेभयो।

त्यस्तैमा एकदिन थोसुशुहाम्फेवाको खाने कुरा खोजी गर्न साङदाङखेवा माथिबाट तल झरे। त्यस्तै योसुलाहादङ्नाको खानेकुरा खोजी गर्न लिङदाङखेवा तलबाट माथि आए। माथिबाट आउने साङदाङखेवा र तलबाट आउने लिङदाङखेवाको वीचमा भेट भयो। त्यसरी भेट हुँदा साङदाङखेवाले लिङदाङखेवालाई हे बहिनी तपाई कसको छोरी चेली हुनुहुन्छ र कुन देशबाट आइ कता जान लाग्यौ भनेर सोधे। त्यसरी सोधनी गर्दा तलबाट आउने लिङ्दाङखेवाले भनी दाजु म त किरातको छोरी हुँ तर मेरा आमाहरू दुई जना हुनुहुन्छ जेठी आमा योसुमुगुप्पलुङमा मालिक्नी पट्टीको मालिक्नी दिदी योसुलाहादङ्ना हुनुहुन्छ। म चाहिँ बहिनी तथा दासी योसुफन्दारीमा पट्टीको हुँ, मेरो नाम योसुलिङदाङखेवा हो। अतः मालिक्नी



दिदी योसुलाहादोङ्नालाई पालन पोषण गर्ने अभिभारा ममाथि लागेको हुँदा उनको खाने कुरा खोजी गर्न दक्षिण दिशाबाट आएको हुँ भनी। योसुलिङदाङखेवाको पालो अनि तपाई नि कसका छोरा भाइ हुनुहुन्छ र कुन देशबाट आई कहाँ जान लागेका हौ भनेर सोधे। त्यसरी सोधनी गर्दा म पनि किरात कै छोरा हुँ तर बहिनीले जसो भन्नु भयो उसरी नै मेरो आमा दुईजनामा जेठी मालिक्नी आमा पट्टीको हो र मेरो नाम थोसु साङदाङखेवा हो भने। यसरी नाता साईनो केलाउँदा किरातै स्वास्नी दासी पट्टीको छोरा र छोरी चेली माइती भए। उनीहरूको दुःख र अभिभारा पनि उत्तिकै बराबर हुँदा माइती र चेलीबीच यसरी सल्लाह बाँधे। मालिक्नी आमापट्टीका दाजु र बहिनी मालिक मालिक्नीहरूले दास समान हामीमाथि व्यवहार गर्छन् भने, हामी दासी पट्टीका चेली र माइती जन्मजुग छुट्कारा पाउने छैनौं, तसर्थ तपाई र म बीच ती दुईजनाले हामी चेली र माइती हौं भन्ने कुरा थाहा नपाई अञ्जान छन्। तसर्थ यिनी दुईजनाको विहावारी गरिदिउँ। यस्तो अपराधको सल्लाह बाँधे, कसरी विहावारी गरिदिने हो भने बहिनीले गएर लाहादोङ्नालाई भन्नु कि आज तपाईको खाने कुरा खोजी गर्न गएको थिए। त्यसरी जाँदा उत्तर दिशाबाट आउने मानिससँग भेट भयो र कुराकानी गर्दा उनले भनेकी उत्तर दिशामा थोसुसुहाम्फेवा नाउँ गरेको एउटा सुन्दर केटा छ र उनले केटी पाएमा विवाह गर्ने भनेर कुरा सुनाउनु। म गएर भन्छुकि आज तपाईको खानेकुरा खोजी गर्न दक्षिण दिशामा गएको थिए।

दक्षिणबाट आउने एउटा मानिससँग भेट भयो र कुराकानी गर्दा दक्षिण दिशामा योसुलाहादोङ्ना नाउ गरेकी एउटी सुन्दर केटी छे र उनले केटा पाए विवाह गर्ने भनी सुनाउनेछु। यसरी माथिको कुरा तल र तलको कुरा माथि कुरा बोकी कुरैकुराको उरालधुराल गरी विवाहगरी दिउँ भन्ने चेलीमाइतीले सल्लाह बाँधेर माथिको र तलको तल छुटे। अनि आआफ्ना मालिकमा अघि सरसल्लाह गरेको कुरा आआफ्ना मालिक मालिक्नीको कानमा हालिदिए। अब कुटुनीहरूको मुखबाट त्यस्ता कुरा सुन्न पाएकोले खुसीले गद्गद हुँदै त्यसो भए के कसो गर्ने हो भनी सल्लाह माग्दा ती चेली र माइती कुटुनीहरूले यसरी कुरा सिकाए कि

तपाई दाजु थोसुसुहाम्फेवाले राम्रो राम्रो थाक्रा, कांइयो, बिनायो खिपेर हातको सोवित कोसेली पठाई दिनुपर्छ। उता योसुलिङदाङखेवाको पालो तपाई दिदी योसुलाहादोङ्नाले राम्रो-राम्रो बुट्टेभोला अम्लारी तेक्तारी सुक्वा वुनेर हातको सोवित कोसेली पठाई दिनुपर्छ भने। कोसेली यसरी ओसारपसार हुँदै जाँदा एक दिन यो सुलिङदाङखेवाले भनेकी हेर दिदी यसरी हातको सोवित लियादिया गर्दामात्र तपाईहरूको विहावारी हुन सक्तैन। तसर्थ जहाँ केटा सुहाम्फेवा बसेको छ त्यहाँ दिदीले फच्चा जानुपर्छ भनेर सो आफ्ना दिदी लाहादोङ्नालाई लिएर योसुलिङदाङखेवा आइन्। त्यसरी आइपुग्दा बैनावट्टा तथा युप्पारूङको सट्टामा योसुसुहाम्फेवाले मालिङ्गोको विनायो लाहादोङ्नाको तुनामा बाँधिदिँदा दूधमा छोयो भनी र योसुलाहादोङ्नाले थोसुसुहाम्फेवालाई फूलमालाको सट्टा नाम्जा भिराइ दिँदा अङ्गालो मारी भनी होहाल्ला मच्चाई ती दुईको त्यत्तिकै भरले विहावारी भई त्यस दिनदेखि लोग्नेस्वास्नी भए। तसर्थ सृष्टिको सुरूवातमा मानवसृष्टिको लागि दोस्रा विवाह गर्ने तिनै थोसुसुहाम्फेवा र योसुलाहादोङ्ना हुन्। अनि छोराले विहा गरी ल्याउने र छोरीले कुटुम्वको घरमा फच्चा जानु पर्ने प्रथा यसरी भएको हो भन्ने हामी किरातको मुन्धुम छ। जब मालिक मालिक्नी स्वयं त्यसरी विहावारी गरिएवाट दासदासीवाट मुक्त पाए। योसुसाङदाङखेवा साम्दाङवा चरी भएर हिमालतर्फ लागे, योसुलिङदाङखेवा लुईचेचरी भएर तराई तथा मधेसतिर लागे। त्यसो हुनाले साम्दाङवा चरी र लुइचेचरी चेली माइती हुन् भन्ने हाम्रो मुन्धुम जीउँदो छ।

अव सुहाम्फेवा र लाहादोङ्नाको विहावारी भएकोले लोग्ने र स्वास्नी दुईजना भएर पाताक ओढार तथा काइलुङधुङ फुक्कुमा गएर कुकुर कुकुर्नी जस्तै जोल्ठेको जोल्ठेकै कहिले छुटेनन्। यो त अत्याचर भयो यसो हुनु हुँदैन भनेर त्यसवेलाको समाज जो थिए उनीहरूले वलियो सखुवाको गल्ला खालेक काटेर माभमा लगाइ गल्लाउँदा गल भाचियो मानिस छुटेन। त्यसरी नछुट्टिादा चिलाउनेको गल्ला काटी वोक्रा ताछेर माभमा लगाइ गल्लाउँदा चिलौनेको भुसले पोल्दा मात्र छुटे। वल्ल छुटेपछि वर्षेनी छोराछोरी पाउँन थाले। लगातार पाउँदा सोह्र



भाइ छोरा, एक वहिनी छोरी गरी जम्मा सत्रजना पाए। अव त्यसरी छोराछोरी पाउँदा ती छोराछोरीको फोहोर मैला चाट्ने ख्यासाम्माङ नाउँ गरेकी एउटी छाउरी कुकुर पालेका थिए र त्यो कुकुरले फोहोर मैला चाटेर सधैं सफा गर्ने गर्दथी। तर दैवले के गरे सधैं त च्यो च्यो भनेर वोलाउँदा आएर फोहोर चाट्थ्यो। त्यस दिन भने च्यो च्यो भनेर वोलाउँदा सुनेर पनि नसुने जस्तै चुपचाप सुति वस्यो। सो देखेर लाहादोङ्ना रीसले चुर भई कुच्चोको डाँठले कुकुरलाई हिर्काएको त कुकुरको आठ नौं करङ भाँचिएर घाइते भइन्। घाइते कुकुर्नी रिसले चुर भएर सुहाम्फेवा र लाहादोङ्ना चेली माइती पातक विवाहगरी सत्रजना छोराछोरी पाई वसेका छन् भनेर कसैलाई नसुनाई दवाई छपाई राखेको थिएँ, अव यिनीहरूलाई नपोली छोड्दिन भनेर पहिले सूर्य भएकोमा फेराद गर्न गए। त्यसरी जाँदा सूर्यले भने कि मेरो पछाडि चन्द्रमा आउँदैछ, तपाईको छलफल गरी वसे ढिलो हुन्छ र भेटी हाल्छ म जान्छु भनेर सूर्य गए। तुरून्त चन्द्रमा उदाएर आए, चन्द्रमासँग फेराद गर्दा चन्द्रमाले भने कि मेरो पछाडि शुक्र आउँदैछ, तपाईको छलफल गरी वसे ढिलो हुन्छ र अहिले भेटिहाल्छ, उसँग फेराद गर्नु ढिला भयो म जान्छु भनेर गइ गए। त्यसपछि शुक्र उदाएर आए उदाएर आउँदा उसँग फेराद गरे शुक्रले भने कि मैले तपाईको निशाफ निष्पक्षरूपले गरी दिनेछु तर के भने तपाई फेरादका कुरा साँचो र भुट्टा के रहेछ पहिले प्रमाण बुभ्दछु। अनि पछि मात्र तपाईको इन्साफ गरी दिनेछु तसर्थ हामी किरातमध्ये सावायेत्हाङ तथा सुसुलिलिम याक्थुङहाङ वर्तमान लिम्वु जनजातिको गाथा भरिपूर्ण रहेको छ।

शुक्रले कुकुरलाई तपाई तारेखमा बस्दै गर्नु यति भनेर पृथ्वी तलवाट चलाकीचरा चिल्लीख्यामा पुलाई भिकाएर यसरी आदेश दिएकी सुहाम्फेवा र लाहादोङ्ना पातक विवाहगरी वयागेन काइलुङधुङ ओढारमा सत्रजना छोराछोरी पाइ वसेका छन् र लाहादोङ्नाले मेरो आठ नौ करङ भाँचिने गरी कुटे भन्ने व्यहोराको फेराद-पत्र छ, सो फेरादका वोलीअनुसार त्यसरी पातक विबाह गरेर छोराछोरी पाई वसेको र लाहादोङ्नाले कुटपिट गरेको हो होइन। सो कुराको विवरण बुभेर आउनु भनी आदेश दिए,

शुक्रको त्यस्तो आदेश सुने पछि त्यो चलाकिचरा वयागेन काइलुङधुङ फुक्कुमा आए। काइलुङधुङ फुक्कु भनेको तम्वर नदीको किनार तम्वर खोलाको लुङथुङ हजार फुक्कु भन्दछन्। शुक्रको आदेश मुताविक त्यो चलाकीचरा पृथ्वी तल त्यो वयागेन काईलुङधुङ फुक्कुमा आए। चरा देखे पछी लाहादोङ्नाले ढोका थुनेको थुनेकै गरे, उँघार्दै उघारेनन्। ढोका थुनेकाले त्यो चलाकी चरा ढोकामाथि वसेर ढोका खोलखोल भन्दै अथवा च्यो च्यो गरेर आठ दिनसम्म त्यसै कराई बसे। आठ दिन पुगीसक्दा पनि नजाने कस्तो चरा हो हेर्नु पऱ्यो भनी नौ दिन पुग्दा ढोका खोलेको त त्यो चलाकीचरा भित्र पसेर नाची घुमी कुनाकुनी घुमी हेरेको त साच्चै कुनाभरि छोराछोरी भएको देखेर अव बाहिर निस्केर बुझेमा कुकुरलाई कुटेको कुच्चोसमेत दशी प्रमाण देखेपछि सरासर शुक्र भएको ठाउँमा गई सुहाम्फेवा र लाहादोङ्ना पातक विवाह भई छोराछोरी पाई बसेको र कुकुरलाई कुटेको समेत सत्य कुरा रहेछ। कुकुरका फेराद–पत्र साँचो हो झुट्टा अधुरो छैन भनी प्रमाण वकपत्र गरिदिए। चलाकी चराले वकेको वकपत्र सुनेपछि शुक्रको पालो आकाश, पाताल, अग्नी, वायु, वरूण, ईक्सा, तरक, मिराक, पंगेन वहित, सुरीत यी पाँचै देव ङामुक्सामवोलाई सूर्यलोकमा सभा वस्दा वस्ने स्थान कडा हुँदा त्यहाँ केही पनि छलफल हुन सकेन। वदलामा कुनै दिनमा सूर्य वरिपरि इन्द्रेनी घेरा मारेमा देवताहरू सभा वसेका हुन् भन्ने मुन्धुम लोकप्रिय छ। अत त्यहाँ केही पनि निर्णय हुन नसक्दा भएन भनेर चन्द्रलोकमा सभा सारी छलफल हुँदा त्यहा यसरी राया फैसला पारित गरे। चेली र माइती पातक विवाह गरेको देखिन आएकोले कठोर सजाय गर्नुपर्ने देखिन आउने र त्यसरी सजाय दिउँ भने हामी चेली र माइती हौं भन्ने कुरामा ती दुवैजना अञ्जान थिए। त्यसरी चेली र माइती पातक हुनको कारण कुटुनीहरूको षड्यन्त्रबाट त्यो काम कुरा भएको हो भन्ने इन्साफवाट देखिन आएकोले सोझै सजाय दिन मिलेन। त्यस्ता भरकरणमा परेको कुरालाई माफ दिनुपर्ने देखिन आउँछ।

त्यस्तो भूलचुकमा परेको कुरालाई अब प्रचारप्रचार भइसकेपछि अघि जस्तै लोग्नेस्वास्नी भइ वस्न पाउँदैनन्, छुटनामा हुनुपर्छ भनेर



रायफैसला गरे। पाँच देवको त्यस्तो राय फैसला भएको सुनेपछि अव उप्रान्त लोग्नेस्वास्नी कुकुरको जाहेरीवाट ज्युँदै छुट्न परेकोले लाहादोङ्नाले कुकुरलाई यसरी सरापी कि आइन्दा तपाईहरूको यौन सम्पर्क हुँदा सवैले देख्ने गरी धेरै समयसम्म जोडिने गरी रहिरहन परोस् भनि सराप दिएकोले कुकुरहरू जोल्ठेका हुन् भन्ने मुन्धुमको मत रहेको छ।

त्यसपछि लोग्नेस्वास्नी भएका ठाउँ वस्न नपाउने भनी पञ्चदेवले निर्णय गरेअनुसार थोसुशुहाम्फेवा र योसुलाहादोङ्ना छुटनामा हुने राय फैसला गरेअनुसार छुट्ने हुँदा यसरी बिन्ती गरे। हामी कुटुनीको अपराध कामले हामी भलखाँडोमा परेछौं। त्यसकारण हामी छुट्न तयार छौं, तर, यी हाम्रा छोराछोरीहरू मात्र बराबर बाँडी दिनुहोस् भनेर बिन्ती गरे। थोसुसुहाम्फेवाको र योसुलाहादोङ्नाको त्यस्तो संयुक्त बिन्ती सुनेपछि सत्र जनामा एकजना कसरी बाँड्ने सिंगो दिन नमिल्ने चिरे मरी जाने गम्भीर भई निष्पक्षरूपले बाँडी दिनलाई पाँचैदेव एकजुट भएर पञ्चशक्तिले एउटा चाल्नु बनाई सो चाल्नुमा राखेर चाल्दा चाल्नुबाट छिरेर तल झर्ने जति आमा लाहादोङ्नाको भाग र माथि अडिने जति वावुको भाग भन्ने राय बाँधेर पञ्चशक्तिले एउटा चाल्नु बनाई सो चाल्नुमाथि सबैजना राखी चाल्दा छोरैछोरा आठजना छिरेर तल झरे आठजना माथि अडिये। एकजना छोरी चाहीा माथि पनि अडिनन् तल पनि झरिनन्। जब आठ दिन पुग्यो तब मात्र छिरेर तल झरेर आमा लाहादोङ्ना भएकोमा जाँदा मेरो भागमा होइनस्। तेरो वावु जहाँ छ उही जा भनेर बाबु भएको ठाउँमा पठाइदिए। आमाले भनेअनुसार बाबु भएको ठाउँमा जाँदा बाबुले मेरो भाग होइनस् तेरो आमा जहाँ छ उही जानु भनि आमा भएको ठाउँमा पठाई दिए। अव आमा भन्ने वावु भएको ठाउँमा जानु, वावु भन्ने आमा भएको ठाउँमा जानु। यसरी बाबुआमा दुवै पट्टीबाट पठाएको हुँदा रिसले चुर भएर बाबु आमा दुबैपट्टी नगई तागेरानिङवाभूमाङलक्लुम्मा गई मामाङवा सिरेकेथुम्मा सिभाक्या मीफोक्वामा भइ तागेरा निङवाभूमाङ लक्लुम्मोमा वस्न लागे। त्यसलाई नेपालीवाट कान्छी बिजुवानी भन्छन्, त्यसरी चाल्नुबाट चाल्दामाथि अडिने आठ

जनाहरूको नाम यस प्रकार छ।

१. सुदुक्यु खेदुक्यु फेदाङमा
२. फुजिरी फुकाप्पो सिंदुई फेक्वाइ फेदाङमा
३. सावारा साम्वा
४. आवागो साङलाङगोवा
५. सिभाकयामी येवा
६. आवागो साङलाङगोवा
७. नेत्तियाफुं येवा
८. लाआङसी नामअङ्सी
९. माङमाङवा सिरेकेथुम्मा सिमाक्या मीफोक्वामा

यी माथिका सिभाक्यामीफोक्वामा वाहेक आठजनाहरू चाल्नीमाथि अडिएकोले वावु योसुसुहाम्फेवाको भागमा परेकोले यो पृथ्वीको माटो माथि वस्न नपाउने हुँदा वावु थोसुसुहाम्फेवाले सोधुङलेमुतेम्वेमा लिएर गई आफूसहित वस्न लागे। माङमावा सिरेकेथुम्मा समेतलाई जोडेर नौ जना पुऱ्याई त्यसलाई फाङ्हाङ भन्न लागे। अव ती नौ जना पनि देवलोकको देववंशी नभई यो पृथ्वी तलकैमा नवजाति हुँदा आठ राजा तथा सावायेत्हाङवंशीहरूको कैयौ पुस्तापछिवाट यो पृथ्वीको माटोमाथि नै आए। चाल्नुवाट छिरेर तल तथा यो पृथ्वीको माटोमाथि झरे, आठजनाहरूको नाम यसप्रकार छ।

१. मिक्नुसो लुम्माहाङ
२. खेसेरा उपाहाङ
३. माङमासो माङओलहाङ
४. लालासो पाङवोहाङ
५. मुधिङ्गे सांलेक्वाहाङ
६. साउन्दु उन्दुहाङ
७. सगिम्सो संमिहाङ
८. सेन्छेने सेनेहाङ

माथिका आठ जनाहरूको पनि यो माटोमाथि जन्मेर पछि चालनीमाथि चाल्दा फेरि यही पृथ्वीकै माटोमाथि झरेकाले सृष्टिका सुरूवातमा आमा लाहादोङ्नाको भागमा परेको छोरा आठजनाले सवभन्दा पहिले आफ्ना पाइला राखेकोले सृष्टिको सुरूवातमा यही पारूङ्तेम्वे तथा फक्ताङलुङ काखमा यो पृथ्वीको माटोलाई सुहाउने अथवा पृथ्वीको माटोढुङ्गा, खोलानाला, रूखपात, पशुपंक्षी सवैको मालिक भई राजकाज गरी भोगी, खाइ वस्ने मानवमा जेठोभैँ सावायेत्हाङहरू हुन्। अतः ती सावायेत्हाङहरू नै आठ आपुंगी राजा हुन् र यिनै आठराजा तथा सावायेत्हाङ वंशीको शाखासन्तानलाई नै सुसुलिलिमयाक्थुङहाङ औ तुत्तु तुम्याङ्हाङ जाति हुन्।

दोस्रा अध्यायमा माथि उल्लेख गरेको तइनाम्‌गेन्‌हाङमासमेत आठ जनालाई यिनै आठ राजा तथा सावायेत्हाङहरूले विहावारी गरी यो विशाल विश्वको माटोमाथि तथा पारूङ्तेम्वे फक्ताङलुङमा काखको माटोमाथि आफैआफ आपुंगी राजा भई राजकाज गरिखान लागे। सो देखेर सृष्टिकर्ता ईश्वर मालिक अव मात्र माटोमाथि माटोलाई सुहाउने मानव जाति भयो भनेर खुसीले गदगद हुँदै यो पृथ्वीको माटोलाई छोडेर देवलोक तथा साप्माकुमाङ तेम्वे सामसुरीत लिङसुरीत सम्धो हावाको आसनमाथि गई आराम गर्न लागे। त्यस युग त्यस वेलादेखि सृष्टिकर्ता ईश्वर गएको गए नै भए। फेरि यो पृथ्वी लोकमा फर्केर आएनन् भन्ने हामी किरातमध्ये सावायेत्हाङ तथा सुसुलिलिम याक्थुहाङ जातिको गौरवशाली कथा छ। माथिका सावायेत्हाङ वंशीको एक जेठो हाँगा सुसुलिलिम याक्थुहाङ औ तुत्तुतुम्याहाङ वर्तमान लिम्वु जाति एक हो, अहिले फक्ताङलुङ काखमा वस्ने प्राचीन आदिवासी हुन्,

अर्कोतिर माथिको चम्जीक मुन्धुमअनुसार थोसुसुहाम्फेवा र योसुलाहादोङ्ना त्यसरी छुटिँदा हामी ज्युँदै छुटेपछि फेरि कहिले पनि भेट हुन नपरोस् र हामी दुईको शाखासन्तानमा पछिवाट हामी जस्तै जानीजानी पातक विहावारी गरेछन् भने म सोधुङलेमुतेम्वेवाट वज्र ताङसासेरी भई झर्नेछु। तिमीले पाताल लोकवाट अग्नीज्वाला भएर तथा 'खामउलराङ' भई मारूङ, यस्तो सल्लाह वाचावन्धन गरी छुटे। किरात सावायेत्हाङ सुसुलिलिम वीचमा पातक विवाह गर्न हुँदैन। गरे वज्रले चिर्छ, पातक बोले भालुले कोर्छ, अथवा लुङधुङकाई चोक्मा

सेरीरे आचेत्, केसो?वा पाप्माले मायुरे आउक, प्रभावकारी गाथा निकै लोकप्रिय रहेको छ।

माथिका आठ राजा तथा सावायेत्हाङहरूले सृष्टिका सुरूवातदेखि नै यो पृथ्वीको माटोमाथि आफ्ना पाइला राखी आपुंगी राजकाजगरी खाई आएको अवस्थामा यो पृथ्वीको माटोमाथि आगो भन्ने चीज कतै कहिं पनि थिएन। आगो नहुँदा खानेकुरा तरूल, भ्याकुर काँचै खान्थे। त्यसैलाई मुन्धुम भाषावाट आन्छेन मुकुमसेमे होप्तेल्ले खेमाङवा सुमाङवा मेज्ये भन्दछौं। आगो नहुँदा खानेकुरा काँचै खाएकाले खानेकुराको विषले मातेर ती सावायेत्हाङहरूको मनस्थिति बिग्रन्दै जान लागे, सो देखेर आमा लाहादोङ्ना आएर आफ्ना छोराहरूलाई यसो भने हेर छोराहरू हो खानेकुरा काँचै खान हुँदैन। आगोमा पोलेर पकाएर खानुपर्छ भनेको आमाको कुरा अरूभाइले वास्तै गरेननन्। खाली कान्छा सेन्छेने सेनेहाङले मात्र खाने कुरा आगोमा पोली पकाइ खाएमा वेस होला भन्ने सम्भेर आमा यो पृथ्वीतलमा आगो नै छैन, कहाँवाट आगो ल्याएर पोली पकाइ खाने भनेर सोधे, उत्तरमा लाहादोङ्नाले भने कि तपाईहरूको पिता सोधुङलेप्मुतेम्वेमा वसेको छ, त्यहाँ गएर आगो मागी ल्याउ भने। सोधुङलेप्मुतेम्वेमा जाने वाटो र पिता थोसुसुहाम्फेवालाई चिन्दै चिन्दिन। यसकारण आमा नै अघि लागेर वाटो देखाउँदै लगी पिताजीलाई पनि चिनाई दिनु पर्‍यो भनेर विन्ती गरे।

यो कुरा सुनेर आमा लाहादोङ्नाले भने कि अघि तपाईको पिता र म छुटिादा आइन्दा कहिल्यै पनि भेट हुन नपरोस् भनेर वाचागरी छुटेका छौं, त्यसोहुँदा मैले जान हुँदैन भन्दा पनि ढिपी गरेको गरेकै गर्दा नगई नहिंडी छोड्दै छोडेन। आमा लाहादोङ्नाले यसरी आफ्ना छोरालाई कुरा सिकाएकी जान त गइदिउँला, सारै ढिपी गरिस्। तर, तपाईको पिताले कसले वाटो देखाउँदै ल्यायो र कोसँग आयौ भनी सोधेमा आमासँग आयौ भनेर नभन्नु। यसरी कुरा सिकाएर आमा अघिअघि र छोरा पछिपछि लागी जाँदाजाँदा कुनै समयमा आमाछोरा सोधुङलेप्मुतेम्वेमा पुगे। पुगेपछि केही फरकमा आफु वसेर छोरालाई यसरी परिचय गराउनु भयो। सवभन्दा उच्च अग्नीज्वालोको आसनमाथि वस्ने सोधुङलेप्मुहाङमाङ हुन्। अनि उनका मुनि वरिपरि वस्नेहरू सामकेलो केवावामाङहरू लगायत अरू देवता हुन्। उनीहरू मुनि एक्लै वस्ने तपाईहरूको पिता थोसुसुहाम्फेवा हुन्, उनका मुनि वरिपरि वस्नेहरू सुदुक्युखेदुक्युलगायत आठ जनाहरू हुन्।

अव तिमी आफ्ना पिता थोसुसुहाम्फेवाको साथमा जाउ र आगो मागेर लिएर आउ, तिमी आगो लिएर नआएसम्म म यहाँ नै पर्खेर वस्नेछु। यति भनेर आफ्ना कान्छा छोरा सेच्छेने सेनेहाङलाई आगो माग्न पठाएर आफू चाहीा सिस्नुको भ्याङमुनि लुकि छोरालाई पर्खिवसे। सेन्छेने सेनेहाङ आफ्ना पिता भएको ठाउँमा सरासर गई पहिले आफ्ना पिताको पाउमा शिर राखेर ढोगगरी दुईहात जाडी हे पिताज्यू हाम्रो पृथ्वीतलमा आगो नहुँदा आगो माग्न भनेर यसरी आएका हौं, कृपया आगो पाउँ। यसरी विन्ती गर्दा आफ्ना छोराको त्यस्तो विन्ती सुनेर सुहाम्फेवाको आत्मामा दया पलाई सोधुङलेप्मुहाङमाङसँग यसरी विन्ती चढाए कि तल पृथ्वीलोकमा आगो नहुँदा आगो माग्न भनेर मेरो कान्छा छोरा सेन्छेने सेनेहाङ आएकाले विन्ती चढाएको हुँ। कृपया प्रभुवाट आगो वक्सेमा वेश हुने थियो। सुहाम्फेवाको त्यस्तो विन्ती सुनेपछि सोधुङलेप्मुहाङवाट यसरी आदेश भयो कि तपाईले निवेदन चढाएको कुरा मनासिवै छ तर कुन आगो दिए वेस होला। वज्र आगो दिउँ भने मानव जातिले प्रयोग गर्नै सक्तैन साथै पृथ्वीलाई अहिले नै खरानी पारिदिन्छ। मिवाकुनाम मी दिउँ भने त्यसले पोली पकाई खान हुँदैन, ताप्न मात्र हुन्छ। त्यसैले मेन्छाम याप्मी मी दिए वेश होला। यसो भनेपछि सावायेत्हाङ फोक्वा मी दिने निर्णय गरे, त्यसैले किरात सावायेत्हाङ आगो तीन प्रकारको हुन्छ। ती आगोहरूमा जेठो आगो मिवाकुनाम मी हो, यो आगो मिवा कुनामतेम्वेमा हुन्छ। माइलो आगो मुन्दाङसेरी मी हो, यो आगो सोधुङलेप्मुतेम्वेमा छ, कान्छो आगो सावायेत्हाङ फोक्वा मी हो, यो आगो यही पृथ्वीतलमा अर्थात् हामी मानव जातिको पासमा आजतक छँदैछ।

यो सावायेत्हाङ 'मी' त्यसरी दिंदा भकिउँलोको काठ 'इसेवासिङ' दिंदै यसरी सिकाए कि यो दुईवटा काठ वेसरी केही नगरी घोट्नु। त्यसरी घोटिादा तातिएर त्यसबाट आगो पैदा हुनेछ, त्यसरी आगो पैदा

भई धेरै हुर्केर गई आगो निभाउन नसकेमा आगो मार्ने पानी लट्ठी 'वारे वादेनयुक्मा' ले आगो निभाउनु भनि वदेनयुक्मा दिएर साथै आगोको डाहा मार्ने मन्त्रसमेत सिकाए। यो वदेनयुक्मा भनेको एउटा फूल जस्तै हो। यसको हाँगा हुँदैन, पातमात्र हुन्छ यसको उचाइ चारफुटको हुन्छ र फूल्दा सेतो फूल्छ वनजंगलमा हुन्छ।

यो आगोको सम्वन्धमा फेदाङमाहरू के भन्छन् भने सेतो गाई र कालो गाई जुधेर गाईको सिङवाट आगो उत्पत्ति भयो भनी राखेका छन्। अर्थ के अरे भने सेतो गाई भनेको दलसिं ढुङ्गा र कालो गाई भनेको चकमक अरे। तर त्यसवेला कसले चकमक कमाएर यस्ता कुरा फेदाङमानै जान्दछन्। अब यो सुहाम्फेबाले त्यसरी आगो उपलब्ध गराई दिएवाट कैयौं वर्षपछिवाट बावु छोरा भेट भएकाले भलाकुसारी वार्तचित गरे। त्यसरी वार्तचित गर्दागर्दैमा तलपृथ्वी तलमा मेरा छोराहरू सवै कुसलै छौं। अनि तपाईको आमा कस्ती भएकी छन् र अहिले कहाँ छन् भनेर कुराआमाको पुग्दा अघि आमाले नभन्नु भनेको भएपनि आफूलाई जन्म दिने पितालाई ढाँट्न मिलेन। त्यसकारण उ त्यो सिस्नुको झ्याङमा लुकेर वसेकी छन् भनेर सोझै भनिदिए। त्यसो भनि दिंदा पहिले आफ्ना छोरालाई आशीर्वाद दिंदै उनका देश पृथ्वी तलमा पठाइ दिए र आफ्ना छोराले देखाएको त्यो सिस्नुको झ्याङमा लाहादोङ्ना गई फेरि भेट भए। अनि फेरि उही छोराछोरी पाउन थाले। तर, सत्यवाचा भंगगरी भेटेकाले मानव जाति भएनन् खाली भालेमुंग्रो, अटेर्न, भ्यागुता, गंगटा, सिस्ने किरा इत्यादि किटपतंग मात्र भए। सत्यवाचा कहिले भंग नगर्नु गरेमा पछि शाखासन्तानमा सापे छोराछोरी जन्मन्छ भन्ने किवदन्ती रहेको आदिको मुन्धुम छ।

थोसुसुहाम्फेवा र योसुलाहादोङ्ना त्यसरी सत्यवाचा भंगगरी भेटेकाले लाहादोङ्ना पृथ्वीलोकमा फर्कन र सुहाम्फेबाले सोधुङलेप्मुतेम्बेमा जान पाएन र त्यही सिस्नुको झाँगमा सिस्नेकिरा भई वस्नु पऱ्यो। त्यसवेलाको युगमा यो पृथ्वी तलमा आगो नहुँदा सावायेत्हाङको फोक्वावा सेन्छेनेसेनेहाङले सोधुङलेप्मुहाङतेम्वेवाट आगो ल्याई पृथ्वीवासी मानवजातिको सवै कल्याण गरे भन्ने आगोसम्वन्धी मुन्धुम छ। ती सावायेत्हाङ तथा आठ आपुंगी



राजाहरूले यही पारूङतेम्वे फक्ताङलुङमा शिवपुरीकाखको माटोमाथि आपुंगी राजकाज गरी धेरैधेरै पुस्ता रहादा वस्दा तिनीहरूको कैंयौ पुस्तापछिवाट उनीहरूको शाखासन्तान ढुङ्गा रोडाझैं गनेर गनी नसक्ने गरी असंख्य मात्रामा फैलिएर गए। त्यसरी फैलिएर जाँदा परमात्मा ईश्वरको खेल हो या त कुनै आफ्ना भोगपालोले हो यही वंशको शाखामा सवै कुराकानी मिल्ने पछि भने फेरि तेही वंशको शाखामा कुराकानी नमिल्ने, एउटाले आगोलाई मी भन्यो भने दोस्राले मे यसरीनै कसैले मि, मे, मिखा, मो, यसरी वोली भाषा रीति र रिवाज मिल्न छोड्यो। अथवा एउटाले वोलेको बोली र भाषा अर्कोले बोल्न जानेन, औ वुझ्न सकेन। यसरी छरपस्ट हुन लागे, यो कुरा हुनसक्छ कि आइन्दा पनि फेदाङमाहरूको फेदाङमा मुन्धुम र विद्वानहरूको इतिहास लेख नमिली फरक फरक भएको पाइन्छ।

यतातिर पान्थरे भाषा, फेदापे भाषा, छथरे भाषा पनि मिल्दैन। माथि लेखिएअनुसार यसरी बोली र भाषा अलग-अलग हुन जाँदा अथवा वुझ्न नसक्दा जतिजतिको वोली र भाषा रिती र रिवाज मिले त्यति त्यतिको एकजात, एकवंश, एक समुहको थर थकि भए। यही पारूङ्तेम्वे फक्ताङलुङको काखवाट छुटेर कोहि पूर्व, कोही पश्चिम, कोही उत्तर, कोही दक्षिण, चार दिशामा छुटेर गई जुन दिशामा गए, त्यही दिशाका वंशीको राजा भई यो विशाल पृथ्वीको माटोलाई ढाकेर बसेका हुन्।

चारदिशा छुटेर जानेहरूको कैंयौ पुस्तापछिवाट उनीहरूको शाखासन्तान वढेर गई त्यसरी नै छुट्टिई अघिको आवासस्थल यही पारूङतेम्वे काखको भूमिमा फर्केर आउँदा पूर्ववाट फर्केर आउनेलाई ताङसाथावा अथवा त्यस स्थानका वंशी भने र पश्चिमबाट फर्केर आउनेलाई खाम्जिरी खाम्वोङवा जाति भने र उत्तरवाट फर्केर आउनेलाई लासावंशी भने र दक्षिणवाट फर्केर आउनेलाई काँशीवंशी भनी दिशाको वंशी कहलाएको पाइन्छ। जुनदिशाको वंशी कहलाए पनि यही पारूङतेम्वेको काखमा सृष्टि भएको हामी मानवजाति एकै हौं। माथि लेखिए मुताविक वोली र भाषा अलग छुट्टिन गएकाले भाषा र लिपि, धर्म र नियम आ-आफै अप्नाइ अलग भएको मात्र हो। हामी विश्वको मानवजाति छुट्टिनुको

मुख्य कारण वोली र भाषा नमिलेको कारणले यसरी छुटेका हौं भन्ने वैज्ञानिकमत रहेको छ।

विश्व मानव जाति सृष्टि भएको र सो सृष्टि भएको ठाउँहरू माथि केही लेखियो, त्यसमा अरूअरू इतिहासमा अर्के ठाउँ र ठाउँका नामहरू लेखेको पाइन्छ, तर यो मुन्धुम त्यस इतिहासहरू र फेदाङमा पट्टिको मुन्धुम होइन। यो त सावायेत्हाङ मुन्धुम हुन तसर्थ थोसुसुहाम्फेबाको भागमा परेको सुदुक्यु खेदुक्यु फेदाङमासमेत नौ जनाहरू पनि देव लोकको देवपुत्र नभइ यो पृथ्वीको मानव जाति नै हुँदा सावायेत्हाङ वंशीहरूको कैयौं धेरै पुस्तापछि यो पृथ्वीकै माटोमाथि त्यसको शक्ति मुन्धुम यस प्रकार छ। सावायेत्हाङ वंशीको पालामा भएको साम्माङहरू हामी मानव सृष्टि हुनुभन्दा अगाडिवाटै सूर्यवाट सोघा साम्माङ भएता पनि मानव जातिले मान्ने र कुनै देवी देवरालीको पूजा आराधना गर्ने प्रथा नै थिएन। अर्कोतिर भएको फेदाङमा साम्वाहरू पनि सोधुङलेप्मुहाङतेम्वेमानै वसेका थिए, यो पृथ्वीको माटोमाथि आएकै थिएनन्। खाली यति मात्र थियो कि मुख्य अन्नको विउविजन ल्याउने देवता नावाराफेयङ्हेहाङ, तङ्हाङवा, पेन्हाङवा यी तीनवटा देवता र कमाई खेती गर्ने सावायेत्हाङहरूको छोरी चेली सिवेरा एकथुका सिवेरा यावुङ्केक्ना यिनीहरू मात्र थिए। यिनै माङहरूलाई मात्र चेसोक तथा नुवाङ्गी चढाउँथे। चेसोक चढाउने सावायेत्हाङ वंशभित्रमा जो बुढापाका थिए, तिनैलाई पूरोहित माने। उनको पद्वी तथा दर्जा ताप्मुरा फेदाङमा राखे। त्यो तापमुरा फेदाङमाले अन्नवालि पाकेपछि आफूले खानुभन्दा अगावै चोखो मिठो पारेर वेलैमाथिका देवतालाई चढाएर मात्र आफूले खान्थे। माङ र साम्माङ भनेका एउटै होइनन्, अलग अलग हुन्, कसरी भने साम्माङहरू घाम मरी सोघा हुँदा साम्माङ भएको र माङ भनेको सृष्टि कर्ता ईश्वर हुन।

तापमुरा फेदाङमाले सावा येत्हाङ गाउँमा सवैको चेसोक गरिदिन्थ्यो र उनी कहिल्यै पनि फुर्सत पाउँदैनथे, पछि पाको भएर काम गर्न नसक्ने स्थितिमा पुगिसकेको हुँदा उनले एक दिन सवै सावायेत्हाङहरूलाई भेला गरेर यसरी अर्ती उपदेश दिन लागे कि हेर सावायेत्हाङ दाजुभाइहरू



हो अव म पाको भएको हुँदा काम गर्न सक्तिन। तसर्थ अव के गर्नु भने सुदुक्यु खेदुक्यु फेदाङमा, साम्वा येवाहरू सोधुङलेप्मुतेम्वेमा वसेका छन्। तागेरा निङवाभूमाङको ध्यान गरेमा माङ खुशी हुनुभई सोधुङलेप्मुतेम्वेवाट फेदाङमा पठाई दिनेछन्। अव त्यस्ता ताप्मुरा फेदाङमाको अर्तीलाई सत्य मानी ध्यान गर्दा निङवाभूमाङले पहिले सोधुङलेप्मुतेम्वेवाट सुदुक्यु खेदुक्यु फेदाङमालाई पठाई दिए। त्यसरी पठाइदिँदा सावायेत्हाङ गाउँमा आई म कुनठाउँ कहाँ वसेर तपाईहरूको उपकार गर्ने हो भनी वस्ने ठाउँ माग्दा सावायेत्हाङहरूले भनेकी जहाँ अम्लिसो फूङवात चिण्डो छ तथा सेल्लोवुङ माङयाम्वुङ असोफूङवात् त्यहाँ वस्नु भनी वस्ने ठाउँ खटाई दिए। पृथ्वीको माटोलाई भने दिएको मुन्धुम खोजी गर्दा पाइन्दैन, उनी आएर देवीदेवतामा चोखो धुपधुँवार गर्न वाहेक अरू केही गरेनन्। अर्कोखेप ध्यानगरी माग्दा सिंदुई फेक्वाई फेदाङमालाई पठाई दिए। उनी आएर वस्ने ठाउँ खटाइ माग्दा उही अम्लिसो फच्यालाई नै दिए, पृथ्वीको माटोलाई दिएनन्। अनि उनले खटाइ दिएको स्थानमा बसेर चेसोक चढाउने र विवाहमा लगन गर्न अनी केही पूजाआजा गर्ने काम मात्र गरे अरू गरेन। अव फेरि त्यसरी नै अर्को मागेमा साप्मुन्धुम येप्मुन्धुम साम्वालाई पठाई दिए। ऊ पनि आएर वस्ने ठाउँ खटाइ माग्दा जहाँ एउटा लिङगो छ त्यहाँ बस्नु भनेकाले उनका साथी आवागो साङलाङगो भएर तिनराते तङसिङ तक्मा र दुःख विमार हुँदा उपकार गर्ने चम्जीक मुन्धुमका आख्यान ल्याई इतिहासका कुरा ल्याउने काम गरे। त्यसपछि अर्को माग गर्दा सिभाक्यामी येवालाई पठाई दिए। उनी आएर म कहाँ वस्ने हो भनी वस्ने ठाउँ माग्दा जहाँ जोर लिङ्गो तथा याग्राङ्सीङ साम्पङ्गे किरिङपम्मा लिपङ्गे काराङपम्मा त्यहाँ वस्नु भनी ठाउँ खटाइ दिए।

त्यहाँ वस्ने सोघा सुगुत बाटो छेक्ने, थुन्ने आँखी डाही हटाउने काम गरे। अरू पूजाआजा काम गर्न हुँदैन किनभने उनको गुरू नै सिरे हुँदा सिरेले खाइ दिन्छ र अरू देवदेवताले पाउँदैनन् र पूजाआजा गर्न लाउनु हुँदैन। साथै उनको साथी आवागो साङलाङगोवा लगायत त्यही लिङ्गोमा बसेर येवालाई सघाउनु पऱ्यो। त्यसपछि अर्को माग गर्दा सिभाकयामि वाहेक नेत्तिफूङवा येवालाई पठाइदिए। उनी पनि उही येवा स्थानमै

वस्नु भनी वस्ने स्थान तोकिदिए। उनको काम कुनै सोघासुगुत आँखी डाही वा वाटो छेकथुन गर्ने होइन। खाली यो फूल आँखी डाही फूल हो, यो फूल सिहोसिन्दु फूल हो, यो मानवजातिको फूल हो भनी एकसय आठवटा फूलको नाम ल्याई फूल मात्र छुट्टाइदिने उनको काम हो त्यसपछि अर्को माग गर्दा अड्सीलाई पठाइदिए। उनी आएर वस्ने ठाउँ माग्दा जहाँ मठ, माङहिम छ, त्यहाँ वस्नु भनी ठाउँ खटाई दिए। त्यस ठाउँमा बस्ने र उनले ग्रहदशा चलेमा ग्रहदशा सार्ने तथा झाँक्रीको काम गर्ने अरू पूजाआजा नगर्ने यसरी आ-आफ्ना अभिभाराको काम लिएर सावायेत्हाङ गाउँमा आए।

बावु थोसुसुहाम्फेवाको भागमा परेको सुदुक्कयु खेदुक्यु फेदाङमासमेत आठ जनाहरू केही दिनसम्म देवलोकमा बसे तापनि आखिरमा देववंशी नभई पृथ्वीवासी मानव जाति हुँदा देवलोकमा वस्न पाएनन् र सावायेत्हाङवंशीको धेरै पुस्तापछि सावायेत्हाङहरूको नाम तुत्तुतुम्याहाङ नामाकरण भएपछि तुम्याहाङले फेदाङमा माग गर्दा यो सावायेत्हाङ गाउँमै झरे। त्यसरी झरेपछि सावायेत्हाङ वंशीको शाखासन्तानमा जहाँ जे पऱ्यो अथवा दुःख बिमार हुँदा बिमारी उपकारको लागि जजमान गरी खान लागे। जजमानगरी खाँदैमा एकदिन चिन्ता नवसी नहुने भन्ने सिवाखालोम्मा गर्दा त्यसो भए लौ चिन्ता वसन त भनेर चिन्ता वसे। आफ्ना जामा, पगरी, घण्टी, माला, विजुवा पोसाक लाएर चिन्ता वसी तमासा देखाउनलाई वेस्सरी कम्प आउने गुरू डाके, तर गुरू आएन र कामेन। के कारण परेर कम्प आएन भनी विचार गर्दा अघि माङमाङवा सिरे केथुम्मा सिभाक्या मीफोक्वामा वावु आमा दुवै पट्टीवाट मेरा भाग होइन भनि नलिादा तागेरा माङलक्लुम्मा गई तागेरा निङवाभू येमा भई वसे भनी माथि लेखीएको छ। अतः माला लगाई गुरू नल्याए कम्प नआउने विचार पाएर तागेरामाङ भएकोमा माग्न येवाहरू गई माग्दा तागेरामाङले भने कि हेर येवाहरू हो मागीहाल्यौ, लौन त लैजाउ तर आठदिन नविति पुऱ्याई दिनु। आठदिन नाघेमा तपाईहरूलाई ठूलो धोका दिने छ भनेर दिई पठाए। अव त्यसरी सिरेश्रे गुरू पाएकाले खुशीले गदगद हुँदै ल्याए र त्यस गुरूलाई अगाडि



लगाएर नाच्न लागेको त लाटो सिरे गुरू चढेर आइ नाचेको नाचेकै भए। आठदिन वितेको थाहा नै भएन।

जव नौ दिन पुगे तवमात्र लाटोसिरेश्रे गुरूले छोडे खान न सुत्ने आठ दिनको भोकले माङमाङवा सिरे केथुम्मालाई सताए। अव के खाने भन्दा खानेकुरा छैन। त्यसो हुँदा सावायेत्हाङ गाउँमा पसेर सावायेत्हाङहरूको नानी कोक्रोमा सुताई राखेकोहरू माङमाङवासी सिरे केथुम्मा सिभाक्यामि फोक्वामाले विराली देव भएर चोरी खाए। सो कुरा सावायेत्हाङहरू सव उठेर आई हाम्रो उपकार गरिदेउ भनेर सोधुङलेप्मुतेम्वेबाट मागी ल्याइ राखेको त हाम्रो नानीहरू खाइदेउ भनेको सुन्यौ। त्यस्ता मानिस खाने वोक्सा वोक्सी फेदाङमा, साम्वा, येवा कुनैपनि यो हाम्रो सावायेत्हाङ गाउँमा वस्न पाउने छैनन्। जुनवाटो आयौ त्यही वाटो लिएर तपाईहरूको देश कहाँ छ उही देशमा फर्केर जाउ भनी देश निकाला गरी खेदुवा लगाई दिए। त्यसरी देश निकाला भई खेदुवा हुँदा भएन, अव पुऱ्याइ राखौं भनेर तागेरामाङ भएकोमा पुऱ्याउन लाग्दा यसो अनुहारमा हेरेर तागेरामाङले भनेकि आठ दिनमा पुऱ्याई दिनु भनेको पुऱ्याएनौ, आज नौ दिन पुगी सक्यो। यसले मानिस खाएछ, नंग्रामा र मुखमा मानिसको खुनैखुन छ। त्यस्तो मानिस खाने प्रथम यो देवलोकमा वस्न पाउँदैन। जहाँ लानु पर्छ उतै लैजाउ भने, ती फेदाङमा, साम्वा, येवा सवैले भनेकि यो येमा फेरि फिरायेर लगे मानिस खान्छ र हामीलाई वस्नै दिँदैनन्। तसर्थ हाम्रो थात वासै उठिवास हुने भयो, कहाँ गएर वस्ने हो, अव हामी पनि यही नै वस्छौं भनेर विन्ती गरे। तिनीहरूको त्यस्तो विन्ती सुनेपछि तागेरा निङवाभूमाङको आत्मामा दया पलाई तपाई मानव जातिले यो देवलोकमा कदाचित वस्न पाउनेछैनौं, तपाईहरूले के गर्नु भने यो येमासहित तपाईहरूको पिता बसेको देश सोधुङलेप्मुहाङतेम्बेमा येमा नाच्ने खाला वर याग्राङसिङसहित छ त्यहाँ पुऱ्याई राख्नु। उनी त्यस खलामा आफै नाचिघुमी वस्नेछ। कुनै समय तपाईहरूलाई सिरेगुरू चाहिएमा यो येमालाई वोलाइ लानु भन्दा अगाडि नै जुन ठाउँमा चिन्ता बस्ने हो त्यस ठाउँमा पहिले याग्राङसिङ रोप्नु र त्यस याग्राङसिङमा या?लुम्फु झुण्ड्याउनु। त्यस या?लुम्फुमा एकमाना चामल, एक वोत्तल रक्सी राखी, भेटी एक

रूपैयाँ हाल्नु अनि भुनी सुँगुर मारेर फाक्होक राख्नु, यसरी वाचा बन्धन गर्नु कि तपाईको भोक तिर्खा नलाग्नेगरी तपाईको खाने पिउने सवथोक राखिदिएका छौं सो राखी दिएको खानेकुरा खाएर सन्तोष मानी हामीलाई सिरेगुरू दिनु, अघि जस्तो सावायेत्हाङ गाउँमा विरोलीदेव भएर चोरी खान नजानु भनी तीन त्याली तीन वाचा गर्नु।

त्यसो गर्दा उनी चोरी खान नगई तपाईहरूलाई सिरेगुरू दिन्छ र तपाईहरूले गरे भनेको शुभलाभ हुन्छ र सावायेत्हाङ वंशीहरू खुसी हुन्छन् र तपाईहरूको थातवास फेरि अघि जस्तै थामिदिन्छन् र बस्न पाउनेछौं। यसरी तागेरा निङवाभूमाङले अर्ती उपदेश दिएर पठाए। तागेरामाङले दिएको उपदेश मुताविक काम गर्दा सावायेत्हाङ वंशीहरूको आत्मामा दया पलाई फेरि पनि आ–आफ्ना स्थानमा बस्ने अनुमति दिए। त्यसरी आफ्ना जुन बस्ने स्थान खटाई दिएको थियो सोही स्थानमा वसे। तर, ती फेदाङमा, साम्वा, येवा जो जो थिए ती मूलमूलहरू मरेर अल्पिए की तिनीहरूको शाखासन्तान पनि थिए। सावायेत्हाङहरूको भने शाखासन्तान र पुस्ता पनि थिए। सावायेत्हाङहरूको शाखासन्तान र पुस्तावारी वंशावली र अनेक चम्जीक मुन्धुम हुन्। ती फेदाङमा, साम्वा सहितको शाखासन्तान र पुस्तावारी वंशावली कतै देखिादैन। यसवारे फेदाङमाको फेदाङमा र साम्वाको साम्वाकै र येवाको येवाकै र अङ्सीको अङ्सीकै र आवागोको आवागोकै आ–आफ्ना पुर्खाको नाम र पुस्तावारी वंशावली खोजेकै हुनुपर्छ। जव आफ्ना पूर्खाको पुस्तावारी वंशावली नै ल्याउन सक्तैन भने कसरी फेदाङमा, साम्वा, यासन्तान हौं, हामीसँग चम्जीक मुन्धुम छ भनेर धमास पिट्ने हो। फेदाङमां यकलाई फेमेश्वर अथवा फेम्वा खोला भनेर यायकलाई यासक भनेर साम्वा यकलाई साम्वायक नाम लाग्न गएको भन्ने शंका र अर्कोतिर आठ राईमा एउटा पोमो केच्छाङ थियो र छिन्ताङमा सेन्दायगलुंसाम्वा थिए भनियो। तर, त्यसले पनि उनीहरूको पुर्खाको नाम र वंशावली पुस्ता भने ल्याउन सकेन, तर जेहोस् आफ्ना पुर्खाको वंशावली आफैले सुधार्नु छ भने फेदाङमा सहितले पनि आफ्ना वंशावली लेखेरै छोड्नु पर्नेछ।

□□□



# केसामी र नाम्सामी मुन्धुम

माथि पहिलो र दोस्रो अध्यायमा हामी मानव जाति सृष्टिको केही मुन्धुम लेखिएको छ। ती मुन्धुम त्यसैबाट यो पनि एउटा मानव सृष्टिकै एक चोइटा हो। तर, यसबाट हामी मानव सृष्टि भएको होइन, आँखी डाहीको सिर्जना मुन्धुमसम्म मात्र हो, अर्थात् आमाले नुन बारेको मुन्धुम हुन्। अतः माथि दोस्रो अध्यायमा सोधुङलेप्मुहाङमाङको छोरी इप्नासो सरङहाङमा थिइन् भनेर लेखिएको छ। अर्कोतिर छोरामा जेठो यो सुगेनचगेहाङ दक्षिण दिशामा गएर तिनको अर्को नाम युक्पुहाङ पनि हो भनेर लेखिसकेकै हुँदा त्यसबाट बुझ्नु भएकै होला। एकदिन आफ्ना भाई युक्पुहाङको घरमा सरङहाङमा पाहुना जानु भयो। आफ्ना दिदी पाहुना आएकाले मेजमान दिनलाई युक्पुहाङ बनमा गई एउटा मृग मारेर ल्याई आफू चाहिंदो राखी बाँकी शिकार छरछिमेकीलाई बिलो बाँडिदिन आफू जान नभ्याउँदा दिदी इप्नासो सरङहाङमालाई पठाए। सरङहाङमा छिमकीको घर जाँदा छिमेकीहरूले भनेकी तपाईको त माइती शिकारी हुँदा हामीले पनि बिलो पायौं धन्यवाद भने। सरङहाङमाले भनेकी कहाँको युक्पुहाङले मारेको हो र म आउँदा बाटोमा मेरासाथिको थानाडोरी बाटेर बाधी ल्याएबाट मारेको पो हो त भनेर आफ्ना भाइको बदनाम गरे। त्यो झस कुरा होहल्ला हुँदैहुँदै अन्त्यमा युक्पुहाङको कानमा पनि थुरिन पुग्यो। त्यसबेला त केही पनि भनेन, तर मनमा भने सोचिराखेकै थियो। त्यस्तैमा शिकारको कुरा चल्दै जाँदा एकदिन युक्पुहाङले दिदी सरङहाङमालाई पेच हाने कि आइमाइहरू शिकारमा गए भने हतियार केही छैन भनेर नटेरी छेउमै आइ हेरेर बस्छन्। आज दिदी शिकारमा

जानु त्यसरी उभिरहेको वेला दिदीले साथीको थानाडोरी वाटेर बाँधी ल्याउ अनि म मार्नेछु भनेर फुरूक्क पारी सर्काई दिए। सरङ्हाङमाको पालो हो ठानेर शिकारमा गइन् यहाँनेर चर्छन् यहाँनेर पानी खान्छन् भन्ने उनलाई केही थाहा नभएकोले दिनभर बनजंगल घुमे शिकारको नाममा एउटा फिस्टोसम्म पनि भेटेनन् र तिर्खाले भने हरहर हुन पुगे। पानी खाने कतैपनि पानी भेटेनन्। अन्त्यमा एउटा ढुङ्गाको डोवमा एक आजुली जति दुई ठाउँ पानी देखे। तर त्यो पानी, पानी नभई एकापट्टीको डोवमा मानिसले र दोस्रो पट्टिको डोवमा बाघले पिसाप गरेको पिसाव थियो। तिर्खाले सताएकी हुँदा पानी र पिसापको वास्तै नराखी आफ्नो तिर्खाको समस्या हल गरिन्। वेला वितेकोले वेगर शिकार घरतर्फ खाली फिरेर आइन्। यता युक्पुहाङले के गरे भने सरङहाङमाको साडी अचानोमा राखेर मसिनो पिठो हुने गरी टुक्राटुक्रा वनाएर त्यसको ढिंडो ओराली राखी दिए। सरङहाङमा भोकले सताएर आइन्। भात भान्साको कुरा गरे युक्पुहाङले त्यहाँ ढिडो पकाइ राखी दिएकोछु भने भोकको झोकमा अन्न र थाङ्नाको वास्तै नराखी खाएर भोक मेटाइन। दिनभर जंगल घुमेकीले थकाई लागेर सुत्नलाई सरङहाङमाले आफ्ना साडीको थान खोजिन्। त्यसबेला युक्पुहाङले भनेकी केको साडीको थान खोजेकी अघि ढिडो खाईहालिस्, त्यसो भन्दा सरङहाङमाले भनिन् तपाईले किन त्यस्तो नचाहिंदो काम गरेको भन्दा युक्पुहाङको पालो बाटोमा आउँदा मेरो साडीको थानाले सिकार बाँधी ल्याएका हो भनेको चाहिदो कुरा हो त। यसरी ठाकठुक बाझेर युक्पुहाङ आफ्नै घर बसे र सरङहाङमा आफ्नै घर फर्के। तर के भयो भने त्यही ढुङ्गाको पिसाव खाएकै कारण सरङहामालाई गर्भ रहन गयो। त्यसलाई हाम्रो भाषावाट सिङदुङपक्वा लुङदुङपक्वा भन्दछौं जँव महिना पूरा भयो, तब सरङहाङमाले बाघ र मानिस जुम्ल्याहा छोरा पाइन्। त्यसबेलाको नियमअनुसार जेठा बाघको नाम केसामी र कान्छा मानिसको नाम नाम्सामी राखे। त्यसरी नाम नाम्सामी राखेकोले पनि हामी सूर्यको छोरा सूर्यवंशी हौं भनिएको हो।

केसामी र नाम्सामी वालक छउञ्जेलसम्म त मिलेरै खान्थे, सुत्थे, खेल्थे, तर, जतिजति उमेर पुग्दै गए उती उती आँखी र डाही सिर्जना हुँदै



गयो। त्यस्तैमा एकदिन दाजु र भाइ वनमा गएर एउटा मृग देखेर एकसाथ दुवैले छेकेर मारे। मारेपछि मानिस भाइ भन्ने घरमा लगेर पोली पकाइ आमा र हामी सवै भएर खाउँ, दाजु बाघ भन्ने यो मृग म एक्लैले काँचै खान्छु। खाएर अघाईन भनें तालाई पनि खानेछु भनेर दाह्रा किटे। अब दाजु बाघले त्यसरी दाह्रा किट्दा भाइ मानिस डराएर त्यहाँवाट भागेर आइ आमा सरङहाङमालाई भनेकी आमा आज वनमा गएर मृग मारी घरमा लैजाउँ भन्दा दाजुले भनेकी यो मृग काँचै खान्छु अघाइन भने तालाई पनि खान्छु भन्यो। त्यसो हुनाले म दाजुसँग लडाई नगरी छोड्दिन, भरे दाजु आई भाई कता गयो भनेर सोध्यो भने म पूर्व दिशामा गएँ भने पश्चिम गयो, पश्चिम गएँ भने पूर्व, उत्तर गएँ भने दक्षिण, दक्षिण गएँ भने उत्तर गयो भनेर देखाउनु। आमालाई यति भनेर नाम्सामी आफ्नो वाजे सोधुङलेप्मुहाङ भएको सोधुङलेप्मुतेम्वेमा गए। त्यहाँ गएर सोधुङलेप्मुहाङको पाउमा परेर हे सोधुङलेप्मुहाङ दाजु बाघले मलाई मारेर खाने भएकाले दाजु बाघसँग लडाई गर्ने सिद्धीशक्ति, हतियार पाउँ भनेर विन्ती गरे।

नाम्सामीको त्यस्तो विन्ती सुनेपछि सोधुङलेप्मुहाङको आत्मामा दया जागेर आयो र यसो भने कि हे नाम्सामी तिमी आफ्नो देशमा फर्केर जाउ र अघि किरातले शिवपुरीमा औतार फेर्नुभयो, त्यस ठाउँमा किरात धनु जम्मा 'नौ' वाण छन्, ती सबै धनु वाण लानु। त्यसमध्ये आठवाण साधारण छ, एउटा एक पाखे माहाकाल वाण छ। पहिले अरू आठ वाण चढाउनु अन्त्यमा आवश्यक परेमा महांकाल वाण चलाउनु तपाईको काम अवस्य पुरा हुनेछ। यति भनेर आशीर्वाद दिंदै विदा गरे। सोधुङलेप्मुहाङवाट त्यस्तो अर्ती उपदेश पाएर किरात औतार फेरेको ठाउँमा गई किरात धनुबाण ल्याएपछि अब लडाँई गर्दा कस्को हारजित हुने नहुने भनी चिन्नको लागि देवीदेवता साक्षी राखी दियो–कलस राख्नलाई फूल कहाँ पाइन्छ भनी सुक्ष्म विचार गर्दा केही फूलको बास्ना आएको पाए। फूलको बास्ना आए भनेको याक्थुङ भाषावाट 'फूङ फूङ नामे' भन्नाले त्यस ठाउँको नामनै फूङनाम भन्दछन्। फूलको बास्ना आयो तसर्थ यहाँ फूल पाइन्दो रहेछ भनी वाघको र मानव फूल छाने।

फूल छाने भनेकोले हाम्रो भाषावाट '**फूङसेगे**' भनेकोले पछि त्यस गाउँको नामनै फूङसेग भनी आज प्रख्यात छ। त्यसपछि बाघको फूल अन्दङफूङ र नाम्सामीको फूल सेकमारी फूल छानी सकेपछि एउटा चोखो ठाउँ छानेर देवीदेवता पुकारी देवताको नाममा दियोकलस माङसारी राखे। त्यसरी माङसारी राखे भनेकोले त्यस गाउँको नाम नै 'माङसारी' हुन गयो। अतःफूङनाम, फूङसेंग, माङसारी यी तीनैवटा नामको गाउँहरू आठराई थुम भित्र र पान्थरमा पनि छ। त्यसो हुनाले अरूण पूर्व, मेची पश्चिम तराई उत्तरमा भोट, दक्षिण सीमाना यति चार सीमा भित्रको लिम्बुवान प्रान्तका गाउँको नामहरू लिम्बु भाषाबाट मात्र राखेको पाइन्छ। तर, पछि आर्य भाषाले थिचोमिचो गर्दा हाङयुक्ना भनेकोलाई ह्वाकू भन्न लागे, यसरी त्रमस अप्रभंश हुँदै गएको हो।

केसामी नाम्सामी फूल जम्मागरी माङसारी राखेपछि त्यसठाउँमा आमा इप्नासो सरङ्हाङमालाई माङसारी हेर्ने राखी यसरी अर्थ्याए। दाजु बाघ केसामीले मलाई खाइ मार्छ भने यो सेक्मरी कलसको फूल आफैं ओइलिएर मर्नेछ। म भाइ नाम्सामीले जिती दाजु बाघलाई मारो भने यो वावरी फूल आफै ओइलिएर मर्नेछ। त्यसो हुनाले यसको हारजित भयो भन्ने कुरा यही दियोकलसवाटै थाहा पाउनेछौ। यति भनेर दाजु बाघ आई भाइ कता गयो भनी सोधेमा त्यो सिमलको टुप्पा नौ तला माथि वसेको छ त्यहाँ जानु भनी देखाइ दिनु, त्यस ठाउँमा दाजु र भाइको घोर संग्राम हुनेछ। यति भनेर भाइ नाम्सामी आठ तले सिमलको टुप्पा नौतलामाथि चढेर धनुबाण लिई लडाँाई गर्न तयारी भई बसे। आजभोलि आठ तले सिमल भएको गाउँलाई हाल अर्चले भन्दछन्। त्यो गाउँ पनि आठराई थुमभित्रै पर्दछ, दाजु बाघ आई आमालाई सोधे भाई नाम्सामीले जसो भनेको थियो त्यसरी नै सिधा बताइ दिए। त्यसरी बताइ दिंदा त्यसतर्फ ङार्र ङुर्र गर्दै गर्जेर गई त्यहाँ पुगेर हेर्दा आठ तला माथि नौ तलामा धनुवाण लिएर बसेको देखी रिसले चुर भएर आज बल्ल फेला परिस् देखा जाला भनेर धमासा देखायो। भाईको पालो देखौंला तेरो पावर भनेर उत्तर दिए। त्यस्तो उत्तर दिँदा रिसले उफ्रेर एक तलामाथि चढे! एक वाण हाने भेटेन, अघि उनायुग उनादिनमा दाजु र भाइको



आँखि र डाही तिङदिङ नाहेन सिर्जना भएको हो भन्ने हामी किरात सावायेत्हाङ सुसुलिलिम याक्थुङहाङ चम्जीक मुन्धुम छ। फेरि उफ्रेर दुई तलामाथि चढे दुई वाण हाने लागेन, यसरी नै उफ्रीदै गए, वाण हान्दै लगे, तर भेटेन।

क्रमसः आठ तला चढी सकेपछि माथि पुग्न एकतला बाँकी रह्यो। यता आमाको साथमा भने बावरी फूल जगजगाउँदै सेकमारी ओइलादै, गयो। यो हालदेखि आमा सरङहाङमा वाघले खाइ मार्छ भनी आँखाबाट आँसु खसाउँदै शोक लहरी गाउँदै सेसिगेमिगे फूङइन्न तिदिङ लरेना आम्बी मेन्छाम फूङइन्न इरेम् लेरेन रून लागिन्। माथि पुग्न एकतला बाँकी छँदामा भाईको पालो के षढयन्त्र रचे भने हेर दाजु मेरा भएको सबै वाण सकिए अब म हारें, अब तपाईले के गर्नु भने मुख वाएर आँ गरी थापि वस्नु, म आफैं आएर पस्नेछु अनि खानु होला भने। त्यसो भन्दा सुनेर विश्वासमा परी होनाहो ठानी मुख थापी आँखा चिम्लि बसे। त्यसैबेला पिछाडि लुकाइ राखेको एक पाखे माहाकाल वाण मुखमा हानी दिए, सो वाण लागेर बाघ मरी रूखबाट खसे। बाघ मरी खसेकाले यता बावरी कलस ओइलिएर सेक्मारी कलस जगजगाउँदो हुन थाल्यो। सो देखेर मात्र मानिसले जिती बाघ हारेछ भन्ने थाहा पाइ आमा इप्नासो सरङहाङमा रून छाडिन्। अब त नाम्सामीले जितिसके केसामीलाई मारेपछि उनको छाला काढेर भोट मधेस लगी सुकाउँदा पनि कहिल्यै सुकेन। अन्त्यमा पान्थर आङ्सराङ्मा लगी सुकाउँदा मात्र सुक्यो। त्यसरी सुकेकाले डाँडाको नाम नेपालीबाट छाला सुकुवा, हाम्रो याक्थुङबाट सेहोनाम्लाङ थेगु' भन्दछौ। छाला सुकाउँदा सम्याएको खला र छाला टाँगी किल्ला ठोकेको डोबहरू मेची अञ्चल पान्थर सराङ्डाँडा वार्डनं १ छाला सुकुवा आजतक जस्ताको तस्तै छ। सावायेत्हाङ तथा सुसुलिलिम याक्थुङ जातिको बीचमा मुन्धुममा भएअनुसारको सवुद प्रमाण डुढपानीमा मृगलाई कुकुरले छेकेको पाइला र यो छाला सुकाएको इतिहास ओभेलमा परेको छ।

छाला सुकेपछि त्यो छाला भोटमा लगी नुन साटेर ल्याई आमा छालाले नुन साटेर ल्याएको छु खाउँन भन्दा आमा इप्नासो सरङहाङमाले

पशु हो र पनि मेरो कोखबाट जन्मेपछि छोरा नै हो। त्यसैले छोराको छालाले साटेको नुन कसरी खानु? खान्न भनेर नुन बारेकोले त्यही प्रथा मुताविक आमा छोरा तथा कुनै वंश वर्गादिहरू मृतक हुँदा नुन बारेका हौं भन्ने हाम्रो प्राचिन परम्परा छ।

यसै मुन्धुमबाट अर्को हाँगा छुटिन्छ, नाम्सामीले भोटबाट केही नुन साटि दियो, अर्को त्यही भोटबाट फिर्ता ल्याई माथि सोधुङलेप्मुहाङतेम्बेमा लगी सिङहितिमाङलाई जिम्मा दिए। त्यसरी जिम्मा दिँदा सिङहित्तीमाङले थोसुसाङसिङ, योसुहङ्सिङ काठको च्याब्रुङ कुँदी त्यस छालाले च्याब्रुङ मोडी दिए। छालाले मोडीएको हाम्रो सावायेत्हाङ भाषाबाट केहोरिकले खिङ्सु भन्नाले त्यस बाजाको नाम नै 'के' भनी नामाकरण हुन गयो।

दोस्रो मुन्धुमअनुसार इप्नासो सरङहाङमाले बाघ र मानिस जुम्ल्याहा छोरा पाई मरेर अर्को जन्ममा सोधुङलेप्मुहाङको देब्रे खुट्टाको छेपारीबाट इप्नासो सरङहाङमा नामले जन्मे। उता युक्पुहाङ पनि अर्को जन्ममा सोधुङलेप्मुहाङमाङको दाहिने छेपारीबाट फारासोत्तिगेन चङ्बानामले जन्मे। सोधुङलेप्मुहाङको दाहिने र देब्रे छेपारीबाट जन्म लिएकाले त्यसलाई हाम्रो सावायेत्हाङ भाषाबाट लाङखेम्बक फोयोमासासिरो भन्दछौं। अर्को जन्ममा पनि उही चेली र माइती भई जन्म लिएर सँगसँगै बसे। पछि उमेर पुगेपछि इप्नासो सरङहाङमाले लोग्ने बेगर बतासे छोरा पाइन्। त्यो पनि पाउनासाथ मरिहाले। त्यसरी मरिसक्दा सरङहाङमा रूँदै जाँदा बाटोमा लाव्रे किरा भेटाइन्। त्यसैलाई छोरा मानी दूध खुवाउन लागिन्। त्यसरी दूध खुवाउँदा लाव्रे किरा दूध खान पाई सुँगुरको पाठो जत्रो भई मोटाएर गए। उता भने किराले चुसेर आमा भने सुकेर गई सिटा भइसकिन्। त्यस लाव्रे किरालाई हाम्रो भाषाबाट याक्लापुजा भन्दछौं। त्यस्तैमा एक दिन आफ्ना भाई फारासो चगेनहाङवालाई नानी हेर्ने गोठाला राखी आफू गाउँमा डुल्न गइन। दिदीले कोक्रोमा सुताई राखेको नानी धेरै बेरसम्ममा पनि उठेर नरूँदा होइन के भयो र उठेन भनी कोक्रो उघारी हेरेको ता याक्लापुजा किरा मोटाएर सुँगुरको पाठो जस्तो नेक नेक गरेर कराई बसेको देखेर यो किराले पो नानी खाइ हालेर रोएनछ, दिदी आएर मार्ने भयो भनेर हत्तनपत्त आफ्ना खुकुरी थुतेर काटी मारे। त्यसैबेला सरङहाङमा



पनि आइपुगेर पापीले मेरो छोरा काटी मार्‍योनी भनी भाइलाई सरापी। काटी मारेको लाव्रे किरा तथा याक्लापुजा सशीक याङ्दङ भयो अथवा मोच भयो, सृष्टिको सुरूवातमा मोचको सिर्जना यसरी हुन गएको हो भन्ने किरातका जनश्रुतिमा पाइन्छ।

माथि भनेअनुसार कसरी सरापे भने यो मेरा छोरा काटी मारेको पापले गर्दा सफा सुग्घर खान नपाई तपाईले दक्षिण दिशामा गई कालो, आगो भएर मानव जातिले बगाइ पठाएको गाली, सराप, पाप, कष्ट इत्यादि मात्र 'मूलछुखेलछुमाङ' भएर खान परोस भनेकाले फारासो चगेनहाङवा दक्षिण दिशामा गई 'मुल्छु खेल्छुमाङ' भई अनेक दुःख, भुक्त, गाली, सराप इत्यादि खाइ बसेका छन्। त्यसैलाई आइन्दा कुनै गाली सराप बगाउँदा यो तेमेन बरङपीवा मुल्छु खेल्छुमाङले लरूतेसुरो भनी पञ्च वाक्य बोल्ने चलन छ।

## साम्माङ तथा गोहीहरुको सृष्टि

अघि हामी मानवजाति सृष्टि हुनुभन्दा अगाडि एकै दिनमा आठवटा 'सावा येत्नाम' उदाउने अस्ताउने हुन्थ्यो। त्यसबेला रूखपात तथा पशुपंक्षी सबै हामी मानिस जस्तै कुराकानी मिल्थ्यो र बराबर वार्तालाप गर्न सक्दथे। त्यसैलाई हामी 'ताबुकुसिङ पोक्लाकुलुङ, थक्सा, पुसा, नु पान तङे' नेपालीबाट पशुबाक्य बुझ्न सक्ने भन्दछन्। एकै दिनमा उदाउने अस्ताउने 'नाम' घामहरूको नाम यसप्रकारको छ।

१. चिक्चोनाम्वा
२. थेनाम्वा
३. शिकारीनाम्वा
४. काम्दोंनाम्वा
५. वसानाम्वा
६. युक्लींनाम्वा
७. चुङजिनाम्वा
८. खेकखेकनाम्वा

यो आठवटा घामहरू उदय हुँदा घामको घाम कहिले रात परेन र

घामको ज्योतिले यो पृथ्वीको माटो तातेको तातेकै हुँदा खोला, नदि, ना ताल, पोखरी सबै सुकेर गई रूखपात पशुपंक्षी सर्व जिवात्मा पानी बे झुल्के घाममा आठ जीउ, अस्त घाममा नौ जीउ मृत्यु भएको भएकै हु लागे। यस संकट उपर रूखपात, पशुपंक्षी सबै भेला भएर ठूलो स जमाई छलफल गर्दा एउटा मात्र राखी सातवटा घामहरू मार्नुपर्छ भने राय पारित गरे। तर, घामको सामुपरी कसले मार्न सक्ने? रूखपातले हा सक्तैनौ भनी हात उठाए, पंक्षीहरूले पनि सोही कुरामा समर्थन गरे। प तर्फवाट '**हेनलेरे हेनसुबा**' नाउ गरेको एउटा मुसा र '**खामलुम अईहाङब** नाउ गरेको एउटा दुम्सीले सुर्ता नगर हामी मार्छौं भनी बोले। मुसा दुम्सी बोलेकाले अरूले यसो भनेकी हामी मार्न सक्छौं भनेर बच छोड्नुभयो। तर, तपाईहरू दुईजनाको नत उड्ने प्वाँख छ, नत घामला मार्ने शक्ति छ, हामीलाई पत्यार लागेन भने, त्यसो भन्दा मुसा र दुम्सीले यसरी अर्थ लाएकी म मुसाले ढुंगेबासको आँखा फेददेखि टुप्पासम खोलेर लगी वाटो बनाउनेछु। अनि त्यो वाटोवाट दुम्सीगई वाँसको टुप्पादे दुम्सीले काँढा हान्दा घामहरू मर्नेछन् यो कुरा सत्य छ, जब मुसा दुम्सीको त्यस्ता कुरा सुनेपछि यसरी मार्छौं भन्दा हामी सबैको कल्याण हुनेछ धन्यवाद भन्दै सभा विसर्जन गरे। मुसाको पालो ढुंगेबाँस खोल लगी बाँसको टुप्पोमा निकाले त्यसपछि दुम्सीगई बाँसका टुप्पामा निक्ल बसे। प्रथम घाम चिक्चोनाम्वाको पालो उदाएर आए, त्यसलाई दुम्सीले काँढा हान्दा चिक्चोनाम्वाको मुटुमा लागी ऐया भनी आकाश थर्काउनेग कराई 'तरकथुङथाङ लोक्सुल्ले' घाम मरेकाले त्यसबाट 'थुङथाङ्बा साम्माङ सिर्जना हुन गयो, यो साम्माङ ज्यूदो होइन, घाम सोघा भई मरेको सेसन्तर साम्माङ हो। सुरूमा याङ्रूप थेचम्वू बस्ने आजिती चित्तिहाङव ईजम थरका लिम्बुले थेचम्वू यकमा वुझाएका हुन्। कसैको भना आठपहरिया राईले धनकुटामा र कसैको भनाई चौवीसे यसरी फेदाङमाक विभिन्न मत रहेको छ।

दोस्रो घाम थेनाम्बाको पालो उदाएर आयो, त्यसलाई पनि काँढ हान्दा घामको आँखामा लागि घामको आँखा फुटी सोघा भइ मरे, 'कुमि फेकतेआङ स्येइल्ले' त्यसवाट मिसेक साम्माङ सिर्जना भयो। यो पनि



ज्युँदो नभई घाम सोघां भइ मरेको सेसन्तर नै हो, यो साम्माङ तेह्रथुम बस्ने फेदापे लिम्वुले सुरूमा वुझाएको देखिन्छ।

तेस्रौं घाम-शिकारीनाम्वाको पालो उदाए, त्यसलाई पनि काँढा हान्दा घामलाई लागी सोघा भई मरेको उनको रगत मुदकोसेवा चङ्थो खस्ता त्यस रगतवाट तकसङवा साम्माङ भए यो पनि ज्युँदो होइन, मरेको सोघा हुन्, यो पनि आजिती चिन्तिहाङवाले नै थेचम्वूमा वुझाएको देखिन्छ।

चौंथौ घाम-कामदोनाम्वाको पालो उदाएर आए, त्यसलाई पनि काँढा हान्दा सोघा भई मरेर रगत मुजिरीमुलोङ थाजिरीथालोङ नामको माटोमाथि खस्ता त्यस रगतवाट 'तेल्लेरे तेनसेंघा माकचिरी माकलाङघा मित्तासो ताम्भुकुमा थावुसिङताप्माङ काप्तोक्योवाताङमा साम्माङहरू सिर्जना भए, यो पनि मरेकै सोघा सेसन्तर हुन्, यो साम्माङ फेदापे सङपाफेले सदापला ओढार तथा फुकुमा बुझाएको देखिन्छ।

पाचौं घाम-वसानाम्वाको पालो उदाएर आए त्यसलाई पनि काँढा हान्दा घाम सोघा भई मरेर उनको रगत चिजीवा नेनेवा फुक्कुमा माटोमाथि खस्ता त्यस रगतवाट ताम्भुङ्ना कुदाप साम्माङ सिर्जना भए। यो साम्माङ सुरूमा खोकली थरले खोकली ओढारमा बुझाएको देखिन्छ, यो पनि ज्युँदो होइन मरेको सेसन्तर हो।

छैंटौं घाम-युक्लींनाम्बाको पालो उदाएर त्यसलाई पनि काँढा हान्दा लागि सोघा भई मरेको उनको रगत चुलाचुलीमा खस्दा त्यस रगतबाट योसुवमीमा पिप्पोलिया खन्जमा साम्माङ सिर्जना भयो। यो सामाङ मधेस वस्ने मधेसेले बुझाएको देखिन्छ। यो पनि ज्युँदो नभई मरेकै सेसन्तर साम्माङ हो।

सातौं घाम-चुङजिनाम्वाको पालो उदाएर आयो। त्यसलाई पनि काँढा हान्दा घामलाई लागि घाम सोघा भई मर्दा उसको रगत मुनाखाम्नातेम्वेमा खस्ता त्यस रगतबाट नेत्तिफूङवा साम्माङ सिर्जना भयो। यो साम्माङ सुरूमा मेवाखोला बस्ने फुहाङलावा मादेन श्रेङले मानेको वुझिन्छ। यो पनि मरेकै सोघा सेसन्तर हुन्।

सातौं घाम-उही चुङ्जिनाम्वाकै रगत पूर्व दिशा लावेरू नाम्वेरू

नामको माटोमा खस्ता त्यस रगतवाट केवो सिगीलुङमा आप्लिसोपयङ्लुङमा साम्माङहरू सिर्जना भए। यी साम्माङहरू मुधिगेसालेक्वा नामको लाप्चेले सिक्किम तारामुदेन यकमा वुझाएको देखिन्छ। पयङ्लुङमा साम्माङ वुझाउँदा भोट भाषावाट असे भन्ने थेगो हाल्छन्, असे भनेको भोटे भाषावाट माफ देउ तथा माफ मागेको हो।

त्यही चुजिनाम्वाकै रगतपूर्व दिशा मुहिक खामहिकतेम्वे नामको माटोमा खस्ता त्यस रगतवाट चोकमेन्देत पा?मेन्देत साम्माङ तथा कोरकुष्ठि साम्माङ तथा रोग सिर्जना भए। यो कसैले पनि वुझाउँदैन जो अहिले कापोवा थेवा, युमासाम, तुङ्दुगेसाम्माङ वाहेक अरू साम्माङ घाम मरेको सोघा साम्माङ हुन्। त्यसमा कसै भोटेले र कसै आठ पहरिया कसै मधेसेले वुझाएको साम्माङहरू आज हामीले मान्दैछौं, यसैलाई नेपालीवाट नौ ग्रह भन्दछन्, हाम्रो मुन्धुममा फाङसी साम्माङ हुन्।

माथिका घामको रगतले जुनजुन फूललाई भेटे, त्यहीफूल सोघा सुगुत, फूल, जुन रूखपातलाई भेटे त्यही रूखपात सोघा सुगुत र जुन पशुलाई भेटे त्यही सोघा सुगुत तथा ग्रह भए। वृहस्पति, शुक्र, वुध, राहु अथवा हाति, घोडा, विरालो आदि इत्यादि ग्रह भन्दछन्। हामी याक्थुङवाले साम्माङ भन्दछौं। माथि लेखिए मुताविक सोघा भई मरेको साम्माङले हामीलाई केही पनि शुभलाभ दिँदैन, मौका परे सातो खाई दिन्छ र मृत्युका मुखमा हालिदिन्छन्।

उक्त सातवटा घाम दुम्सीले मारीसक्दा अव मलाई पनि मार्छ भनेर कान्छो खेक्खेक्नाम्वा डरले पूर्व दिशा कालो कुहिरीमण्डल भित्र लुके उदाए अस्ताए। अव त्यसरी कुहिरीमण्डलभित्र उदाउने अस्ताउने हुन छोड्यो, उदाउने अस्ताउने क्रम छोड्दा अँध्यारोले ढाकेर सुनसान भयो रूखपात, पशुपंक्षी इत्यादि वाँच्नै सकेनन्। वदलामा म घामजस्तै उज्यालो पर्छु भनेर पुच्छारमा वत्ति वाली जुनकिरी किरा घुमी हिँडे। तुम्वारीवा तर न त उनलाई उज्यालो भयो न त संसारलाई भयो, लाजले देखेर खोल्सामा लुके। त्यसैले जुनकिरी किरा पाखामा हुँदैन खोल्सीमा मात्र हुन्छ। अन्त्यमा अँध्यारोले ढाकेर वाँच्ने उपाय नदेख्ता पहिलेको भैं पुन.सवै रूखपात पशुपंक्षी भेला भएर ठूलो सभा जमाई छलफल गर्दा घामलाई खोजेर



ल्याउनु पर्छ भन्ने राय फैसला गरे। तर, घामको नजिक को जान सक्ने र वोलाई ल्याउने हो यसवारे सवैले हात उठाए। त्यसै वीचमा पशुपंक्षीवाहेक पाँच रूखले हामी गएर वोलाई ल्याउँछौ मरे वाँचे डर छैन, प्रतिज्ञा गर्दै वोले ती पाँच रूखहरूको नाम निम्न प्रकार छ

१. रानीखेल–कदम
२. येङगोवा–खिर्लो
३. याङसिङवा–चिलाउने
४. ससिङ–सखुवा
५. आङ–सल्ला

उक्त मुन्धुमअनुसार जहाँ पनि यी पाँच रूखहरू सँगसँगै हुन्छन्, अव पहिला रानीखेल–कदम गएर वोलाए तर सानु वृक्षको सानै स्वर हुँदा केही पनि सुनेन। त्यसपछि येङगोवा खिर्लोको पालो गई वोलाए तर त्यो पनि सानै रूखको सानै स्वर हुँदा केही पनि सुनेन्न। त्यसपछि चिलाउनेको याङ्सिंवा पालो घामको नजिक गई वोलाउँदा अलिक अलिक सुने, त्यसपछि सखुवा ससिङ गई वोलाउँदा निकै सुने, अन्त्यमा सल्ला–आङ गई वेस्सरी सुसाई वोलाउँदा सुनेर घामकालो कुइरी मण्डलवाट फुत्त निक्लेर आई अघि जस्तै उदाउने अस्ताउने हुन लागे। त्यसरी उदाउने अस्ताउने हुन जाँदा रूखपात पशुपंक्षी इत्यादि घाम ताप्न पाई वचेको वचेकै भए भन्नेलोक मुन्धुम अत्यन्त प्राचीनतम छ।

घामको मुन्धुमवारे फेदाङमा, साम्वा, येवाहरू के भन्छन् भने घाम त्यसरी लुक्न गएकोले सँगुर, कुखुरा, वोका, गाई, भैसी इत्यादि गई वोलाउँदा पनि घाम हाँसेन र तिमीहरूलाई मानिस जातिले साम्माङ पूजा गर्नेछ भनेर सरापे मात्र। अन्त्यमा एउटा किरा छ, त्यसलाई भन्दछौ, त्यो किरा गएर खुट्टादेखि नाप्दै लाँदा काखीमा पुग्दा कुत्कुती लागेर हाँसे। त्यसरी हाँस्ता फेरि घाम लागे भन्छन्। त्यसो हुनाले हाम्रो सावायेत्हाङ मुन्धुम र फेदाङमा, साम्वा, येवा मुन्धुम मिल्दैन, धेरै फरक पर्दछ। हामी वहिन भन्दछौं भने फेदाङमाहरू वही तथा कुखुराको सुली भन्दछन्। हामी सोधुङलेप्मुहाङवाट मानवसृष्टि भएको भन्दछौं भने फेदाङमा, साम्वा, येवाहरू मालिङ्गोको ख़रानी र कुखुराको सुलीबाट मानवसृष्टि भएका हुन्

भन्दछन्। मुजिना खेयङना माङ हुन् भन्छौ भने फेदाङमाहरू भीर पहराक छोरी हुन भन्दछन्। सावायेत्हाङ मुन्धुम ज्येष्ट श्रेष्टता हो र फेदाङम मुन्धुम पछाडी थपथाप कथेका हुन्।

## चेलीले माइतीलाई फूलमाला लगाइदिनु हुँदैन भन्ने मुन्धुम

आर्यन वर्गले तिहारको भाइ टीकाको दिनमा चेलीले माइतीला फूलमाला लगाइदिन्थे र माइतीले चेलीलाई रूपैयाँ दान दक्षिणा दिने चलन छ। किरात सावायेत्हाङ वंशी तथा सुसुलिलीम याक्थुङ जाति समुदायमा भने चेलीले माइतीलाई फूलमाला लगाइदिन हुँदैन भन्ने मुन्धुम रहेको छ। प्राचीनकालमा सावायेत्हाङको शाखासन्तानमा केजोङहाङ नाम गरेको एकजना थियो। उनको कोखवाट छोरी भने जन्मेको थिएन र छोरैछोरा मात्र थिए। न त इश्वरको खेल हो, न त आफ्नै घमण्ड वा छोरी पाउनको रहर। उनको श्रीमती पाँच महिनाकी गर्भवती हुँदा कस्तो अनौठो अचम्मको काम गरे भने यसपाली छोरी जन्मेपछी भएका छोराहरू जति एउटै पनि नराखी मारेर पुर्छु भनी छोराहरूको ज्युँदै चिहान खनी तयार पारे। आफ्नो लोग्नेको त्यस्तो कुचाल बुझि देखेर उनकी स्वास्नीको मनमा शोकले आगो वलिरहेको थियो। मन थाम्न भनेर वाहिर डुल्न घुम्न जान लाग्दा आमा म पनि जान्छु भनेर कान्छो छोरा पनि पछी-पछी लागि घुम्दै जाँदा संयोगवश त्यो वावुले खनि राखेको चिहानमा पुगे। त्यो वालक कान्छो छोराले आमावावुले यो के गर्न खाडल खनेको हो भनेर सोध्दा आमाको पालो आँखावाट भारी आँसु खसाउँदै यसो भनिन् कि हेर छोरा के भन्नु र म तेरो आमा अहिले पाँच महिनाकी गर्भवती छु यसपाली मेरो कोखवाट छोरी तिमीहरूको चेली जन्मेछिन् भने तिमी लगायत मेरा छोराहरू कुनैलाई नराखी सवै मारेर पुर्नलाई यो चिहान खनी तयार पारेको कुरा सुनाउँदा कान्छो छोराले आमाको मुखवाट वावुको अपराध काम कुरा थाहा पाएपछि आमासँग सल्लाह माग्न थाले कि त्यसो भए वावुको त्यस्तो अपराधदेखि कसरी वच्न सक्छौ? केही



उपाय छ भने, आमाले चाँडै वाताई दिनुपर्‍यो भन्दा आमाले भनिन् कि उपाय छ। तिमीले दाजुहरूलाई यो कुरा सुनाई रातसाँझ वनजंगल पसी गएर आफ्ना ज्युज्यान जोगाएर वस्नु। तिमीहरूले आजको पाँच महिनाभित्र रातसाँझ आएर घरधुरी माथि हेर्नु छोरा पाएछु भने सेतो ध्वजा, छोरी पाएछु भने रातो ध्वजा राख्नेछु।

रातो ध्वजा देखेछौ भने आमाले छोरी पाइछन् अव हामीले जन्म युग घरमा जानु नहुने रहेछ भनी देशै त्यागेर जन्मयुग आफ्ना ज्युज्यान वचाई वस्नु। आमाका यस्तो वचन सुनेपछि त्यो कान्छो छोरा दाजुहरू भए ठाउँमा गई सवै कुराको वेलीविस्तार आफ्ना दाजुहरूलाई सुनाइ सवैजना एकमत भई वनजंगल पसेर गए। यता आमाले जब महिना पूरा भए छोरी पाइन, पाउनासाथ धुरीमा रातो ध्वजा राखिन् छोराहरू रातसाँझ आइ हेर्दा रातो ध्वजा देख्नासाथ गुपचुप भई वनजंगलमा छिप्न लागे। वुवा आफ्ना छोरी जन्मेको देखेर खुसीले गद्‌गद हुँदै छोराहरूलाई मार्न खोज्यो तर कसैलाई पनि भेटेन र जिल्ल परे। छोरीको न्वारनगरी एउटा मात्र छोरी हुँदा **एकारा मेरिहाङमा** नाम राखे। त्यो वालिका शुक्लपक्षको चन्द्रमा झैं दिन प्रतिदिन वढ्दै गइन्। पछि उमेर पुग्दा वरपर छरछिमेकीहरूको हैसियत बुझ्दै गइन्। चेलीले माइती र माइतीले चेली भनी आदर सत्कार गरागर गरेको देखी उनी मनमनै आफै छक्क परिन्। आफ्ना भने दाजु-भाइ भएन, आफूलाई कसैले चेली भनेर सत्कार गरोस्। त्यसैले उनी मनमनै साह्रै दुःखी हुन पुगिन्। त्यस्तैमा उनलाई सारै चित्त बुझेन र आमालाई सोधिन। आमा तपाईको कोखवाट अरू मेरा माइती दाजुहरू जन्मदै जन्मेनन् कि जन्मेर पनि अपूरो भयो। छोरीको मुखवाट त्यस्तो कुरा सुनेपछि धेरै वर्षसम्म विर्सन लागेको आफ्ना छोराहरूको सम्झना आई आँखावाट आँसु खसाउँदै लामो सुस्केरा तान्दै भन्न लागिन् ए छोरी किन जन्मेनन् र! तर जन्मेर पनि... अहिले कहाँ छन् खोइ।

गोप्य कुरा यस्तो भयो कि तिमी पाँच महिनाकी गर्भमा हुँदा तिम्रा पिताले के गरे भने यो पाली छोरी जन्मेछ भने यो भएका छोरा जति सवै मारेर पुर्छु भनी ज्युँदै चिहान खनी तयार पारेकाले रातसाँझ सवै

छोराहरू वनजंगल पसिगएकाले मरे बाँचेको आजसम्म केही थाहा छैन भनि सुनाइन्। आमाको मुखदेखि त्यस्तो कुरा सुनेपछि जन्म दिने आफ्ना बाबुलाई धिक्कारिन्। मेरिहाङमाले आँखाबाट आँसु खसाउँदै यसो भनिन् कि माइती वेगरको चेली कसैले पनि चेली भन्दैनन्। चेली वेगरको माइती कसैले पनि माइती भन्दैनन् भने म मेरा माइतीको खोजीमा जान्छु। जबसम्म मेरा माइतीहरू भेट्ने छुइन तबसम्म म फर्कने छैन। यति भनेपछि एकारा मेरिहाङमा आफ्ना माइतीको खोजीमा कुनै बाघ, भालु र आफ्ना ज्यानको परवाह नगरी वनजंगल पसिन्।

एउटा केटी त्यसरी एक्लै वनजंगल पसिगएको माथि स्वर्ग सोधुङलेप्मुतेम्बेबाट सोधुङलेप्मुहाङले अब दुःख पाउने भयो भनेर आत्मामा दया पलाई सोधुङलेप्मुहाङ झरेर जुनबाटो लिएर मेरिहाङमा वनमा जाँदै थिइन् त्यही बाटोमा छलकार गरी आफु साधु भई कुटीमा बसिरहे। त्यसैवेला मेरिहाङमा पनि त्यहाँ नै आइपुगिन्। अनि सोधुङलेप्मुहाङले आफू नजानिदो गरी मन चालेकी तिमी एउटी केटी मान्छे मनमा के पीर परेर एक्लै यसरी वनजंगल पसेका हौ भनेर सोधे मेरिहाङमाले भनेकी मेरा दाजु माइतीहरू वनजंगल पसिगएका छन् र माइतीको खोजीमा जाँदै गरेकी हुँ भनिन्। त्यसो भन्दा तपाईलाई कुनै जङ्गली जनवार बाघ, भालुसँग डर लाग्दैन भनेर सोध्दा मेरा माइतीहरूलाई भेट्न सक्छुकी सक्तिन भन्ने मात्र डर छ। अरू बाघ, भालुको डरभर केही लाग्दैन। यस्तो कुरा सुनेपछि छलकारी सोधुङलेप्मुहाङले झोलामा हात हाली एउटा विघुतको डल्लो दिँदै यसो भने कि यो विघुतको डल्लो लडाई पठाउँदा जहाँ मेरा माइतीहरू बसेका छन् त्यहाँ पुगोस् भनेर सोधुङलेप्मुहाङको नाम पुकारगरी लडाएर खेदिलानु अवस्य भेट हुनेछ। यति भनी त्यो साधुङलेप्मुहाङ अन्तरध्यान भए। मेरिहाङमाको पालो त्यो महात्माले भनेअनुसार विघुतको डल्लो लडाइदिए। अनि पछ्याउँदै जाँदा त्यो विघुतको डल्लो घोर जंगलको गुफामा पुग्यो। मेरिहाङमाको माइतीहरू पनि त्यहाँ नै थिए।

त्यस्तो घोर जंगलमा एउटी केटी देखा परेकीले यो वनदेवी हो कि यात कुनै भूत हो भनेर छक्क परे। त्यसै बेला मेरिहाङमाको पालो भने



कि हे माइती हो, म कुनै भूतप्रेत होइन। म तपाईहरूकै चेली हुँ भनेर पहिलेका सवै कुरा वेली विस्तार सुनाइ दिइन्। त्यसरी सुनेपछि आफ्ना माङगेन्ना चेली रहेछ भन्ने कुरा वुझेपछि चेली माइती प्रथम भेट भएकाले वार्तचित गरिवसे।

केही दिनपछि मेरिहाङमाको माइतीहरूले मेरिहाङमालाई भनेकी हेर माङगेन्ना चेली अब हामी त जन्मयुग घरमा जानु हुँदैन। तिमी यो वनमा दुःख गरेर नवस, घरमा फिर्नु भनी ललाई फकाई गर्दापनि पटक्कै मानिन। मलाई मेरो माइती नभेटेसम्म दुःख थियो, अब माइतीहरूसँग भेट भएपछि मलाई सुखै सुख छ भनी माइतीसँगै बनमा बस्न लागिन्। त्यसरी रहादा बस्दा एकदिन वनमा घुम्न जाँदा एउटा अचम्मैको राम्रो फूलेको फूल भेटेर यो त पृथ्वी तलको नभई सोधुङलेप्मुहाङतेम्बेको हुनुपर्छ। तसर्थ फूल टिपेर लगी माला उनेर लगाई दिनु पर्‍यो भनेर फूल टिपिन्। त्यसवेला यता उनको दाजु माइतीहरू काग भएर कागको वथानमा मिसेर उडी कता गए गए। अब मेरिहाङमा मात्र वनमा एक्लै भएर अलाप विलाप गर्दै रून लागिन्, त्यसरी रूँदा प्राण जान तयार भइसकिन्। प्राण जान तयार भएको साधेुङलेप्मुहाङतेम्बेबाट सोधुङलेप्मुहाङले देखेर आत्मामा दया पलाई फेरि साधुको भेषमा आई यसरी मेरिहाङमालाई सम्झाइन्। हेर मेरिहाङमा जो हुनु भइगयो, अब रोएर के गर्ने? म भरसक त्यसको उपाय गरूँला। सर्वप्रथम किरात सावायेत्हाङ वंशीको शाखा सन्तानले चेली र माइती फूलले हानाहान गर्ने र चेलीले माइतीलाई फूलमाला लगाई दिन कदापि कहिल्यै हुँदैन। तिमीले त्यसरी फूलमाला लगाई दिन खोजेकाले त्यसरी कौवा भई उडिगएका हुन्। यो काम गर्न नहुने तिमीले नबुझेर ठूलो गल्ती गर्‍यौ, तर पनि भइगयो म सकेसम्म उपाय गर्नेछु भने। यसरी हामी किरात सावायेत्हाङ सुसुलिलीम याक्थुङहाङ जातिको बीचमा चेलीले माइतीलाई फूलमाला लगाइदिन हुँदैन भन्ने चम्जीक मुन्धुम छ।

छलकारी साधुभेषधारी सोधुङलेप्मुहाङले यसरी उपदेश दिए कि तिमीले कसैसँग नबोली रूखमाथि बसेर एक महिनासम्म सोधुङलेप्मुहाङ माङको ध्यान गर्नु। ध्यान गर्दा तिम्रो ध्यान जब पूरा हुन्छ, तव सोधुङलेप्मुहाङ शक्तिले

जहाँ भए पनि खिचेर ल्याई कागको रूपलाई फेरि आफ्नै रूपमा परिवर्तन गराई भेट गराउनेछ। तिमीले तुरून्त ध्यान गर्न लाग्नु भनी अन्तरध्यान भए।

मेरिहाङमाले महात्मा साधुको आदेश मुताविक एउटा रूखमाथि चढेर आसन वाँधी ध्यान गर्न लागिन्। उनको ध्यान पूरा हुन केही दिनमात्र वाँकी हुँदा त्यस देशका राजा आफ्ना शिकारी कुकुर साथ घोडामा चढेर वनमा शिकार खेल्दै आउँदा त्यस मेरिहाङमा ध्यान गरिवसेको रूखमुनि पुगे। तर, राजाले भने मेरिहाङमालाई देखेनन्। शिकारी कुकुरले भने मानिसको गन्ध पाई रूखमाथि हेर्दै भुक्न लागे। राजाको पालो रूखमाथि के देखेर भुक्छ भनी हेरेको त एउटी अत्यन्तै सुन्दरी वसेको दखेर दरवारमा लगी रानी तुल्याउनु पऱ्यो भनेर रूखवाट ओराली घोडामाथि चढाएर दरवारमा लगी वोलाए तर केही वोलिन। त्यसो हुनाले लजाएर नवोलेकी होला भनेर सुसारे धाईहरू ल्याई एकान्तमा लगी बोलाउन लगाए तर पनि वोलिनन्। अनेक गर्दा पनि वोलिनन महाराजा भनी राजालाई रिपोर्ट दिए। चाकरहरूको त्यस्तो रिपोर्ट सुनेपछि राजा एकदम जंगिएर यो त मानिस होइन क्यारे वनकै कुनै भूतप्रेत होला, जुन ठाउँमा थिई, त्यही ठाउँमा लगेर पूजा गरी आउ भनेर पोडेहरूलाई आदेश दिए। राजावाट त्यस्तो आदेश पाई वनमा लगेर म काट्ने र ता काट्ने भनी काट्न तम्सिादै थिए। त्यसैबेला मेरिहाङमाको ध्यान पूरा भयो, जव ध्यान पूरा हुँदा पहिले एउटा ठूलो हुरी आयो र त्यसै हुरीको माझमा ठूलो कागको वथान आए। त्यही बथानमा काग भई उडि गएका उनका माइतीहरू सोधुङलेप्मुहाङको देवशक्तिले अघिजस्तै मानिस भएर आफ्ना चेलीलाई काट्न तम्सिने पोडेहरूलाई त्यही मारिदिए र आफ्ना चेलीलाई काट्न आदेश दिने राजाका दरवारमा गई राजाको वंशसमेत मारी देशका राजा भई आफ्ना माङगेन्ना चेलीलाई राजखान्दानसँग विवाह गरिदिए, आ-आफ्नो देशका चेली माइती राजा, रानी, भई भीन्न भीन्न राज गर्न लागे।

❑❑❑



# पृथ्वीमा पहिलो अन्न

सृष्टिको सुरूवातमा मानव जातिले खाने अन्नको विउ विजन थिएन। वनको तरूल भ्याकुर तथा कन्दमुलहरू मात्र खान्थे, त्यो पनि आगो नहुँदा काँचै खाने गर्दथे। त्यसैलाई हाम्रो सावायेत्हाङवाट **'आन्छेन मुक्कुमसेमे होप्तेल्ले खेमाङवा सुमाङवा मेजे'** भन्दछन्। वनका तरूल भ्याकुरकै भरले मात्र वाँच्न नसक्ने भएकाले तागेरा निङवाभूमाङले आफ्नै देवशक्तिवाट **तिबकोति** अन्न **लामाङ तिबकोति सेनालामाङ चाबकोचा अन्नलामाङ सोदारायारीनमाङ** बनाए र पूर्वदिशामा पठाए। अनि तागेरा निङवाभूमाङले आदेश दिए कि तिमीहरू मानव जातिले खाने अन्नको विउ विजन तयार गर्नु भनेर आदेश दिँदा चावकोमाङले तपाईहरूले देख्नु भएकै होला धानको वाला तानेर पुतली बुन्छन् भने त्यस्तै पुतली वनाइ अन्नको विउ विजन तयारगरी झुप्पाको झुप्पा पूर्व दिशामा हावा माथि झुन्ड्याई राखिदिए। तर, आकाशको विउ विजन पृथ्वीलोकको मानिस कसरी झारी लाने हो? यो त भएन भनेर तिवकोति अन्लामाङ चावको चाः अन्नलामाङको पालो आफ्ना देवशक्तिवाट तीनजना माङहरू वनाए ती माङहरूको नाम निन्नप्रकार छ।

(१) नावारा फेयङ्गेहाङ माङ
(२) तङ्हाङवा माङ
(३) पेनहाङवा माङ

यी तीनवटा देवताहरू सृष्टि गरेर यसरी आदेश दिए कि तिमीहरू पृथ्वीलोक तथा मर्त्यलोकमा जाउ र मैले तयार गरेको बिउ बिजन मानव जातिलाई झारिदिएर आउनु भनी आदेश दिए। तिबकोमाङको आदेशअनुसार

ती माङहरू पृथ्वीलोकमा आएर एकदिन नावारा फेयङ्गेहाङ माङ धनुको लौरो टेकेर झुल्के घामको छायामा पूर्वदिशा हेरी उभिएको वेलामा अन्नको विउ विजनहरू झुप्पाको झुप्पा झुण्डिरहेको देखेर नावारा फेयङ्गेहाङ माङले धनुको भाटाले हिर्काए। हिर्काउँदा विउ विजनहरू उछिटिएर आठभाग दक्षिणदिशा गए, नौभाग उत्तरदिशा गए। **साङघामा लिङघामा घैया, ताक्मारू** नामक धानको विउ विजनहरू मात्र झरे। यी झरेको विउ विजनहरू तङ्हाङवा माङले वटुल वाटालगरी भेलागरेर पेनहाङवा माङले पेङगो अर्थात् हातको अञ्जुलीमा बोकेर पश्चिमदिशा सावायेत्हाङ गाउँमा आउँदा सावायेत्हाङहरूको एउटा चेली पाको भई ढाड नुहिसकेकी सिवेरा यावुङकेक्ना नाम गरेकी थिइन। ढाड नुहेको भन्नाले **सिबेरा एकथुका सिबेरायावुङकेक्ना** भनेको हो। उनले खोरिया फाँडेर आगो लगाई भस्मे माटो बनाई राखेकोमा ती माङहरू पनि त्यहाँ नै आइपुगे। त्यो भूमिमा विउ विजन छर्न लायकको माटो देखेर त्यो विउ विजन **सिवेरा एकथुकालाई** दिँदै यसरी अर्थ्याए कि हेर सिवेरा एकथुका तिमीले छरपख गर्न लायकको भस्मेमा माटो बनाइ राख्नु भएको रहेछ। हामीले अन्नको विउ विजन ल्याएका छौं। तपाईले तयार पारेर माटोमा छरपख गर्नु त्यसरी छरपख गर्दा विउ विजन उम्रन्छ, बढेपछि फुल्छ, फल्छ र पाक्छ। पाकेको अन्न खाँदा मानिस बाँच्छन् तथा प्राण रहन्छ। पछिको विउ विजन तपाईका माइती सावायेत्हाङहरूलाई बाँडिदिनु अनि उनीहरूले पनि तपाईले छरपख गरेजस्तै छरपख गर्छन् र पाकेपछि उनीहरूले खानु भन्दा अगावै हाम्रो माङगेन्ना चेलीले विउ विजन बाँडिदिए खुसी हुन्छन्।

तपाईलाई चेसोक अथवा नुवांगी चढाउनेछन् भनेर सबै कुराको वेली विस्तार गरेपछि ती माङहरू आफ्ना देश तीवकोती अन्नला देश तथा देवलोकमा फर्केर जानु भयो। यता सावायेत्हाङहरूको पालो आफ्ना माङगेन्ना चेली सिवेरा ऐकथुका सिवेरा यावुङ्केक्नावाट अन्नको विउ विजन पाएकाले उनीहरूको पालो पनि त्यसरी नै छरपख गरेरपछि पाकेपछि उनीहरूले खानु भन्दा पहिले कात्तिक पूर्णिमाको दिनपारी अन्नको विउ विजन ल्याउने नावाराफेयङ्गेहाङमा तङहाङवा माङ पेन्हाङवा



माङ र सिवेरा येकथुका तथा सिवेरा यावुङ्केक्नालाई आन्नप्राणी देवता मानी चेसोक तथा नुवांगी चढाए।

अन्नवाली पाकेपछि चेसोक तेमा तथा नुवांगी चढाउने नियमित परम्परा अदौ पाला वोटदेखि भई आएको हो। माथिका तीनवटा माङहरू सिवेरा एकथुका वाहेक अरू माङहरू थिएनन्, माङ भनेको र साम्माङ भनेको एउटै नभई अलगअलग हुन्। माङ सृष्टिकर्ता ईश्वर हुन् र साम्माङ भनेको घामहरू दुम्सीले मारी सोघा हुँदा साम्माङ हुन गएका दुःख कष्टकारी र सुखकारी दुवै हुन्।

नवाङगी चढाउँदा सावायेत्हाङहरू एक पर्वमा एकठाउँ भेलागरी सेवा गर्ने चलन थियो। जन धनत्व पछिपछि जति बढ्दै गए आ-आफै छुटाएर गर्ने चलन चलाउँदै गए। त्यसवेला अरू साम्माङ नै थिएन। जब फोपाहाङ थरको जग बसे, त्यसवेला **तागेरा निङवाभूमाङबाट युमासामको** सम्झना गर्नासाथ आईपुग्ने युमासाम भनेकोलाई आजकाल युमा साम्माङ भन्दछन्। जहिले नेम्वाङ थर भए त्यसैवेला देखिमात्र भएको केम्वा, थेवासाम, जहिले कन्दङवा थर भए त्यसैवेलादेखिमात्र भएको कापोवा साम्माङहरूको नाम मात्र पुकारेर फेदाङमाहरूले अन्नको विउ विजन झार्ने नावाराफेयङगेहाङलाई विर्सेर त्यसको नामै ल्याउँदैनन्। केवल युमासाम, थेवासाम र कापोवा, मुदेम्वा, थुङथावा, मिसेक, योवाताङमा यसरी नयाँ साम्माङलाई मात्र चेसोक देवता मानेर नबुझी चढाउने गर्दछन्।

❑❑❑

# कापोबा साम्माङ मुन्धुम

कापोवालाई नेवारले भीमसेन देव र लिम्बु जातिले कापोवा साम्माङ भन्दछन्। काठमाडौंमा कुन सालमा पाडे नेवारले राज गरे, त्यसैवेला भीमसेन देव र जुन सालमा आठराइमा कन्दङवा थर भए त्यसवेला कापोवा साम्माङ भए। अतः यस बारेमा भिमसेन तथा कापोवा साम्माङको उत्पतिको मुन्धुम यस प्रकारको छ।

आठवटा घाम दुम्सीले मारेर सोघा साम्माङ जसरी नै साम्माङ पनि उही पूर्वदिशा जहाँवाट चन्द्रमा र सूर्य उदाएर आउँछ अथवा लासुतितेम्वे नामसुति तेम्वेवा र सञ्जयकालमा चन्द्रमा र सूर्यकोवीचवाट एउटा साम्माङ आफै सृष्टि भइ निक्ले तर त्यस साम्माङको नाम जुराउने ज्योतिष नहुँदा नाम लागेको थिएन अव थिल्लीफुक्मा भन्ने ठाउँमा पुग्छन्। अतः त्यस थिल्लिफुक्मा फूलैफूलले भित्ता बारेको ईउँले छाना छाएको घर वनाइ वसे, त्यसघरलाई पनि छोडेर आउँदा सुकीकांगी कामरूकामछे हुँदै सुखीम तारामदेन आई पुगे। त्यहाँवाट पनि अझै आउँदा फालेलुङडाँडानाघी कावेलिसिरसिरहुँदै तम्वर, अरूण नाघेर, वरूण दूधकोशी, ताम्वाकोशी, भोटेकोशी, सुनकोशी हुँदै नेपाल पुगे। त्यसवेला नेपालमा नेपाल पाँडे राजाले राज गर्दै थिए र राजामाथि आफ्ना छायाँ पारी दिँदा राजा विमार हुन थाले। विमार हुँदा नेवारहरूको देवारी गुवाजुलाई ल्याइ जोखाना हेराउँदा पूर्व दिशावाट एउटा नयाँ देवता घुम्दै आई त्यसको छायाँ परेको देखिन्छ भने, त्यस नम्र देवतालाई के कसो गर्नुपर्ने हो भनेर सोधे गुवाजुले भने कि पूजा गर्ने थान तथा मन्दिर वनाइ तीनवर्षे वोकाले **भीमसेन देवनामले** पूजा आराधना गर्नु भने। सो मुताविक



भीमसेन थान वनाइ तीन वर्षे वोकाले भीम देवनामले पूजा आराधना गरे। त्यस देवताको नाम भीमसेनदेव भनी नाम जुराउने ज्योतिष नेवारजाति भए, यसरी भीमसेनदेव नाम राखी त्यहाँवाट मन्साइदिँदा भीमसेन देव पूर्व फर्केर माझ किरातमा पसी वारवोम्वाखम्वुहरू माथि पनि त्यसरी आफ्ना छायाँ पारि दिँदा त्यहाँ पनि उही विमार हुन लागे त्यसरी विमार हुँदा खम्वूहरूको माङपा ल्याई जोखाना हेराउँदा एउटा नयाँ देवता घुमि हिडेकोले त्यसको छाया परेको देखिन्छ भने त्यस नयाँ देवतालाई केकसो गर्ने भनी सोधेमा भेडावाखाले पूजागरी मन्साई पठाउनुपर्छ भने। सो मुताविक मन्साई पठाउँदा त्यहाँवाट अरूण नदिसरी दशमझिया याखाराईमा पसी त्यहाँ पनि त्यसरी नै छाया पारी दिए।

त्यसरी छायाँ पारिदिँदा त्यहाँ पनि उही विमार हुन थाले, विमार हुँदा याखा देवारी ल्याई जोखाना हेराउँदा एउटा नयाँ देवता घुमिहिँडेकोले त्यसको छायाँ परेको देखिन्छ भने त्यस नयाँ देवलाई के गर्ने भनी सोधेमा तीन वर्षे सुँगुर वुच्चाले पूजा गर्नुपर्दछ भने। सोवमोजिम तीन वर्षे सुँगुर वुच्चा राखी पूजा गर्न लाग्दा त्यो भीमसेन देव आएर मलाई राखी दिए सुँगुर म खान्छु भने र खान लागे। खान लाग्दा देवारीले भनेकी धुप अक्षता र श्वासमात्र पो तपाईको भाग हो मासु त म देवारीको भाग हो नखाउ भने, मलाई भनी तर्फिदिएको कसरी नखाने हो भनी खान लागे। त्यसै कुरामा झगडा परी चर्को हुँदै जाँदा देवारि र भीमसेनदेववीच लाप्पा पर्न थाले, लाप्पा पर्दा देवारीपटि अथवा मासु खसाउँने पक्षमा, भुरादेखि वुढासम्म धुर लागेर मासु खोसाइ राखी त्यहाँवाट खेदी दिए, त्यसरी खेदुवा लाग्दा त्यहाँवाट भागेर सुमलामदो तथा तीन दोवाटोमा आइ पुग्दा आठराइ थुमको एउटा कोन्दोङवा शिकारी शिकार खेल्न भनेर आउँदै गर्दा भीमसेन देव र शिकारीको भेट भयो। भीमसेन देवले लगाएको लुगा फाटा र आफुले लगाएको एउटा रङ्गरूपजस्तोको तस्तै मिलेकोदेखि त्यो पो म हो कि, म पो त्यो हो भनी छक्क परेर कोन्दङवाकोपालो होइन तपाई को हुनुहुन्छ र कतावाट आईकाहाँसम्म जान लागेको हौ भनेर वोलाए। भीमसेन देव पनि मानिस जस्तै वोले र म पच्छीम दिशावाट आईपूर्वतिर घुम्नजानु भनेर आउँदै गरेको हो भने

उत्तर दिए। भीमसेन देवको पालो तपाई नि भनेर सोधे, कन्दोङवाको पालो वनमा शिकार गर्न हिंड्दै गरेको भनी यसरी ओहोरदोहोर वातचित गर्दागर्दै कोन्दोङवाको पालो एउटा रूपेयाँगोजीवाट झिकेर भीमसेन देवलाई देखाए। त्यसरी देखाउँदा भीमसेन देवको पालो पनि एउटा रूपैया झिकेर देखाए। अव रूपैयाँ देखादेख गराउँदा रूपैयाँ पनि मिले, त्यसरी मिल्दा रूपैयाँ साटासाटगरी मित-मित वोले, अनि कोन्दोङवाको पालो हेर मितज्यू अव यो दोवाटोमा के गर्नु र पछि समय सालतिर घुम्दै फिर्दै मेरा घरमा आउनु त्यसवेला पूरा मित लाएर बाधाफुकाउँला अहिलेलाई विदा यति भनेर कोन्दोङवा शिकार गर्न वनतिर लागे, त्यो भीमसेन देवको पालो त्यहाँवाट घुम्दै फिर्दै काशि, गया हुँदै उहीभएर कामछे हुँदै आठ दोवाटोमा आई पुगे।

यहाँ सकेरेङ केकेरेङ नाम गरेको जवान लाठेसँग भेट भयो, र त्यसले भीमसेन देवलाई वुढो देखेर हेपी ए कापोवे नाच्न जान्दाछौ म देवनाच नाच्न जान्दछु भने। अतः त्यस सकेरेङ केकेरेङले ए कापोवे भनेकाले भीमसेन देवको नाम कापोवा भनेर नाम बदलिन गएर कापोवाहुन गयो। त्यो कापोवासाम्मांङले भनेकि नाची हेरौन त भनेर त्यो लाठे र कापोवासाम्माङ दाँजिएर नाच्न लागे। सकेरेङ मानिसहुँदा देवनाचमात्र जानेको र कापोवा साम्माङ हुँदा देवनाचदेखि लिएर पशुपंक्षी इत्यादिको नाच जानेको हुँदा कापोवाले जिते सकेरेङ हारे। कापोवाले जितेको उपलक्ष्यमा सकेरेङ केकेरेङले उनका दिदी तापेसोनावेहाङमालाई दिएर कापोवासाम्माङलाई भेनाजु वनाए। अव कापोवा साम्माङले त्यस तापेसोनावेहाङमालाई विवाह गरे वर्षेनी छोराछोरी पाउन थाले ती छोराछोरीहरूको नाम निम्न छ।

१. वयाफुतकसामा-माक्खोरे कुअक्मा
२. चुङ्जियेछासामा-सशीक यादङसामा
३. कुमिक्ले थुमव्रुमा-नामथिंगो सुयेक्पा
४. कुलाङले यचेमा-मागुरे कुगीम्मा
५. कुहारे चाथमा-सिंदुनागा सामा
६. हाँम्वेकले कुफेल्ला-माखोरे कुअक्मासा



यसरी भनेर भनिनसक्नु, गनेर गनी नसक्नु नाना ओलका छोराछोरी मात्र पाए। किन भने लोग्ने मानिस साम्माङ भए, स्वासनि मानिस मानव जाति भए, त्यसकारण त्यस्ता मात्र जन्मे तर ती पनि कुनै वाँचेनन्। मरेर सवै सेसन्तर भए, साथसाथै तापसेना वेहाङमार सकेरेङ के केरेङसहित मरे, त्यसरी मर्दा ती सवै सेसन्तर भएर कापोवासाम्माङको साहान वाहान भए, अव कापोवामात्र एक्लै भए। त्यसरी एक्लै भएकाले त्यसवेला मात्र वल्ल मित कन्दोङवाको सम्झना आएर मितले वोलाएको थियो जानुपर्‍यो भनेर मित कन्दोङवाको घरमा आए तर धेरैसमय वितिसकेकाले त्यसरी मितेरी गाँसेको र मित आए भनी चिनेनन र वोलाउँन, पनि वोलाएन आदारसत्कार पनि गरेन। त्यसो हुनाले अघि भने मेरा घर आउनु भनी वोलाउने आउँदा भने नवोलाउने भनेर रिसाइ कान नसुन्ने, वैरा गाँढ निक्लने, वहुलाउने, छटाउने इत्यादि विमार उब्जाई उनको मित विमार हुन लागे। विमार हुँदा त्यस गाउँमा आवाहाङ नाम गरेको योक्पाङदेन थरका एउटा वुँढो फेदाङमाथि र त्यस फेदाङमा भयामा कन्दोङवाको घर परिवारले सिभाक्या यावो लगी थुमयालोङमा गराउँदा थुमयालोङमा गरेर यसरी चङ्सामयाम्वो थामा गरेकि अघि शिकारमा जाँदा तीन दोवाटोमा एउटा मानिससँग भेटी मित वोलेको घरमा आउनु भनी करार गरेको रहेछ अनि सो आउँदा वोलेन र त्यो कापोवारे साम्माङ रिसाइ त्यस्तो विमार उब्जाएको देखिन्छ हो कि होइन भनेर सोध्दामा हो भने। कोन्दोङवाको पालो भनेकि मित वोलिसकेपछि मितमाथि एकरति अपराध सोच्न नहुनेमा त्यसो ममाथि भारी अपराध सोचेर त्यस्तो विमार उब्जाइ दुःख दिन्छ भने, ममाथि त्यस्तो अपराध गरेको सो अपराध उसैमाथि फर्केर जाओस् भनि उल्टो प्वाँख भुर्ला फर्केको तथा दुम्से भालेले आठ राई बखिम यक्मा पूजा आराधना गर्दा, त्यसदिनदेखि सो अपराध उसैमाथि फर्केर गई यता कन्दोङवा निको भयो। अतः नेवारले भीनसेनदेव र याक्थुङवा कन्दोङवाले कापोवारे साम्माङ भन्दछन्। यो पनि चन्द्रमा र सूर्यको सञ्जेकालमा सृष्टि भएको हो।

□□□

# थेबासाम तथा केमवासाम्माङ मुन्धुम

थेवासाम तथा केम्वासाम्माङ सृष्टिका सुरूवातदेखि नभई हालकै
अथवा जुनवेला नेम्वाङ थरको जग वसे त्यसै वेलादेखि मात्र भएको हो
यो पनि पूर्वदिशा चन्द्रमा र सूर्यकोवीच संञ्जेकालमा उही लासुति
नामसुति तेम्वेवाटै एकै चोटी तिनवटा सम्माङनिक्ले तिनीहरूको नाम
यसप्रकार छ।

१. थेवासाम तथा केम्वा
२. मेफोरा कामफुन दिम्वा
३. मुयेङगो येङगवानावा

यसरी साम्माङनिक्लेर उही सुकीकांगी कामरू कामछेहुँदै सुखी
तेरेङ हेप्मदेन वर्तमान दारामदेन निक्ले। त्यहाँदेखि पनि अभैयेता आउँद
फालेलुङ डाडाँमा निक्ले, त्यहाँदेखि पनि अभै यता आउनलाई त्यसवेल
जागा अलेदा हुँदा अरेरीको लहरा, काली लहरा, वलढेंग्राको लहराले जेले
वाटो पाएन। वाटोनपाउँदा म वाटो फाँड्छु भनेर मुयेङगोयेङगवानावा
अघि लागि वाटो फाँड्न लागे, तर सकेना फेम मेवाखोलैखोला छिरेर आ
म जलदेवि .तथा वामाङ हुँ भनेर नाम फेरे। यसलाई संगोलमा पूजागद
कुखुराको पखोटा उसलाई भाग दिनुपर्छ, त्यसपछि मेफोराकामफुन्दिव
को पालो म वाटो फाँड्नुपर्‍यो भनी फाँड्न लागे तर सकेना र उत
दिशामा लागि सोधुङलेप्मुतेम्वेवाट आएको युवारा कुयुमा
एकाराकुफङमाङपांगुरीयङाक तिम्वा फाकमुरा सोकपुनदिम्व



वमुरापानफेनदिम्वा भनी यसरी थुप्रैनाम लाए यसलाई सँगोलमा पूजागर्दा कुखुराको साँप्रो भाग लगाउनुपर्छ, थेवासाम तथा केम्वासामको पालो अघिलागी वाटो फाँड्न लागे, तर उसँग मुकसाम हुँदा सवै लहरा काटी फाँडेर वाटो खुलाई **नेम्बाङ तुरा** भन्ने ठाउँमा निक्ले भन्ने फेदाङमा मुन्धुममा छ। नेम्वाङ तुरा भन्ने ठाउँमा आइ पुग्दा त्यस वेला **लतिबा** र **चुकमिबा** अथवा **लाईबा** र **तुइबा** नाम गरेको दुईजना नेम्वाङ दाजु र भाइ दुईजनाले गोठ पाली वसेका थिए। नेम्वाङहरू जम्मा पान्थरी नेम्वाङ छन, लाईवा र तुइवाको शाखा सन्तान हुन्। गोठ पाली वसेका वेला लाईबा र तुइबाको गाई वस्तु बाघले खाइ हानीनोक्सानी गरिदिये, लाइवा र तुइबाको पालो वाघलाइ सोलापासो थापे, जति थापे उति थेवासामले उठाई दिए, त्यसो हुँदा हाम्रो पासो उठाउने को रहेछ भनेर ढुके। ढुक्दा, एउटा अग्लो वुढो मानिसले सो पासो उठाउँदै गरेकोदेखि सोलापासा उठाउने यही वुढो रहेछ, गोठमा लगी ढिंङगुरोठोकेर सोधपुछ गरौंला भनेर लहराकाटी त्यस थेवासामलाई बाँधे, जति बाँध्यो उति धागोको डोरीजस्तो लहरा चुडाइदिन्छ त्यसरी चुडाइदिँदा बाँध्न सकेन र आफैं छक्क परे। त्यसवेला थेवासाम आफैं यसरी बोले की हेर बावु हो, मलाई बाँधेर लाने हो भने त्यस्तो लहराले होइन रातो, हरियो, निलो, कालो, पहेंलो, धागोले वाँधेमा साँचै वन्धनपर्नेछु भन्दा सोअनुसार धागोले वाँधेमा वन्धनमापरी थेवासामलाई कोच्याएर ल्याउँदा भरसादिमा पुर्‍याउँदा त्यो वुढो त्यहाँ नै अलपिएर हराए। साता, दशदिनपछि थेवासाम लाईबा र तुइवाको आँगमा चढे, उनीहरूको ज्यु आङ्गमा चढेकाले लाइबा र तुइबा आफै वहुलाउन छटपटाउन लागे। वहुलाउँदा छटपटाउँदा एकापटी काखीमा जाँतो र दोस्रापटी काखीमा ढेकी च्यापी उफ्रन्दा घर धुरी नाघे। मुक्साम शक्ति उनीहरूको ज्यु आङ्गमा चढेकोले मुकुमासामशक्तिले गर्दा वनमा गई उनीहरूको गाईवस्तु खाने वाघलाई समाई पछारेर मारे। यसरी वाघ पछारी मार्दा पछि त्यस ठाउँको नाम केथामदेन भनेकोलाई असुद्ध भाषावाट केवादेन भन्न लागे। ति दुईभाई वहुलाउँदा छटपटाउँदा त्यसगाउँमा चार छापे मोहोरे नाउँ गरेको योकपाङदेन थरका एउटा वुढो लिम्वु फेदाङमाथि यो लाईवातुईवाको घरपरिवारले के भयो र यसरी वहुलाउन

छटपटाउन लागे भनीसिभाक्यावो लगी थुमयालोङमा गराउँदा उनले यसरी चङसामयाम्वो थामा गरेकी गोठमा वस्दा एउटा अग्लो बुढो मानिस वाँधेर ल्याएछन् तर त्यो मानिस मानिस नभई थेवासाम तथा केम्वासाम्माङ हुन्, त्यो साम्माङ उनीहरूको ज्यु आङ्गमा चढेकाले थेवासाम मुकसाम आएको देखिन्छ भने।

पुनः सोधेकी केकसो गर्दा शान्ति हुन्छ र लाईवा तुइवा निको हुन्छ त भन्दा फेदाङमाले भनेकी पूजा आरधाना गर्ने चोखोनितो ठाउँमा स्याउले मन्दीर वनाइ त्यस मन्दिरमा तीनवर्षे थुम्वाले भोगवली पूजा गर्नुपर्छ भने, त्यसोभन्दा एकापटि होवाखोला र दोस्रापटि फेम्मेवाखोलाबीच **इरेर ईसायक इरेर इदुङ्यक** फेजीरी फेदाङयक भन्ने ठाउँमा पूजा गर्ने देवस्थल वनाइ तीनवर्षे थुम्वाले पूजा आराधना गर्दा त्यसदिनदेखि थेवासाम तथा केम्वासाम शान्ति भएर लाइवा र तुइवा निको हुनु भयो। यो थेवासाम पूजा गर्ने सुरूसुरूमा नेम्वाङहरू हुन्। मुन्धुमले त्यसैलाई **कुवुङसिङ** भन्दछन, तर थेवासमको पूजा आराधना सवैले गर्ने–गर्दछन्। फेदाङमाहरूकोभनाई कुवुसिंवाहेकले पूजा गर्दा तिनखेप पूजा गरेर पाँच पञ्चराखी अवदेखि तपाईको भाग पुग्यो यो नाता गोतामा त्यसरी संधै वस्ने होइन जहाँ तर्पाईको कुवुङसिङ त्यहाँ जानुपर्छ भनेर वाचावन्धन गरे आपसेआप जानेछ भन्ने मुन्धुम पुर्खाको छ।

□□□



# सबासाम्माङ बाँदर देवा उत्पत्ति

सवासाम्माङ तथा बाँदरदेव सुरूवातको देवता होइन, जुनदिनमा लिम्बुमध्ये हेमव्या भन्ने थर थकी वने त्यसै वेलाको हो, यसवारे सवासाम्माङको सृष्टिवारे फेदाङमाहरूले भिन्न भिन्नै भन्छन् तापनि हाम्रो सावायेत्हाङ मुन्धुममा यसप्रकार छ। मानवसृष्टिकर्ता ईश्वरले मानव जातिलाई सृष्टि गरीसकेपछि अन्त्यमा अनौठोको सृष्टिका छोरा पाए। एकत मानिसजस्तो मानिस भनौं भने पशुजस्तो पुच्छर भएको मानिस भन्ने कि पशु भन्ने, यस्तो अनौठो छोरा पाएकोले सोधुङलेप्मुहाङ आफै छक्क परेर आठ दोवाटोमा मरोसकी वाँचोस् भनेर सोधुङलेप्मुतेम्वेवाट फालि दिए। त्यसरी फाली दिंदा आठदिन पुग्दा पनि नमरी वयाँक वयाँक गरी रूइ वसे,रूएको आवाजमाथि सोधुङलेप्मुतेम्वेमा सोधुङलेप्मुहाङको कानमा थुरिन पुगे, त्यसरी पुग्दा भएन भनेर सोधुङलेप्मुहाङ सोधुङलेप्मुहाङतेम्वेमा खिचि सोधुङलेप्मुतेम्वेवाट कालो कुइरी मण्डलमा फाली दिए। त्यसरी फाली दिंदा, त्यो कालो कुइरीमण्डल हावाले फुकेर लाँदा पूर्वदिशाको पहाड पर्वतमा थुरीन पुगे। पहाडमा थुरीन पुग्दा त्यो वाँदर तथा सवाराजा पनि त्यही पर्वतमा टाँसिन पुगे। टाँसीन पुग्दा फेरि त्यही पहाड पर्वतमा टाँसिएर वयाँक वयाँक गरी रोई वसे, यसरी रोई वसेको आवाज उही सोधुङलेप्मुहाङको कानमा पुगे। पुनः सोधङ्लेप्मुतेम्वेवाट सोधुङलेप्मुहाङ झरेर यसरी अर्तीउपदेश दिएकी, यो पहाडपर्वतमा टाँसिएर मात्र खान पाइदैन।

तपाईले यो पहाडपर्वतलाई छोडेर पश्चिम दिशा सावा येत्हाङ गाउँछ। त्यहाँ जानु र त्यही खाने कुरा पाइन्छ। यस्तो अर्तीउपदेश दिएर

सोधुङलेप्मुहाङ आफ्ना देशमा फर्के, त्यो सवाराजाको पालो सोधुङलेप्मुहाङमाले दिएको अर्ती मुताविक त्यस पहाडपर्वतलाई छोडेर पश्चिम दिशामा आउँदा थाजी, तोजी, याँजिहुँदै फुल्लासो वैल्लासो पोखरीमा आएर तिदाँवा नदि तथा तम्वर नदीको तिरको वाटो लिएर आउँदाआउँदा तम्वर खोला छिरूवानी भन्ने ठाउँमा आइ पुगे, त्यसरी आइपुग्दा यो पल्लोकिरात याङरूप थुमको हेम्वयागाँउ वस्ने हेमव्याथरका **हाङलेरे हाङमुकहाङ** नाम गरेको एउटा लिम्वु नुनलिन भनेर भोटतर्फ जाँदै गर्दा, त्यो सवाराजा र हेमव्याकोछिरूवानी भन्ने ठाउँमा भेट हुनगए, त्यसरी भेट हुँदा पहिले हेमव्या हाङमुक हाङले सवाराजालाई देखेर पक्कै मानिसै हो भन्ने ठानी होइन तपाई कहाँवाट आएर अव कता जान लागेको हो भनेर सोधेको त त्यो वाँदर पनि मानिसजस्तै वोलेर म उत्तरवाट आई दक्षिणदिशा जान लागेको हो भने। सवाराजाको पालो पनि तपाईंनि भनेर सोधे,सोधनी गर्दा हेमव्याहाङमुकहाङको पालो गोजीवाट एउटा रूपैयाँ झिकेर सो रूपैयाँ देखाउँदै यो रूपैयाले भोटमा गई नुन किनेर ल्याउनु भनी भोट तर्फ हिडेको हौं भने, त्यसोभन्दा वाँदरको पालो पनि एउटा रूपैया निकालेर देखायो, अव रूपैयाँ मिलाउँदा रूपैयाँ मिल्यो। त्यसरी मिल्दा रूपैयाँ साटासाट गरे मितमित वोले, अनि हेमव्याले भनेकी पछि अन्नवाली पाकेको वेला कात्तिक, मंसिर महिनातिर घुम्दै फिर्दै मेरा घरमा आउनु त्यसवेला मित लाएर वाधा फुकाउँला यति भनेर हेमव्या भोटतिर नुन लिन गए। यता वाँदरको पालो भीरपहरातिर खोजी खान लागे अनि त्यसरी घुम्दै फिर्दै कार्त्तिक मंसिरमै तिर हेम्व्या हाङलेरे हाङमुकहाङको घरमा आइपुगे। अत्यसरी आइपुग्दा हेमव्याले त्यसरी मित वोलेको कुरा विर्सिहाले, अथवा चिनेना र वोलाउँन पनि वोलाएन र आदर सत्कार पनि गरेन। तर पनि भरैभोलि चिनेर वोलाउँछ होला भन्ने आशाले विगार केही नगरी हेमव्याको वारवगैंचा उखेलि एकसाता वितीसके तर पनि वोलाएना त्यसो हुँदा हेमव्यामेलोमा गई कोही नभएको वेला हेमभ्याको सिर उठाउने जाँड तथा **नाहाङमाथिः** पकाई राखेको तालामाथि पसेर चोरीखाएको हेमव्याको धोति च्यातेर त्यसको डोरीवाटी घेम्पाको मुखमा सर्कुनिपासो थापी राखे। सो पासो देखेर वाँदरको पालो त्यसपासोमा पर्ने



जस्तोगरी चुपचाप वसी रहे, किनभने भरैमित आएर चिनी वोलाउला भन्ने आशाले बसेको थियो। बेलुका मेलोवाट आई हेमव्याले पासोमा परिरहेको देखेर गाउँ घरमा गई तरूनी तन्नेरी सवैभेला गरी गुहार मागेर ल्याए। कसैले भाला वर्छा, कसैले वन्चरो, कसैले खुर्पा, खुकुरी इत्यादि हतियार लिएर आई वाँदरलाई त्यहाँ नै काटकुट पिटपाट गरेर मारे। मारेर घाँटीमा डोरी लगाई तानेर लगी तम्वर नदिमा वगाई दिए, वगाइदिंदा नदिले वगाउँदै लगेको वाराहा नजिक वगरमा निक्लेर कुहि गनाएर वसे। कुहेर गनाएको दुर्गन्धको वाराहादेवका नाकमा थुरीन पुगे, होइन के गनाउँछ भनेर कोकाहावाराहा देवले जतावाट त्यो दुर्गन्ध आए त्यही दिशातीर हेर्दै जाँदा एउटा लाश भेटे। यसोहेर्दा मानिस जस्तो छ, मानिस भनुँभने फेरि पशुजस्तो पुच्छर छ, पशु र मानिस भन्ने ठम्याउन सकेन। यो के रहेछ ज्युँदो पारी सोधी हेर्नु पर्‍यो भनेर आफ्ना देवशक्तिले ज्युँदो गराई ता पशु होसकि मानिस होस् के भइस कहाँ मरीस र कतावाट यहाँ आइस यसरी कुहि बसेको हो, सत्यकुरा भन् भनी सोध्दा सवाराजाले भनेकि म सोधुङलेप्मुहाङको छोरा कान्छा सवाखकचुम राजा हुँ मेरामित हेमव्याले घरमा आउनु भनी वोलाएको थियो र उनका घरमा आउँदा वोलाएन र उनको 'नाहाङमाथि' चोरेर खाँदा पासो थापी म पासोमा परी वसेको अवस्था गाउँका गाउँले गुहार मागी ल्याई।

काटकुट पिटपाट कर्मगरी मलाई मारेर नदिमा वगाइ दिंदा सो नदिले वगाउँदै-वगाँउदै ल्याइ यहाँ पुगेर कुहि बसेको रहेछु कोकहावराहादेवभनेर सुनाइ दिनुभयो। सवाराजाको तेस्तो कुरा सुनेपछि तपाईले त्यसरी चोरी खान नहुने थियो, तर जो हुन भई सक्यो, अव के गर्नु भने। चोरीमा सजाए सम्म दिनुपर्ने, तर मृत्यु दण्डदिएकोले तपाईका मितको घरमा जाउँ र अघि तपाईलाई मार्दा कस्तो सास्तिदिए, तेस्तै सास्तीको विमार उब्जाई दुःख विमार गराउनु त्यसरी गराउँदा तपाईलाई वाँदरदेव सवा साम्माङ भनेर पूजा आरधना गर्ने छ। त्यही हो, तपाईको खानेवाटो यति भनेर त्यो सवाराजालाई पठाई दिए। यसरी पठाइ दिएकोले हेमव्याको घरमा आई अघि जसरी सास्ती दिए, त्यस्तै बिमार उब्जे हेमव्या दुख्नलागे। त्यसरी विमारहुँदा त्यसबेला गाउँमा काम्वाङ थरको

लेमुफेदाङ भन्ने एउटा बुढो फेदाङमा थियो। त्यस फेदाङमालाई हेमव्याहाङमुकहाङको परिवारले सिभाक्यावो लगी यावोलोङमा गराउँदा उनले यसरी चङ्सामयाम्वो थामा गरेकी अघि भोटमा जाँदा एउटा मानिससँग भेटभई मित वोलेर घरमा आउ भनेर वोलाएको रहेछ तर, त्यो मानिस मानिस होइन खकचुम सवाराजा हुन्। त्यो घरमा आउँदा मारेछौ, त्यसो हुनाले त्यो मारेको सोघाहुँदा सोघावाट सवासाम्माङ वाँदरदेव भई दुःख दिएको देखिन्छ भने। त्यसो भन्दा सवासामाङलाई केकसो हुँदा शान्ति हुन्छ र विमार निको हुने भनी सोधे भिरपहरा तथा रूखमाथि चोखो ठाउँमा पूजा गर्ने थान वनाइ सुँगुरको पाठोले पूजा गर्नुपर्छ भनेकोले सोवमोजिम नै पूजाआराधना गर्दा हेमव्याहाङलेरे हाङमुकहाङ लिम्वु विमारदेखि नीको भयो, त्यसोहुँदा पहिले पूजा गर्ने शुरूवाला नै पूजा गर्ने मानिस कुगुसिं तथा त्यसको धनि हुन्छ भन्ने प्राचीनतम मुन्धुम छ।

तर, आहिले अरूअरूले पनि दवपूजा गर्दछन् तर, फेदाङमाहरूको कस्तो गलत छ भने जुनै साम्माङहोस् कुवुङ्सिं तथा धनीवाहेक अरूले पूजागर्दा तीनखेप पुगेपछि अव तपाईको यो घरवाट मानपूरा भयो भने अवदेखि यो घरमा कुनै दुःख विमार गराउन पाउने छैनौं। जहाँ तपाईको कुगुसिं छ त्यहाँ जानुपर्छ भनेर पञ्चराखी पञ्चवाक्यबाट वाचा वन्धन गर्नुपर्छ र फेदाङमाले पनि त्यसरी फलाकी पठाउनुपर्छ, वुवुङ्सि-कुगुसिंवाहेकले कुवुङसिं जस्तो सधैंभरि पूजागरी रहनुपर्दैन।

□□□



# चिलदेव मुयासाम्माङ मुन्धुम

चिलदेव अर्थात् मुयासिरे अघिको नभई हालकै बुझिन्छ, यसको उत्पती सम्वन्धी फेदाङमा मुन्धुम यसप्रकारको छ। यो पारूङ्तेम्वेफक्ताङलुङमा अगाडिको चुचुरा अग्लो डाँडालाई अघि लाजीरिलाएम्लुङ भन्थे। त्यसवेला डाँडाको अर्को नाम श्रृङ्चोक्मा पनि हो। अतः त्यसवेला त्यस दिनमा त्यस पहाडवाट आपसेआफ एउटा मुयाराजा सृष्टि भए। तर, आश्चर्य भयोकी आठ, नौ वर्ष पुगी सक्दा पनि उनका प्वाँख पुच्छर उम्रेन तसर्थ गुराँसको पात मालिङ्गो निंगालोको पातहरू कतै प्वाँख पुच्छर हुन्छ कि भनेर राखीटोपले तर पनी भएन। त्यो के लोदर भयो भनेर तागेरा निङवाभूमाङ पाउमा अर्ती उपदेश माग्न भनेर घस्रिादै गएर हे तागेरानिंवाभूमाङ के यस्तो लोदर भयो र मेरो प्वाँख पुच्छर उम्रेन भनेर विन्ती गर्नुभयो। मुयाराजाको त्यस्तो विन्ती सुनेर तागेरामाङको दया पलाई यसरी अर्ती उपदेश दिए कि हेर मुयार जा तल पृथ्वीतलमा सावायेत्हाङ गाउँमा जाउ र सावायेलहाङहरूको खाने अन्न साङघामा लिंघामा धैटयाः ताक्मारू धानको पराल छ। त्यो परालको प्वाँख पुच्छर राख्नु भनेर अर्ती उपदेश दिएर पठाएकोले सो बमोजिम राख्दा प्वाँख पुच्छर हुन गए।

प्वाँख पुच्छर हुँदा त्यसको वलले उडेर एकदम बेग हानेर आकाशमा उडि वसे, उडेर घुम्दाघुम्दा थकित भएर बस्ने ठाउँ हेरे, कतैपनि देखेन। अन्त्यमा एकापटी मेमेरी खोला र दोस्रापट्टी फूङगुवाखोलावीच आठराई फूङगुवा भन्ने ठाउँमा परामसिङ नामका एउटा ठूलो रूख थियो, सो रूख

देखेर दक्षिनपट्टिको हाँगामा गई बसे, त्यस गाउँमा खाम्वोङवाथरको साजीचङ र पुजिचङ्नाम गरेको दुईजना शिकारी थिए। अतः ती दुईजना शिकारी शिकार गर्न भनेर एकदिन वनमा जाँदैगर्दा मुयाराजाले देखेर साजिचङ्लाई टिपेर लगे, त्यसरी लाँदा साजीचङ्ले पुजीचङ्लाई भने कि हेर साथी यो मुयाराजाले यसरी टिपी लगेर खान्छ भने तपाईलाई पनि टिपेर लानेछ तसर्थ के गरेर हुन्छ यसलाई मार्ने प्रयास गर्नु, यति भनेर त्यो साजीचङ्लाई मुयाराजाले खाइ हाले, अब यता पुजिचङ्को पालो त्यस मुयाराजा चिललाई मार्ने उपाय गर्न थाले। कसरी भने पहिले आफू लुक्ने माटोको 'कुरी' खने, त्यस कुरीको मुखमा गोपेबाँसको भाला तिखारेर गाडे, त्यसभालाको टुप्पामा लिसोटांगे, त्यसरी पासो तयारगरी सकेपछि मेरा साथि साजिचङ्लाई टिपी लगी खाइस भने लौ मलाई खाउत भनेर धमास दिए, पुजिचङ्को त्यस्तो धमासा सुनेर मुयाराजा रिसले चुर भयो र पुजिचङ्लाई छोपे। त्यसरी छोप्ता पुजिचङ कुरी भित्र पसी गयो, यता मुयाराजा गोपेबाँसको भालामा परी मुटुकलेजो छेंडियो। मुटु कलेजो छेंडादा चुच्चाले ठुँगे त्यसरी ठुङदा उल्टै भालाले घोचेर आँखा फुटे, पखेटा चलाउँदा लिसोले टाँसे, मुयाराजा त्यसरी पासोमा परी मरे।

त्यसरी मर्दा पुजिचङ् निक्ले उनका जोडी आउँछ भन्ने डरले गाउँले सवै गुहारी, कसैले वञ्चरा, कसैले खुकुरी, खुर्पा हतियार लगाई आठ, नौ दिनमा ढाले, त्यसरी ढाल्दा मुयाराजाको एउटा बच्चा राम्रो प्वाँख फक्रन नसकेको हुँदा उडेरँ गई फेल्फेलगरी उड्न सकेन र खसे। त्यसरी मुयाराजाको वच्चा फेल्फेलगरी खसेको भन्नँले पछि त्यस ठाउँको नाम फेदेनटार भयो कथन छ भन्दछन्। यता मरेको मुयाराजापासोवाट झिकेर तम्वर नदीमा वगाई दिए। वगाई दिंदा नदिले वगाउँदै लगे त्रिवेणीमा पुगेर मासु जति गलेर गई हाडखोडहरूमात्र रहेको थियो। त्यसवेला तम्वर खोला लिङखिम गाउँमा वस्ने चाकावा नाम गरेको सुभासङ थरका लिङखिम लिम्वु जालहारी थिए। जालहारी जालहान्दैहान्दै जाँदा त्रिवेनीमा पुगेर जालहानी जालवाहिर झिक्दा मुयाराजाको हाड जलले वेरेर ल्याए, जाल टक्टक्याउँदा खुट्टाको नलिहाड चाँदि भन्दा सेतो र पखेटाको हाड सुनभन्दा पहेंलो देखेर त्यो हाडहरू चाकावाले घरमा ल्याइ खुट्टाको



नलीहाङ घरको मूलथाम्मा ठाडो राखी पखेटाको हाड थाम्माथि निदालमा स्युरी राखे। ति हाडहरू तीन वर्ष सम्म त वत्तिजस्तै उज्यालो वलिवसे सो हाडमध्ये नली खुट्टाको हाडवाट विरालीदेव र पखेटाको हाडवाट चिलदेव मुयासिरे सिर्जना भई अघि चिलराजा पासोमा पर्दा गोपेवाँसको भालाले घोच्दा जसरि मुटु दुखे, त्यसरी नै भालाले घोचेजस्तै मुटुकलेजो दुख्ने, आँखा फुटेजस्तै आँखा दुख्ने विमार उब्जेर 'चाकावा' विमार हुनथाले। तत्काल त्यस गाउँमा तवेवुङ्थरको सामसिवु नाउ गरेको एउटा वुढो फेदाङमा थिए।त्यस फेदाङमालाई चाकावो घर परिवारले सिभाक्यावोलगी थुमयालोङमा गराउँदा उनले थुमयालोङमा गरेर यसरी चङ्सामयाम्वो थामा गरेकी अघिचाकावाले जाल हान्न जाँदा मुयाराजाको हाडहरू सुनचाँदीजस्तै देखेर घरमा ल्याइ राखेछ। त्यो हाडहरू सर्वप्रथाम घरभित्र राख्न नहुने थियो। तर, घरभित्र राखेकोले खुट्टाको नली हाडवाट विराली देव मेयंगसिरे, र पखेटाको हाडवाट चिलदेव मुयासिरे हुनगई त्यसैले विमार गराएको देखिन्छ भनी दिए।

उपकार क्रममा के कसो गर्नुपर्ने हो भनी सोधे सुँगुरको पाठाले पूजा आराधना गर्नुपर्छ भनेकाले सोवमोजिम पूजा आराधना गर्दा चाकावा नीको भयो, अतः विराली देव र चिलदेव-मेयंगसीरे र मुयासिरेको उत्पत्ति यसरी भएको हुन्। चिलको हाडखोडहरू फेरि तम्मर नदिमा वगाई दिंदा नदिले हाड वगाउँदै लगी चौवीस हङ्समोरङको मोरङ राजाले भेटाएर उनको पाठपूजा गर्ने ठाउँमा राखेको थियो। यता फेदापथुम्मा वस्ने छौरेहरूमध्ये आङवुङ्थरले मिङश्रापाएको थिएन र उनका आमालाई आमा मलाई मिङश्रा देउना भनेर मिङश्रामाग्दा मोरङराजाको पाठपूजा गर्ने ठाउँको चिलको हाड चोरेर ल्याउ अनि मिङश्रा पाउला भने। आमाको यस्तो कुरा सुनेर अव आङवुङ् कन्या केटी वनेर गई मोरङ राजालाई यसरी विन्ती चढाएकी तपाईको राजानाम सुनें र तपाईकोमा आएकी हुँ तर मेरो व्रतछर्किक तीन महिना नपुगी ओछ्यानमा नजाने भनी व्रत लिएकी वस्छु महाराजा भनी विन्ती गर्दा सो कुराले राजा मञ्जुर हुँदा वनावटी कन्या मोरङ राजाको घरमा, सुशार चाकरगरी वसे, तर उनको भित्री दाउ के थियो भने त्यो मुयाराजाको नलि खुटाकसरी चोरी

लाने हो, योमात्र दाउ हेरी रहेको थियो। संयोगवस एकदिन मौका परेर चोरेर नलिखुटा चोरी भागी आउँदा खोरोङवा खोलामा पुग्दा त्यो हाड खसेर माछाले निली दियो। परिश्रम खेर गई खाली आएर आमा त्यो नलि खुट्टा ल्याउन त ल्याएँ तर खोरङवा खोलामा पुग्दा खसेर पानीमा पर्दा माछाले निलिदियो के गारू भनेर सल्लाहमाग्दा आमाले भनेकी अब के गर भने खोलामा चाँचर थाप र फेयोथकते अनि मिङश्रा पाउलास् भन्दा सो वमोजिम चाँचर थापे -फेयोथकतु त्यसरी फेयोथकमा गर्दा फेयोहाङले कत्तु कुगमासा वारू कुवामासा यसरी मिङश्रा पाएका हुन भन्ने लोक गाथा छ।

जुनै साम्माङ होस् जसले पहिले मानि पुजिल्याए, त्यो कुगुसिं धनि ककुन्दङवा हुन्छ, त्यसले त्यो साम्माङ पुस्तौपुस्ता पूजा गरेकै हुनुपर्छ, अरू नातागोताले भने तिनखेप पुजागरी सकेपछि पञ्चराखेर आइन्नाङथो अक्खेलरीक सुम्वोहुक्वा मेन्नलो आवाराकेगुसिं मुयार केगपसिओ नुक्सेपेगेओ भनेर नातागोता वाट विदा दिनुपर्छ फेदाङमाले पनि त्यसरी नै मन्साई पठाइ दिनुपर्छ सधैंभरि पूजागरि रहन पर्दैन भन्ने कथा, लोक कथा लोकप्रिय रहेको छ।

□□□



# सिर्जना मुन्धुम सोघा साम्माङ

चखोवासाम्माङ साम्माङ होइन! मानिस पोखरीमा डुबि सोघा भएका हुन् भन्ने कुरा नबुझेर फेदाङमाहरूले सोघालाई साम्माङ भन्न लागेका हुन अतः यस कुराको मुन्धुम यस्तो छ। धनकुट्टा जिल्ला अर्न्तगत छरूवा खोलाको सिरमा उहिले सातपोखरी थियो, तर भीन्न होइन। सातवटा चोसो हुँदा सात पोखरी भनेको मात्र हो पोखरी एउटा हो। अतः कुगेतनाम इंगवारोक र कुथानामईगवारोक नाम गरेको दुईजना व्यपारी थिए , ती व्यपारीले सयसय गोटा चकमक नेपालमा लगी सयसय टोपी साटेर ल्याए। सहेसहे टोपी दक्षिणदिशामा लगी सयसय कोरोङपिप्मा साटेर ल्याइ सय कोरोङपिप्मा भोटमा लगी सहेसहे नामजा साटेर ल्याउ भनी गाइ धपाई भोटतिर वाटो लाग्दा सात पोखरीमा पुगेर भात पकाइ खाएर भाँडाकुँडा माझि फोहोर पानी वाहिर नफाली त्यही पोखरीमा हाले। त्यसरी हाल्दा जलदेवी वमाङ वितोल भई अन्धाधुन्ध पानी झरी, हावा, वादल उठी वाटो हिड्न पाएनन। जलदेवी वितोल भयो भन्ने थाहापाई यसरी भाकाल गरेकी अहिले हाम्रो पासमा पूजा गर्ने सरजाम केही छैन ब्यपार गरेर आउँदा विधि विधान साथ पूजा आराधना गर्नेछौं शान्ति भएर वाटो खुलाइ देउ भनेर भाकल गर्दा जलदेवी शान्ति भइ वाटो पाएर त्यो सहेसहे कोरोङ पिप्माले सहेसहे नामजा साटेर घरतर्फ फर्केर आउँदा यसरी वाटोमा सल्हागरे अघि आएको वाटोवाट फर्केर जाउँ भने पूजा गरौंला भनेर भाकल गरेको छौं त्यसो हुनाले त्यसवाटोबाट नजाउँ, फेदापको वाटोवाटजाउँ भनेर फेदापको वाटो लिएर आउँदा वाटोवाटो झरी वादलले दुःखपिर दिँदै ल्याएर सात दिन पुग्दा जलदेवीको शक्तिले

त्यस पोखरी घुमाइ ल्याएर पोखरीमा डुबी सोघा भएर मरे। सोघा भई मरेको तीन वर्षपछि त्यस गाउमा पानीमा डुबेजस्तै ज्यु शरीरै चिसो भई आउने पानी खाएजस्तो भुँडी ढाडिने, वाक्वाक आउने, छाद्ने, छेरने र विमार फैलीएर त्यस गाउँका सवैजनता विमार हुन थाले, त्यसबेला त्यस गाउँमा इवाथरको सावाङगो नाम गरेको एउटा बुढो फेदाङमा थियो र गाउँले सवैभेला भई फेदाङमालाई चङसामयाम्बो थामा जोखना हेराउँदा उनले चङ्साम याम्वो थामा गरे।

अरू केही होइन कुगेतनाम र कथानाम सात पोखरीमा डुबी सोघा भई मरेकोले त्यो सोघा जागेर विमार गराएको देखिन्छ भने अव के गर्नुपर्ने हो उपाय के छ भनी सोधे दशमी तिथिका दिन डुबेर मरेको रहेछन्। सो तिथिपारी बाँसको दुईजोर सापतुक बनाइ त्यसैपोखोरीको चोखो पानी हालेर पूजा गर्ने थान बनाइ पानी जस्तै सेतो भालेले चखो वासाङमा पूजा गर्नुपर्छ भने। त्यसो गर्दा गाउँ सबै स्वस्ती शान्ति हुन्छ भनेकोले दशमी थितिपारी पूजा गर्दा त्यो विमारबाट गाउँ शान्ति भयो। तसर्थ दशमी तिथि पारी पूजा गरेकाले पछि फेदाङमाहरूले कुरा नबुझेर महादशैंको दशमी टिकाको दिनमात्र चखोवा साम्माङ पूजा गर्नुहुन्छ भन्नलागे। यो चखोवा साम्माङ, साम्माङ नभई मानिस सोघाभई मरेको सोघा साम्माङ हुन्। फेदाङमाहरूले देवतालाईपनि साम्माङ, सोघालाई पनि साम्माङ सवै साम्माङए साम्माङ के भन्नु र ढुङ्गाको देवीथानमात्र पो सधैंभरी त्यो ठाउँमा बसिरहन्छ, तर सोघालाई पनि थानमान बनाइ दिन नमिल्ने, फिरेन्ते, चरन्ते, घुमन्ते हुँदा थानको जरूरत नपर्ने गाथाहरू पाईन्छ।

## ओरोक्मा तथा कान्छी बिजुवानी मुन्धुम

ओरोक्मा साम्माङ साम्माङ होईन सुदुक्यु खेदुक्यु फेदाङमाहरूको चेलि माङमाङव सेरे केथुक्मा सिभाक्या मिफोक्वामाङ हुन् यसको सशि मुन्धुम यस प्रकार छ। यो माङमाङवा सिभाक्या मिफोक्वामा तागेरा निङवाभूमाङ येमा भई पछि सोधुंङलेप्मुतेम्वे देवलोकमा वसे तापनि देवलोकको देवबासी नभई यो पृथ्वी बासी मानवजाति हुनाले पछि यो पृथ्वी तलमा नै झरे। अब फेदाङमा येबा साम्बाहरूको धेरै पुस्तापछिको



लगभग एकसय तिनसय वर्ष मात्रै हुनुपर्छ। दशलिम्बु सत्रथुम भनेको राणा प्राईमिनिस्टर वीरसमशेरले वि.सं. १९४४ सालमा सत्रथुम छुटाएको लालमोहरबाट प्रष्ट भएको छ। तसर्थ येवा सन्तानहरूपनि धेरै भएकोले केही आठराई पोमोकेछाङ्येबा, कोहि फावामा येबा, कोहि तम्वर मिवामा येबा र कोहि मैयामा येबा। थुम पिछेको येबा भएर जजमानि गरी खान्थे, एकदिनको कुरा हो, मैया थुमको येबाहरू एउटा चिन्ता वस्ने काम परेकोले एउटा घरमा चिन्ता वसेर आफ्ना जामा कौडिमाला भिरेर आँगनमा थाल बजाई नाचि रहेको थियो। त्यस मैया थुमको मेया खोलाको सिरमा बटुको जस्तो गोलो परेको पहाड पर्वत छ त्यसलाई गोलो बटुका जस्तो परेको हुँदा हाम्रो भाषाबाट त्यसलाई 'वसाङलुङ खोरेलुङ' भन्दछन्। अतःवासाङलुङखोरेलुङ पहाडपर्वतको टाकुरामा सोधुङलेप्मुहाङ तेम्वेबाट माङमाङवा सिरे केथुम्मा सिभाक्यामिफोक्वामा झरेर त्यसखोरेलुङमा उभीएर तलहेर्दा, येबा नाचि रहेको देख्दा येमाको सिरेगुरू जागेर आउँदा ति येमा त्यहाँबाट आएर येबाहरूको अगाडि आई नाच्न लागे। त्यसरी नाच्न लाग्दा ति येबाहरूले हाम्रो बिरगुरू आएर नाच्न लागे भनेर थाहा पाएनन र अन्जानमापरी तिमी कस्को छोरी चेलि होश हामीलाई उछिनेर हाम्रो अगाडि लागी नाच्न थालिस तर तिमी येमा होईनस वक्सी होस् भनिदिए। यसो भन्दा रीसले चुर भएर येबाहरूको काम्नेसाम्ने शक्तिखिंचेर त्यहाँबाट तम्वर येवाहरू भएकोमा गई त्यहाँपनि उही आगाडि लागेर नाच्न थाले। त्याहा पनि कस्को छोरी चेलि होश कोनि, तर तिमी येमा होईनास वक्सी होश भने, खाली त्यसरी भन्दा त्यहाँपनि उनिहरूको काम्ने शक्ति खिंचेर लगी त्यहाँबाट फावामा येबाहरू भएकोमा पुगे। त्यहाँपनि त्यसरीनै अगाडी लागि नाच्न लागे, त्यहाँपनि त्यसै भने, त्यसोभन्दा उनिहरूको शक्ति खिंची त्यहाँबाट फालेलुङडाङाँ नाघी सुखिममा पुगे। सुखिम्मा पनि लामाहरू नाचिरहेको देखेर त्यहाँपनि आगाडि लागेर नाच्न थाल्दा लामाहरूले चुप्पिले घोची मारेर तिस्टा नदिमा बगाई दिए। नदिमा बगाई दिदा नदिले बगाउँदै लगी सिलगुडी निक्ले, तर उनिसँगको तान्त्रीक ज्ञानका प्रभावले मरेतापनि फेरि ज्यूादो भई मधेसका मैदानेनि दन्तकालि भुतप्रेत सब उठाई साथ लिएर सुखिम फर्केर आई अघी उनलाई मार्ने लामाहरूलाई

चुप्पिले घोचे जस्तै मुटुकले जो दुख्ने, छाद्ने, छेर्ने ईत्यादि विमार उव्जाई दुःखपिर दिंदा उनिहरूको मूल खईवा लामालाई लोसर जोखना हेराउँदा अघी एउटा नारी मानिस तपाईहरूले घोचिमारी तिस्टा नदिमा वगाई दिएछौ। तर त्यो मानिस मानिस होईन माङ माङवा सिरेकेथुम्मा सिभाक्या मिफोक्वामा हुन् त्यो फेरि ज्यूदोभई फर्कि आए भुतप्रेत ईत्यादि सेशन्तर उठाई दुख पिर दिएको देखिन्छ भने। त्यसलाई के कसो गर्दा हामी निको हुन्छौ यसको उपाय केछ भनि सोधेमा....लाख ध्वजा, लाख वात्ती गरेर जुनबाटो आयौ उहीवाटो फर्केर जाउ भनि मन्साई पठाउनु पर्छ भन्दा सो मुताविक मनाई पठाउँदा सुखिमबाट फर्केर आई एकैचोटी मिया खोलाको **साम्फीत लिङफित** पोखरी वरकमा आई वरकको माभमा उभिएर **ओरक्मा साम्माङ** नाउँ राखी। त्यस गाउँमा पानिमा डुवे जस्तै हातखुट्टा चिसोभई आउँने मुटुकले जो सोलाकोका हान्ने विमार उव्जी गाउँमा तमाम बिमार हुन थाले। अतः त्यस साम्फीत लिङफीत ओरोक्माको माभमा माङमाङवासिरे केथुक्मा सिभाक्या मिमिफोक्वामा आरोक्मा साम्माङ भएकोले त्यसका नाउँनै ओरोक्मा गाउँ भनेर नामाकरण हुन गयो। त्यसवेला ओरोक्मा गाउँमा त्यसरी विमार उव्जेकोले **केदेम्वाथरको सुनमल** नाउँ गरेको एउटा वूढो आङसिथियो। त्यसकोमा सवैभई जोखना हर्न लाउँदा जोखना हेरेर उनले यसो भने- साम्फित लिङफित ओरोक्माकोमाभमा माङमाङवासिरेकेथुम्मा सिभाक्या मिफोक्वामा ओरोक्मा साम्माङ कान्छि विजुवानिले यसरी विमार उव्जेको देखिन्छ भने। त्यसको उपाय केछ जोखना हेर भन्दा उनले यसो भनेकि छेउमा पूजागर्ने थान वनाई कालो पोथि कुखुराले ओरोक्मा साम्माङ नाउले पुजा गर्नु भने अनि उनले भनेअनुसार कालो पोथि कुखुराले पूजा गर्दा गाउँ घर शान्ति भयो। पहिले माङमाङवा सिरे केथुम्मा सिभाक्या मिफोक्वामा थिईन भनेपछि एकचोटी मरेर फेरि ओरोक्मा साम्माङ भईन, यो पनि ज्यूदो नभई मरेको सोघा तथा वोक्सी देव हुन। पुजा गरेर तपाइको कुगूसिंमा जानु नाता गोता नपछाउनु भनि मनाई पठाउँनु पर्ने हो, तर फेदाङमाले सो भन्दैना गर्नेले त्यसोगरी देउ भन्दैन भने आरूलाई केर, अब येतिमैर गाथा, कथाका लोककथाहरू मुन्धुम छन्।



एक दिनको कुरा हो, मैवा थुमका येवाहरू चिन्ता वस्ने काम परेकाले एउटा घरमा चिन्ता बसेर आफ्ना जामा कौडीमा लाभिरेर आंगनमा थाल बजाइ नाचिरहेको थियो। मेवाथुमको मेवाखोलाको सिरमा बटुको जस्तो गोलो परेको पहाड पर्वत त्यसलाई गोलो बटुको जस्तो परेको हुँदा, वसाङलुङ खोरेलु भन्दछन्। अतः त्यस असाङलुङखोरेङलुङ पहाड पर्वतको टाकुरामा सोधुङलेप्मुतेम्बेबाट माङमाङ वासिरेकेथुम्मा सिभाक्यामीफोक्वामा भरेर त्यस खोरेङलुङमा उभिएर तल हेर्दा येवा नाचि रहेको देख्ता त्यसै उसै येमात हो उनको सिरे गुरू जागेर आउँदा येमा त्यहाँवाट आएर ति येवाहरूको अगाडि आइ नाच्न लागे। त्यसरी नाच्न लाग्दा येवाहरूले हाम्रो विर गुरू आयेर नाच्न लागे भने थाहा पाएनन् अन्जानमा परी तिमी कस्को छोरी चेली होस् कोनी हामीलाई उछिनेर हाम्रो अगाडि लागि नाच्न थालिस् तर तिमी येमा होइनास् बोक्सी होस् भन्दा रिसले चुर भएर येबाहरूको काम्ने साम्ने शक्ति खिचेर त्यहाँबाट तम्बर येवाहरू भएकोमा गई त्यहाँ पनी उही अगाडि लागेरनाच्ने थाले। त्यहाँ पनि कस्को छोरी चेली होस् कोनी तिमी येमा होइनस बक्सी होस् भने, त्यसोभन्दा त्यहाँ पनी उनीहरूको काम्ने शक्ति खिचेर लगी त्यहाँबाट फावामायेबाहरू भएकोमा पुगे। त्यहाँ पनि त्यसरीनै आगाडि लागि नाच्न लागे त्यहाँ पनी त्यसै भने, त्यसो भन्दा उनीहरूको शक्ति खिंची त्यहाँबाट फालेलुङ डाडाँ नाघि सुखीम पुगे। सुखीम्मा पनि लामाहरू नाचिरहेकोदेखेर त्यहाँपनि अगाडि लागेर नाच्न थाल्दालामाहरूले चुप्पीले घोचि मारेर टिस्टा नदिमा बगाई दिए।

त्यसरी बगाई दिँदा नदिले बगाउँदै लगी सिलुगुडी निक्ले, तर उनीसँग तान्त्रिक ज्ञानका प्रभावले मरे तापनि फेरि ज्युदो भई मधेसका मैदानेनि दन्तकाली भूतप्रेत सव उठाइ सँगसाथ लिएर सुखीम फर्केर आइ अघि उनलाई मार्ने लामाहरूलाई चुपीले घोचेजस्तै मुटुलेजो दुःखने, छाद्ने, छेरने इत्यादि विमार उब्जाई दुःख पीरदिँदा उनीहरूको मूल खईबालामालाई लोसर जोखना हेराउँदा अघि एउटा नारी मानिस तपाईहरूले घोची मारी टिष्टा नदिमा बगाई दिएछौ, तर त्यो मानिस मानिस होइन। माङमाङ वासिरेकथुक्मा सिभाक्यामिफोक्वामा हुन् त्यो फेरि ज्युँदो भइ फर्की

आएर भूतप्रेत सेशन्तर उठाइ दुःख पिर दिएको देखिन्छ भने। त्यसलाई केकसो गर्दा हामी निको हुन्छौं। यसको उपाय एक छ भनी सोधे लाखध्वजा लाख वत्ति गरेर जुन वाटो आयौ उही वाटो फर्केर जाउ भनी मन्साइ पठाउनुपर्छ भन्दा सो मुताविक मन्साइ पठाउँदा सुखिमबाट फर्केर आई एकैचोटी मेवा खोलाको साम्फित लिफित पोखरी –वरकमा आइ वरकको माझमा उँभिएर ओरकमासाम्माङ नाउँ राखी, त्यस गाउँमा पानीमा डुवेजस्तो हातखुट्टा चिसो भइ आउ मुटुकलेजो सोला कोका हान्ने विमार उब्जि गाउँमा तमाम विमार हुन थाले। अतः त्यस सार्मफित लिंफीत ओरोककोमाझमा माङमाङवासिकेथुक्मा सिभाक्यामी फोक्वामा ओरोक्मा साम्माङ भएकाले त्यसका नामनै ओदोकमा गाउँ भनेर नामाकराण हुन गए। त्यस ओरोक्मा गाउँमा त्सरी विमार उब्जेकाले त्यस गाउँ भनेर नामाकरण हुन गए। अव त्यसा ओरोकमा गाउँमा त्यसरी विमार उब्जेकाले त्यस गाउँमा केदेम्वाथरको सुनमल नाम गरेका एउटा वुढा ओड्सी थिए। सवैभइ जोखोन हेर्न लाउँदा जोखोनाहेरेर उनले यसो भने। सार्मफित लिंफित ओरोक्को माझमा माङमङवासिरे केथुक्मा सीभायाक्या मीफोक्वामा ओरोक्मा साम्माङ –कान्छी विजुवानी नाम फेरी त्यसले यसरी विमार उब्जाएको देखिन्छ भने।

त्यसो भन्दा त्यसको उपाय छ जोखोना हेर भन्दा उनले यसो भने की एकजोर बाँसको सापतोक बनाएर त्यस सापतोकमा पोखरीको साङलो पानी हाल्नु अनि पोखरीको छेउमा पूजा गर्ने थान बनाइ कालोपोथी कुखुराले ओरोक्मा साम्माङ नामले पूजा गर्नु भने अनि उनले भनेअनुसार त्यसरी कालो पोथी कुखुरालेपूजा गर्दा गाउँ घर शान्ति भए। तसर्थ पहिले माङमाङवासिरेकेथुक्मा सिभाक्यामीफोकयामा थिइन् भनेपछि एकचोटी मरेर फेरि ओरोक्मासाम्माङ भइन, यो पनी ज्युदो नभइ मरेको सोघा तथा वक्सी देवहुन। यो पूजा गरेर तपाइको कुगुसींमा जानु नातागोता नपत्याउनु भनी भनाई पठाउनु पर्ने हो तर फेदाङमा त्यसो भन्दैन, गर्नेले त्यसो गरिदेऊ भन्दैन।

□□□



# मानिस कसरी मेफ्रामा साम्माङ भइन्

यो साम्माङ साम्माङ होइन सावायेत्हाङहरूको चेलीमानिस हुन् तर पनी मेफ्रामासाम्माङ भइन, यसको शसी मुन्धुम यस्तो छ। अघिसावायेत्हाङ वंशीको कुनै एक शाखा सन्तानमा सावायेत्हाङ शाखा वंशीको एउटा छोरी चेली **आँवारा चङखीहाङमा** नाम गरेकी एउटा अत्यन्तै सुन्दरी कन्या थिइन र उनका सुन्दररूप चोरैदिशा फैलिन गएकाले सो कुरा सुनेर पहिले पूर्वदिशाबाट माग्न भनेर कुटुम्व आये। कुटुम्वलाई बाबु माइतीले छोरीको दाम अथवा सुनौली रित भात एकैचोटी एक सहेलाख ल्याउ भने र दाम तोके। एकसहे लाख रूपैया रकम बुझाउन साँवागाश नभएकोले त्यो केटा जुनवाटो आए त्यहीबाटो लिएर आफ्ना देश फर्केर गए। त्यसपछि पश्चिम दिशावाट आए त्यसरी आउँदा झन सारो दुई सहेलाख रूपैया आफ्ना छोरी चेलीको रिती तोके। त्यत्रो रूपैयाँ रकम बुझाउन सक्ने आफ्ना साँवागास नपुग्दा त्यो केटा पनि जुनवाटो आए त्यहीबाटो लिएर आआफ्ना देश फर्केर गईगए। त्यस्तै तरिकाले उत्तरवाट आउँदा तिनसहे लाख र दक्षिणवाट आउँदा चार सहे लाखभन्दा त्यत्रो रूपैयाँ बुझाउँन नसक्दा सबै दिशाको केटा फर्की सके, अब माग्न आउने कोही भएनन आउँन पनी छोडे त्यसो हुनाले आवारा चाँसीहाङमाले सोचेकी चार दिशाबाट मलाई माग्न केटा आए। तापनि धेरैधेरै सुनौली मागे र मलाई कुटुम्वमा नपठाएपछि अब मेरो विवाह नहुने भएछ। मेरा माईतीलाई दुःख नदिई छोडदिना भनेर

कुटुम्वमा नदिएको रिसले आठढोका उघार्दै पश्चिम दिशा सेसन्तर राजा तथा दमुराजा जहाँ छ त्यहाँगई आफू दमुरानि बनेर सेसन्तर सेना खेमा यंङ्सङ तिलिंगा पठाई झुल्के घाममा आठ ज्यान र अस्ताय घाममा नौजीउ प्रत्येकदिन सावायेलाहाङ वंशीहरु मृत्यु हुन लागे। छोरी चेली माग्न कुटुम्व आए भने नरोक्नु चाडै दिईहाल्नु भनेको अर्थ यसरी भएको हो। नदिई रोकेमा सावायेत्हाङको दशावेहोर्नुपर्नेछ। सावायेत्हाङ वंसीले छोरी चेलीको सोतरीत खान छोडेका हुन्। माथिका अनुसार त्यसरी सावायेत्हाङवंशीहरू प्रत्येक दिन मृत्युको शिकार हुन लागेकाले के भयो र यसरी मृत्युकोशिखार बन्न लागेको हो भनेर,...सामकेलोकेवाफूङवा भएकोमा गईसोधे सामकेलोकेवाफूङवामाङले अन्तरध्यानवाट विचार गरेर यसो भने, हेर सावायेलहाङवंशीहरु हो तपाईहरूको छोरी चेली आवारा चङखी हाङमालाई माग्न कुटुम्ब आउदा नदिएको रीसले ज्युँदै सेसन्तर गाउँमा पसी गएर आफूसेसन्तर रानी भएर सेसन्तर सेना खटाई पठाएर सेसन्तर सेनाले पक्रेर लाँदा त्यसरी मृत्यु भएको रहेछ भनेकाले अव त्यसोभए उपाय के गर्दा हामी मृत्युको मुखदेखि वाँच्न सक्छौं भनेर सोधेमा सामकेलो केवाफूङवामाङले यसोभने हेर, सावायेत्हाङवंशी हो, अव केगर्नु भने एउटा आयुपुगेको फेदाङमा ल्याएर त्यसले जे मागेको सो दिनु, अनि एउटा कोरङ पिप्मा डांग्रे गाईको वाछी तयारगरी त्यस फेदाङमालाई मरेका लाशलो लगाएको कात्रो लुगा लगाई दिएर त्यस फेदाङमाले आठ ढोका **तुवारी येछाङ्मा** उघार्दै गई जाँहा तमुराजा तमुरानी वसेको छ। त्यहाँ पुगेर तमुराजादेखि छुटाई एकान्त पारेर हेर आवाराचंखीहाङमा तपाईको खाने **फाकहोक कोरङ पिप्माको बाछी** राखिदिएको छौं, अवदेखि तपाई शान्ति भएर त्यसरी सेशनतर सेना नपठाउनु भनेर ललाई फर्काई राजी पारेर आफू सेसन्तरसेना भइ फिर्नसक्नु पर्छ। त्यसरी सेशन्तर सेना खेमा यङ्सङ तील्लींगालाई ढाँट्न सकेन भने सेसन्तर सेनाले सातो खाइ दिन्छ र त्यो फेदाङमा त्यहाँ नै मरी जानेछ, खुव होशियार साथ काम गर्नुसक्नु पर्छ यसरी अर्तीउपदेश दिए। अर्ती उपदेश पाएर आएपछि सामकेलो केवाफूङवामाङले दिएको उपदेश मुताविक कोराङपिप्माले पूजा आरधाना



गर्दा त्यस दिनदेखि मात्र मृत्युको मुखदेखि वचे भन्ने फेदाङमाहरूले मेफ्रांमासाप्माङ लागेछ भनी जोखना हेर्न पनि छोडेका छन्। पूजा गर्दा मरीन्छ भन्ने डरले जोखना हेर्न छोडेका होलान्। हाल कसैले पनि पूजागरेको देखिँदैन, छोरीचेलीको दाम तथा सुनौली माग्दै छोरीचेली कुटुम्वको साथमा नपठाउँदा त्यसरी मृत्यु हुनुपर्‍यो।

□□□

# तुङदुङगेसाम्माङ शुक्र ग्रह उत्पत्ति मुन्धुम

यो साम्माङ पनि अघिको होइन, पछी नै पत्ता लागेको बुझिन्छ, कसरी याक्थुङवा जातिको थरथकीहरू विभाजित भइसकेको हुँदा हालकै हो भन्ने प्रमाण लाग्दछ। अतः यो मैवाथुमको पुरानो आदिवासी वारूमहाङहरु हुन् ति वारूमहाङहरूलाई अहिले वारूमहाङ भन्दैनन् मासुवा भन्द छन्। त्यसको मुन्धुम निम्न प्रकारको छ। हालः–ताप्लेजुङ जिल्लाअन्तर्गत मैवाखोला ढुंगेसाँघु गाविसमा, एउटा सासना खोला छ। त्यस खोलाको नाम सेल्लोवा खोला भन्दछन् अतःत्यसखोलाको सिरमा माटोका ढिकुरो उठेको छ, यसको नाम **खाम्बुचङ** भन्द छन्। खाम्बुचङ भनेको वारूमहाङहरूको गढ तथा यक हुन। अतः वारूमहाङहरूले आफ्ना **यक** खन्दा खनेको माटो त्यस सेल्लोवा खोलामा पसे, त्यसरी पस्ता सेल्लोवाखोला धमिलिन गए। धमिलो पानी वग्दै गई त्रिवेनी तथा कोकाहावाराहा देवका आँखामा धमिलो पानी परे, वर्षमासामा पानी तथा सवै खोलानाला धमिलो हुने नै हो। हिउँद लागेपछि त सवै खोलानाला सङलिने हो। तर कुन वर्ष कुन हिउँद धमिलोको धमिलै कहिले संङलेन, यो के भयो र यस्तो भयो भनी चित्त नवुझेर आफ्ना देव शक्तिवाट आफ्ना कान्छो छोराकोरूपमा साम्बारा **तुङ्दुमाङ** नाउँले एउटा साम्माङ वनाएर यसरी आदेश दिए, हेरछोरा तपाईले यो धमिलो खोला कहाँ वाट आउँछ। त्यहाँपुगेर खोलोपहिरो लागेको भए हेरेर आउनु मानिसले धमिल्याएको रहेछ भने ती मानिसहरू त्यहाँनै मारेर आउनु भनेर आदेश दिई पठाए, **साम्बारो तुङ्दुङ्माङ** खोलैखोला आउँदा, आउँदा त्यस सेल्लोवा खोलाको सिरमा पुगे त्यसवेला वारूमहाङहरूधमाधुम गढखन्दै थिए। सो देखेर त्यो **साम्बरा तुङ्दुङ्गेमाङले** सवैलाई मार्न लागे, कसोकसो गर्दा एउटा चाहिं नसकेर भागे, भाग्दै जाँदा वारूमहाङहरूको एउटा चेली सुँगुरको चारो राख्ने ठूलो डुँड तथा **फाक्खोङ** घोप्टोपारी सो माथिबसेर तानवुनी रहेकीथिइन्। त्यो भाग्नेमानिस त्यहाँपुगेर मलाई लुकाउ ढुङगेमाले खेदेर आउँदै छ मलाई मार्छ भन्दा त्यो छोरी चेलीकोपालो ठूलो डुँढ फाक्खोङले छोपी राखेर सोमाथि बसेर आफू चुपचाप तान वुनि बसे। त्यसैबेला तुङ्दुङ्गेपनि त्यहाँ नै आइपुगी एउटा भाग्ने मान्छे यता आएन भनेर साम्बारा तुङदुङगेमाङले सोधे। त्यो चेलीको पालो देखिना भनी उत्तर दिए। साम्बारामाङलेअन्तरध्यानबाट देखे तर त्यो आइमाइ लाई छुनु भएन। मनमनै रिसले चुरभएर **मास्वा सेन्दुवा फाकखोङ फपा** अर्थः–हरूवा परूवा डुढछोपुवा यसरीहिंसा गिल्ला दिएर त्यहाँ नै छोडी राखी त्यहाँबाट फागोहरूमा गएर हौ दाजुभाइहो भनेर बोलाए तर कसैले पनि कसोक्या हो, कोहो भनेर वास्तै गरेनन्। झन् रिसले चुरभएर **फागो सँगो सुकुनुन्दो** गीजाई राखेर त्यहाँबाट हाम्फाबुङ्गई हौ दाजुभाइ त्यसो हुँदा रिसायेर **थोप्रासोप्रा चिबेतङवा** भनेर गील्लागरी राखेर त्यहाँबाट ओखाबु पुगे, हौ दाजुभाइ हो, भनेर वोलाए, तर कसैले पनि क्या हो, कोहो भनेर वास्तै गरेनन् त्यसोहुँदा रिसाएर **ओखाबुसोखाबु लुम्वात लुपा** भनेर गिल्ला गरेर त्यहाँपनि हौं दाजु भाइ हो भनेर बोलाए तर कसैले पनि वास्तै गरेनन्। त्यसोहुँदा हाङगाम **येमेनगाम** भनेर गिल्ला दिंदै त्यहाँबाट एकैचोटी मिवाखोला चाँबुक पुगेर हो दाजु भाइ हो भनेर बोलाउँदा मादेनछाँसाम्वा थरको थिलीबन्र्या नाम गरेको एउटा बुढो चोयाकेलाउँदैथिए। उनले सुनेर होइन कोमानिस के आपत परेर दाजु भाई हो, भनि गुहार मागी हिड्छ, को हो, केहो, केको आपत पऱ्यो यता आउ है भनेर बोलाए बोलाउँदा साम्बारा तुङ्दुङ्गेमाङ थिलि

वन्यो भएको गए। कोहो र के आपत परेरगुहार मागी हिंडेको होंभनी सोधे साम्वारा तुङ्दुङ्गेमाङले भन्यो म मानिस हुइन। कोकाहावाराहा देवको छोरा कान्छा साम्वारा तुङ्दुङ्गेमाङ जसले मलाई वोलाउँछ। त्यसलाई अन्नधनले भरिपूर्ण गराउनलाई त्यसरी वोलाई हिडेको हौं। तपाईले वोलाउनु भयो धन्यवात मलाई तीनवर्षे वोकाले वली भोगपूजा गर्नु, म अन्नधनले भरिपूर्ण गराई दिनेछु त्यसोभन्दा सो मुताविक तीन वर्षे वोकोलेपूजा गर्दा अन्नधनले भरिपूर्ण गराई दिए। त्यसरी पूजा आराधनागर्दा साम्वारा तुङ्दुङ्गेमाङको कुगुसिंनै सादेन छाँसाम्वा थिली वन्यो, त्यस साम्माङको धनी भए। त्यसपछि त्यहाँवाट मियाखोला तरी खोक्लीङ्को पाटावाट फर्केर आउँदा खोक्लिङ ओढारमा सधैं वनवासी तामफूङना वस्थे। त्यो साम्वारा तुङ्दुङ्गेमाङले तामफूङनालाई विवाहगरी स्वाश्नी तुल्याए। अनि एउटा छोरी पाए वोलि नआउँने लाटी त्यसलाई भ्याँकृहरूले लाटी वुढेनी चर्मकि वुढेनी भनेर फेदाङमाहरुले **'केःमा'** औ लाटी भन्दछन, फेदाङमाहरूले कुरा नवुझेर तुङ्दुङ्गेसाम्माङलेभेटे भने वहुलाउँछ। छटपटाउँछ वोली हराउँछ भन्छन् तर तुङ्दुङ्गेसाम्माङले केही गर्दैन। उनका स्वास्नी तामफूङनाले भेटे भने वहुलाउँछ, छटपटाउँछ उसका छोरी लाटीले भेटे भने वहुलाउँछ, छटाउँछ लाटीले भेटे भने वोलिनैहराई दिन्छ अर्थ यस्तो छ तर फेदाङमानै कुरा वुझ्दैन भने अरूलाई के थाहा र...। अव त्यसरी तामफूङनालाई त्यहाँनै छोडिराखेर त्यहाँवाट फर्केर उही कोकोहा वाराहा देवकोमा पुगेर तपाईका आदेश मुताविक मारी दिएँ। अवदेखि पानी धुमिलो आउँनेछैन भनी सुनाए, को कहा वाराहा देवले धन्यवात दिनुभयो। तुङ्हदुङ्गेसामाङको उत्पति यसरीभएको हुन, तर कसैकोभनाइ छ कि मियाखोलाको साम्वाले भोट्का एउटा भोटेनि केटी विवाह गरेकोले सोकुरा थाहापाइ वावुमाइतीहरूले त्यस साम्वालाई चुप्पीले रोपी मारेर तम्वर नदिमा वगाइदिंदा तुङ्दुङ्गेसम्माङ भयो भन्छन्। त्यसो हुनाले तुङ्दुङ्गे गर्दा वोकाको मुटु ज्युँदै झिकेर तोरमामा राखेको साम्वाको मुटुमा रोपेकाले यस्तो गरेको भन्ने भनाइ छ। जे होश जति



फेदाङमा धेरै, उति मुन्धुम भिन्ना भिन्दै हुन्छ, अर्कोतिर फेदाङमाहरूकोभुल के भने जो कुगुसिंलेभने जुनै साम्माङहोस् त्यसले जहिलेपनिपूजा गरेकै हुनुपर्छ। कुगुसिंबाहेक अरू नाता गोताले तीनखेप पूजा गरेपछि जुनै साम्माङहोस् जाहाँ तपाइको कुगुसिं त्यहाँ फर्केरजानु अथवा सुम्वोहुक्वा मेनइकओ भनेर पञ्च वाक्यागरी त्यसरीनै फेदाङमाले पनि मन्साइ पठाइ दिनुपर्छ। तर, यो कुरा फेदाङमा गर्दैगर्दात अनि अरू नातागोतालेपनि कुगुसिं जस्तै जहिले तहिले गरिरहनुपर्ने यो फेदाङमाहरूको कर्मवाद संशोधनीय छ। फेदाङमाः, साम्वा, येवाहरूले पनि कातिकुरा गल्ति र कतिकुरा सत्य छ, सो कुरा सोच विचारगेरेर सुधार गर्नुपर्नेछ गाथाका मुन्धुम छ।

❑❑❑

# सौता छोरामाथि आमाको आँखी डाही

आँखी र डाही तथा आहारिस भनेको सौता सौता आहारिस, दाजुभाई आहारिस र सौतेनी छोरामाथि आहारिस तिङदीङ नाहेन हारा मिक्सो सौतिनी छोरीमाथि आमाको आहारिस यसप्रकारको छ, माथिको अध्यायमा वाजाइवार इधुलुङमा गर्भमा वास वस्दा चेलीमाइतीको सम्भोग भए भनी लेखिएको छ। त्यसपछि वाजाइवाले वदनहाङमालाई अर्को विवाह गर्दा इधुलुङमा र वदनहाङमा सौतासौता हुन गए सो हुँदा वाजाइवाले फूलहान्दा इधुलुङमा मरिन र उनको छोरा आमावेगर टुहुरा हुँदा सौतेनी आमा वदनहाङमाको पासमा वसेको थिए। तर वदनहाङमाले सौताको छोरा हुन भनेर औधी सताउन थालिन् त्यसो हुँदा सौतेनी आमाको पिर खप्न नसक्दा इधुलुङमाको छोरा लाकेरेक र नामकेरेक घर छोडी वनजंगल पसी गए। वनजंगल पसेर वन तरूल खोजीखाँदा कसैको पीर खप्न नपरि स्वतन्त्र हुँदा खुव मोटाउन लागे। यता सौतेनी आमा वदनहाङमाले के चिताएको थियो भने वनमा अव त भोकले मरे ज्युँदो छैन भनेर चियोचर्चा गर्न गए। त्यसरी जाँदा कहाँको मर्नेहो खुब मोटाइ वसेको देखे, अतः के खाएर यति मोटाए भनी चियो गर्दा वनतरूल खाएको देखे, सो देखेर अवदेखि खावोस भनेर धागोको डोरो लगाएर पताल भसाइ दिए। वन तरूल धागो समान माथिवाट पसेर गई तलपातालमा ठूलो भएको कारण यसरी भएकोहुन् पताल भासिन्दा बाँकी खन्न लागे सो देखेर त्यसमा पनि तितो खानै नहुने विष हालि दिए।

वास्तवमा गाठा खान लागे, सो देखेर त्यसमा पनि तीतो खानै नहुने विष हाली दिए। फेरि सिस्नु खान लागे, सो देखेर छुनै नसकिने काँढा राखी दिए। यसरी जुनजुन चीज खाए, सो सो वनस्पतिमा खान नहुने विष हाली दिए त्यसरी रातदिन खेदोगर्दा घर छोडेर वनमा आयौं, अव वनमा पनि यसरी पिर दिएर वस्न दिँदैन भने। यो वनमा पनि नवसौं, जहाँपुगिन्छ त्यहाँ जाउँ भनेर उत्तरको वाटो लिएर जाँदाजाँदा जहाँ मेघ **नेनथकुम्म** सुति वसेको थियो त्यहाँ पुगे। त्यहाँदेखि उत्तर जाने ठउँनपाउँदा केही लागेना र जे होस् अव यही मेघका पटुकामा बाँधीयेर मरूङ भनी मेघका पटुकामा बाँधी सकिएको मात्र थिए। त्यसैवेला मेघ निन्द्रावाट ब्युँभेर गङयाँगगरी अवाज छोडेर सोधुङलेप्मुतेम्वेमाजाँदा ती पटुकामा बाधिने लाकेरेक र नामकेरेक पनि पटुकाले अल्लभेर तानीलगी माथि देवलोक सोधुङलेप्मुतेम्वेमापुगे यसरी पुग्दा देव लोकको देवता र पृथ्वीवासी मानव जातिवीच कुराकानी मिल्दैन। त्यसोहुनाले भोक लागेर मागि खाउँ भनी देवताको घरमा जान्छन्। आफ्ना छायाँ देवतामाथि परेकी अघि देवताहरू विमार हुइजान्छ अनि देवताहरूको देवारी ल्याएर मन्साई अक्षता फालि दिन्छ। त्यो फाली दिएको अक्षता ती लाकेरेक र नामकेरेकले टीपेर खान्छन्, फेरि अर्को घरमा जान्छन् आफ्ना छायाँ देवतामाथि परेको देवताहरू विमार हो, अनि त्यसरी नै मन्साई अक्षता फाली दिन्छ। त्यो टिपेर खान्छन्, त्यसो हुँदै जाँदा देव लोकको देवताहरू सवै विमारहुन लागे। यसरी अत्याचारहुँदा देवताको देवारीलाई जोखना हेराउँदा देवारीले जोखना हेरेर यसो भनेकी पृथ्वी लोकवाट दुईवटा भूत आएको रहेछन् ती भूतहरूको छाँया लागेकोले यस्तो विमार उठेकोदेखिन्छ भने। अव ती भूतहरूलाई के कसो गर्नुपर्ने हो, त्यसको उँपाय के छ भनी सोधे... देवारीले भनेकी चिन्ता वसेर मन्साइ पठाइ दिनुपर्छ भने, त्यसो भए लौ चिन्ता वश भनेर चिन्ता वसायो, देवारी चिन्ता वस्नलाई आफ्ना सरजाम माला लगाएर ढेङग्रो हातमा लिए, ढेङ्ग्रो भने हल्हलेको पात थियो। सोपात देखेर यो पातपनि ढेङ्ग्रो वज्छके भनेर औंलाले घोचि दिंदा हल्हलेको पात छेंडिये। त्यसरी छेडिन्दा देवारीले भने कि लौ भुतले वाण हानेर मेरो ढेङग्रो नै छेंडि दियो माहाविर गुरूहरूलाई ल्याउनु पर्छ उनलेमात्र मन्साउन सक्छ भनेर। माहाविर गुरूलाई ल्याए, माहाविर गुरू

आएर पैले माटोको हाति घोडा बनाई चेफलामाथि राखे। अनि भुतका खाजा सत्विउ पलविउ तयार पारेपछि चिन्ता बसेर हे पृथ्वीको भूतहरू हो, जाहाँ भएपनि यहाँ आउहै। तपाईहरूको भोक तिर्खा लाग्छ भनेर खाने पीउने बनाई राखी दिएको छौं है। साथै तपाईहरूलाई हिंड्दा डुल्दा दुःख हुन्छ भनेर हात्ति, घोडा बनाई राखी दिएको छ है। खाने पिउने खाएर अघाई आराम साथ हात्ति, घोडा माथि घुमिडुलि हिड्नु होस् है भनेर डाकेमा खानेकुरा देख्दा ति लाकेरेक नामकेरेक आएर सतविउ पलविउ खाएर अघाएपछि कति राम्रो हात्ती घोडा चढौं भनि जब चढेको मात्र थियो त्यसै वेला त्यो माहाविर गुरूले... चफलै सहित उठाई घोप्टोपारी दिंदा घोप्टीएर फेरि यही पृथ्वी तलमानै झरे यसरी झर्दा मात्र देवलोकमा शान्ति भएर देवताहरू विमार हुन छोडे। त्यसो हुनाले सौता छोरा माथि आमाको छोरा लाकेरेक र नामकेरेक अनि आमा लुपलि वदनहाङमाको पालादेखी भई आएको हुन्। साथै हिजोआज दशाग्रह सबै मन्साउन पनि अथवा झाँक्री मुन्धुम पनि यसै पालादेखि भइ आएको हुन। हिजोआज झाँक्री धामिहरूले दशाग्रहा सारेर माटोको मुर्तिहरू चेलासँगै जस्ताको त्यस्तै ठाडो राखी छोड्छन्। तर त्यसरी ठाडो छोडी राख्ने होईन, घोप्टो घोप्टाई दिनु पर्छ अनि मात्र भुतप्रेत तथा गह्रा दशाहरू घोप्टिएर पतालमा झर्छन भन्ने लिम्बुजनजातिको साम्जिक मुन्धुम जनश्रुति रहेको छ।

## मुक्कुबाहाङ

मध्य एसियास्थित सोधुङ मुनातेम्वे -विशाल मैदान र सोधुङलेप्मुवरक विशाल तलाऊ रहेको छ। मुनातेम्वे आसपास मंगोल नश्लका धेरै जनसंख्यामा मानिसहरूको आवाद फैलिएको थियो। अन्नवाली उत्पादनको कमीले खान नपुगी उब्जनी योग्य ठाउँको खोजमा त्यहाँका मानिसहरू विस्तारै विस्तारै पूर्व पश्चिम, उत्तर, दक्षिण गरी चारै दिशामा ठाउँसर गरी हिंड्न थाले। त्यो देखेर एकजना युमासामले पनि वसाई सर्ने विचार गरिन्। एकदिन आफ्नो टुहुरो दुईनाति र घरको एकमाउ भैंसीलाई लिएर दक्षिणतिर वसाई हिंडिन्। तर जाँदाको बाटोमा सोधुङलेप्मुवरक - विशाल तलाऊ पारगरी जानुपर्ने भएकोले त्यहाँ पुगी कसरी पारगरी



जाउँ भन्दै सोचविचार गर्न लागिन्। सोच विचार गर्दागर्दै रात परेकाले त्यहीा नजिकै रात काट्ने विचारले भैंसीलाई दाम्लोले बाँधिन् र शित छल्ने पाल टाँगेर एकरात त्यही विश्राम गरिन्। भोलिपल्ट विहानै उठी नातिहरूलाई भैंसीको पिठ्युमा राखिन्, आफाचाहिँ पुच्छर समाती भैंसीलाई तलाऊमा हेली दिइन्। माउ भैंसी तैरिंदै तैरिंदै कयौं घण्टामा तलाऊ पार भए पछि पुनः पिठ्युवाट नातिहरू ओरालिन् र दक्षिणतिरैको बाटो लागिन्। तीनदिन, तीनरात हिंड्दा हिंड्दा मुदेन तिब्वत हिमाल पारगरी वर्तमान लिम्बुवानको ताप्लेजुङ स्थित मापाङफे मावोरक छेउ आइपुगी बसोवास गर्न लागिन्।

आजभोलि भन्दाभन्दै, त्यही वस्दावस्दै दुईनातिहरूलाई पालन पोषण शिक्षा दिक्षा दिंदादिंदै दुवै जवान उमेरका भए। युमाले दुवै नातिलाई वोलाई आ-आफ्नो कर्तव्य पालन गर्न सिकाई खटाउन थालिन्। यस्तैगरी दिनानुदिन समय बित्न लागिरहेको थियो। एकदिन युमा खुशी भएको मुहुर्तमा दुवै नातिलाई आफुँकहाँ वोलाई नजिक वस्न लगाइन् र आ-आफ्नो काम गर्ने तरिकाको वारेमा भन्न लागिन् तिमीहरू अव जवान भयौ, आ-आफ्नो नाम निशान राख्नलाई एक एकवटा काम गर। जुन तिमीहरूकै लागि हुनेछ। जेठोले वनजंगल फाँडी खरको चुल्ठो गाँठोपारि सुक्न दिने र सुकेका दिन डढेलो लगाउने। कान्छाले फुटेको हाँडीको चोइटा रोप्ने, भनि काम अह्राइन्, भने जस्तैगरी दुवैले काम सकेर युमा कहाँ आई आ-आफ्नो नाम निशानको अंश मागे, युमाले पनि अंश दिंदै भने, म खोज्दै जाँदा जसजसको नाम निशान भेट्छु, त्यो त्यस त्यसको हुन्छ, भनि तीनैजना नाम निशान हेर्न गए, जाँदा त जेठाको के हि छैन, सबै डढेर गएछ। कान्छाको मात्रै जता हेर्‍यो, उतै हाँडीको चोइटै चोइटा भेटियो, त्यो सवै कान्छाको निशान भएकोले सवै कान्छा कै अंश हो भनि दिइन्। जेठाको अंशमा केही नपरेकोले निराश भई युमा र भाइको पछि पछि लाग्दै तीनैजना घर आइपुगे। जेठा नाति मनमनै सोच्न लाग्यो, मैले पनि काम गरेको थिएँ। मेरो नाम निशानको अंश किन पाइन, भन्दै गहिरिएर मनन गर्दा त काम गर्ने हनुमान पगरी गुथ्ने ढेंडु भने भैं भई यो सव चालबाजी गर्ने युमासाम नै हुनुपर्छ भनी युमालाई पिरोल्न थाल्यो।

त्यही अंशको निहुँमा सधैं युमा र जेठा नातिको झगडा पर्न थाल्यो।
युमा पनि नातिको पिरलोदेखि हारदिक्क भइन्। आखिर युमाको पनि केही सिप नलागेपछि अव यसलाई एक अमर शक्ति दिनुपऱ्यो भन्ने विचार ठानी, जेठा नातिलाई नजिक वोलाउँदै बस्न लगाइन्। अनि भन्न लागिन्, म तालाई मुक -अमर शक्ति दिन्छु, मुख आँ गर भनिन् र आँ... गरेपछि युमाले पोल्टाभित्रवाट तीनवटा चनाको दाना जस्तो मुक् अमर शक्तिको दाना मुखमा खुवाई दिइन। मुक्को दाना निलेपछि क्षणभरिमै उनको शरीरले भयंक्रर रूप लिन थाल्यो। जहाँसुकै लडी, गरी खान सक्ने भइगयो। बाटामा आउँदा खेरि सँगै ल्याएको माउ भैंसीलाई माया गर्नु, यसले हामीलाई ठुलो मद्दत गरि बचाएको छ। यसको मासु खाने काम कहिल्यै भुलेर पनि नगर्नु है, भनि युमासामले दिनुभएको उपदेशको समेत पर्वाह नगरी शक्तिको घमण्ड गरी हिंड्न थाल्यो। युमासामको उपदेशलाई विचारै नगरी पछि खुंडाले चाट्दै काटकुट गरी भैंसीको मासु खान थाल्यो। तर कान्छा युमासामको उपदेशलाई ध्यानमा राखी युमाकै आचार विचार संहिताअनुसार विभिन्न कर्महरूको पालन गर्दै मावोरक आसपासका गाउँघरहरूमा समेत, त्यो कर्म विधिहरूको प्रचारप्रसार गरी कायम राखेकाले उनलाई सवैले मावोरकका मावोहाङ भनी चिनिन लागे। कान्छाका सन्तानहरूले आजसम्म प्राय भैंसीको मासु खाँदैनन्, तिनैका सन्तान मापाङफे मावोरक आसपास ताप्लेजुङमा आजसम्मै फैलिएर बसेका छन्।

जेठो मुक्कुवाहाङ मावोरक छाडी तीनजना मानिस साथमा लिई घुमफिर गर्न लागे। त्यसमा एकजना आफ्नो पत्नी, गुलेली मट्याङग्रा, झोला वोक्ने लिगुवा, धनुवाण वोक्ने तोङगुवा, र आफुसमेत गरी जम्मा चारजनाको जत्था भई जहाँसुकै घुम्ने डुल्ने गर्न लागे। युमाको मुक् प्राप्तगरी आफ्नो प्रभाव चारैतिर जमाउँदै एक प्रवासी भई धनुवाण वोकी हिंडडुल गर्ने मुक्कुवालाई सवै मानिसहरू मुक्कुवाहाङ भन्न थाले।

त्यसवेला मोरङ जिल्लास्थित किराती मोरङ राजाले तमोर नदीको गडतिरमा हाक्पारा छथर मुनिको जागत -भन्सार लिने प्रथा चलाएको थियो। त्यो जागत लिने काम आफ्नो हातमा पार्नसके राम्रो हुन्थ्यो भ न्ने उद्देश्यले, एकदिन तमोर गडतिरै गडतिरको बाटोगरी मोरङ राजाकहाँ भेट गर्न गए।

राजासँग भेटघाटगरी मुक्कुवाहाङले जागत लिने कामको जिम्मावाल भई आफ्नो कार्यभार सम्हाल्न थाले। त्यसवेला उभो देशका मानिस र मोरङका मानिसहरू तमोर गडतिरकै बाटो भई हिंड्नु पर्दथ्यो। जागत लिने ठाउँको बाटैमा एउटा ठूलो कोल्टे ढुङ्गा तेर्सिएको थियो। त्यसमाथि हिंडेर पार गरी तल माथिका मानिसहरू आवत जावत गर्दथे। तर मुक्कुवाहाङले जागत लिने विधि नयाँ लागु गरेका थिए। उनले त्यो कोल्टे ढुङ्गामाथि सजिलो ठाउँमा आफु वसी अप्ठ्यारो ठाउँमा काउलो चिप्लो घोटेर छ्याल ब्याल पारि दिएका हुन्थे। त्यसैमाथि हिंडेर जाने नलडी जान सक्थ्यो, त्यसलाई जागत लिदैनथ्यो, त्यस्तो मुक्कुवाहाङको पासोदेखि डरैले मानिसहरू जागत तिरेर सजिलो बाटोगरी जाने गर्दथे। यस प्रकारको नियम चलाई मुक्कुवाहाङ मोरङे राजाको जागतका जिम्मावाल भई वसेको छ भन्ने कुरा अजरप्पाहाङलाई पनि थाहा भयो। उनी जिद्दीवाला भएकोले एकदिनको मौका मिलाई अजरप्पाहाङ पनि त्यस ठाउँमा गए, त्यहाँ पुगेर मुक्कुवाहाङलाई हेर्दै भन्न लागे। वाटो हिंड्नलाई पनि कर लाग्ने? यो कस्तो किसिमको नियम हो? कसले तिर्छ कर? लौ मत नचिप्लिकन जान्छु।

त्यो कुराको जवाफ मुक्कुवाहाङले दिंदै भने, लौ नचिप्लिकन गयौ भने जागत लिन्न चिप्लेर लड्यौ भने जागत लिन्छु, हुन्छ म पनि मेरो भनाइ पुग्यो भने खुशी छु भन्दै अजरप्पाहाङ चिप्ले ढुङ्गाको वाटो गरी हिंड्न लाग्यो। दुई, तीन पाइला मात्र के हिंडेको थियो, चिप्लेर ड्वाङगै ढुङ्गामाथि पछारियो, मुक्कुवाहाङले तुरून्तै समाती पाता कसेर मोरङे राजा कहाँ पुऱ्याई झ्यालखानामा थुनि दिए। ठिक त्यसैवेला मोरङे राजा र इमेप्पाहाङहरूको घमासान युद्ध भइरहेको थियो। त्यस युद्धमा मोरङे राजालाई धेरै नोक्सानीको सामना गर्न धौ-धौ परिरहेको थियो, यो कुरा बुझेर अजरप्पाहाङ जेलखाना भित्र सिंह गर्जेको जस्तै गरी गर्जिरहेको थियो। मलाई वन्दी बनायो, नत्र त्यो इमेप्पाहाङहरू एकएक छाक पार्थे, भन्दै गर्जन्थ्यो। यो कुरा पालेहरूले सुनेपछि तुरून्तै राजाकहाँ पनि

पुऱ्याइहाले। राजा स्वयं उनको पासमा आई सोधे, तिमी इमेप्पाहाङहरूलाई ध्वस्त पार्न सक्छौ? अजरप्पाहाङले उत्तर दिँदै महाराज मेरो माग पूरा हुन्छ भने, सक्छु भनिदिए। तव मोरङे राजाले पनि लौ भन तिम्रो माग के हो? अजरप्पाहाङले माग्दै भने, मलाई भएभरको हतियार र पहिलो बेते लैनाको काँचो दूध, एक पाथी चाहिन्छ। भएभरको हतियार थुपारी दिए सवै समाउँदै भाँच्दैगरी कुनै वाँकी राखेनन्, र भन्न लागे महाराज मेरो लागि कुनै योग्य हतियार भएन, यो कुरा राजाले वुझेर असाधारण हतियार लिन पठाए।

क्षणभरमै ल्याएर दिए, हतियार समाउँदै अजरप्पाहाङले भने महाराज यतिको हतियारले मलाई काम दिन्छ, अव मलाई एकपाथी काँचो दूध दिनुहोस्, दूध पनि दिए। काँचो दूधको भाँडो दुई हातले समाउँदै भुईंमा नराखी लगातार पिएर सके, अनि भाँडो भुईंमा राख्तै, खुंडाको विड दुई हातको मुट्ठीले कसेर हावा समान वेगले इमेप्पाहाङहरूको गाउँ गाउँ गौंडा गौंडा कुद्दै जसलाई भेट्यो, उसलाई छपाछप छिनाल्दै तीन दिन, तीन रातसम्म इमेप्पाहरूलाई थाहा नै नभई मुला काटे झैं काट्दै हिंडे। सारा इमेप्पाहहरू हाहाकार हुँदै भागे। अजरप्पाहाङ पनि इमेप्पाहाङहरूलाई परास्त पारि फर्किए। उसको शरीर रगतै रगतले निथ्रुक्क भएर खुंडा समातेको दाहिने हात खुनमा लतपतिएको जस्तो थियो। खुंडाको विड र समातेको हात रगतले रक्तिम भई जोडिएकोले हात खुंडा छुटाउन तातो पानी उमाली धोई पखाली वल्ल छुटाए मोरङे राजा खुशी हुँदै अजरप्पाहाङलाई भने, म तिम्रो वीरताको साहस देखेर ज्यादै प्रशन्न छु। लौ, जे माग्छौ माग, म त्यही दिन तत्पर छु, आज्ञा सिरोपर गरी अजरप्पाहाङले पनि भने, महाराज मलाई केही चाहिँदैन। त्यो जागती मुक्कुवाहाङलाई मात्र मार्न पाउँ भनी माग गरे। मोरङे राजा चलाक भएकाले सोचेर, लौ पाउँछौ भनिदिए। अजरप्पाहाङ मुक्कुवाहाङलाई मार्न पुरानो रिस फेर्छु भनी वाटो लागे, मोरङे राजाले पनि आफ्नो जागतीलाई मार्ने भो भनी वचाउन अजरप्पा पुग्नु अगावै राजदुत पठाए। मुक्कुवाहाङले पनि राजदुतको सम्पूर्ण कुरा वुझेपछि तुरून्तै ठाउँ छोडी गड्तिरको बाटो



उकालै उकालो लाग्यो। मुक्कुवाहाङ उकालो वाटोगरी भाग्दैछ भन्ने सुँईको पाएर अजरप्पाहाङ पनि पिछा गर्दै खेदो गर्न लाग्यो।

मुक्कुवाहाङ निभु खोलै खोलाको शिरमा पुग्दा, अजरप्पाहाङ पनि मलाई मार्न पिछा गर्दै साप्सु भन्ने ठाउँमा आइपुगेछ भन्ने थाहा पाए। अनि मुक्कुवाहाङले अजरप्पाहाङको शक्ति कति रहेछ भन्ने विचार गरी परीक्षणको लागि निभु खोलाको शिरवाटै एउटा वाण छोडिदिए। त्यो वाण अजरप्पाहाङ रहेको नजिकै कडा पत्थरको पहरामा ठक्कर खाई वज्र परे समानको आवाज आउँदा उनी मुर्छा परी वेहाश भई लडे। केहीबेरपछि होस फर्केर सोच्न लाग्यो। अहा, मुक्कुवाहाङलाई म एक्लै मार्न अवश्य सक्दिन, यसलाई मार्न अरूको सहयोग आवश्यक ठानी साप्सुवाट फर्कि आए।

साप्सुस्थित रहेको त्यो पहरा ढुङ्गा वाणले दुई चिरा परी वीचवाट पानी निस्केर वग्दछ। जुन घटनाको सम्झनामा राम नवमीको नामले वार्षिक साप्सु मेला लाग्ने गर्दछ, उसवेलाका आपुङगी राजाहरूसँग सरसल्लाह गरी अजरप्पाहाङले मुक्कुवाहाङलाई मार्ने षड्यन्त्र गरी बुद्धिमानी पूर्वक सुरू गर्न थाल्छ। उनले सर्वप्रथम मुक्कुवाहाङको साथमा रहेका, लिगुवा र ताङगुवालाई गोप्यरूपमा आफूकहाँ बोलाई फकाउन थाल्दै, भन्थ्यो कि तिमीहरू मुक्कुवाहाङको भरौटे भएर कति दिन हिंडडुल गरी रहन्छौ? बरू हामीसँग लाग न, लाग्यौ भने जग्गा जमिन, छोरीचेली विवाह दान गरी दिन्छौं, भनी लिगुवा र तोङगुवालाई फुरूक्क पारे। दुवै खुशी हुँदै, हुन्छ हजुर, तपाईहरूसँग लाग्दा हामीले के गर्नुपर्छ? गर्न मञ्जुर छौं भनिदिए। अजरप्पाहाङले पनि प्रश्न गर्दै भने, त्यसो भै तिमीहरूले मुक्कुवाहाङलाई कुनै मौका पारी मार्न सक्छौ भनी सोध्दा दुवैले सक्छौं हजुर भनी बिदा लिएर त्यहाँवाट फर्किए।

केही दिनपछि लिगुवा र ताङगुवाले पति पत्नी मध्यरातमा सुतिरहेको मौका छोपी उनकै धनुवाणले हानीमार्ने निधो गरे। संयोगवश त्यस्तो मौका पाएर मुक्कुवाहाङलाई धनुवाणले हाने, मुक्कुवाहाङलाई वाणले लागेको थाहा भई जुरूक्क उठेर हेर्दा लिगुवा र तोङगुवा ढोका वाहिर भागिरहेको देखि श्रीमतीलाई वाण शरीरवाट निकाल्दै भन्यो। आफ्नै

घरमा शत्रु परेकाले अव मैले बाँच्न बेकार छ। मेरो प्राण त्याग्न बाध्य छु, म आफ्नो अमर शक्ति –मुक् त्याग्न पाक्वावरक सुके पोखरी जान्छु, भनी विहानै त्यहाँवाट श्रीमतीको साथमा मुक्कुवाहाङ वाटो लाग्यो।

सुके पोखरीमा पुगी मन्त्र जप गर्दै अमर शक्ति निकालेर मुट्ठीमा लिादै, प्रण गर्न लाग्दै भन्यो, जसले यो पोखरीमा एकजोडी सेतो काग र एक पाथी उपियाँ भरेर पूजागरी दिन सक्छ, उसैले मात्र यो मुक् प्राप्त गर्न सकोस् भनी अमर शक्ति त्यागी दिए। त्यसपछि मुक्कुवाहाङ चारखोलाको कोक्ने भन्ने ठाउँमा पुगी वस्न लागे। केहीदिन मात्र वस्न लागेको थियो, त्यही उनको मृत्यु भयो, साथमा रहेकी पत्नी एक्लै रूँदै लाशलाई पर्खेर वसी रहे।

अर्कातिर अजरप्पाहाङहरू मुक्कुवाहाङ कहाँ पुगेर के भए भन्दै पिछागरी हिँडिरहेका थिए। पिछा गर्दै जाँदा त चारखोलाको कोक्लेमापो, लाशलाई रूँघेर उनको पत्नी एक्लै रूँदै वसिरहेकी रहेछन्। यो अवस्था देखी लाशलाई त्यही पुरपार गरी मृतकको पत्नीलाई अजरप्पाहाङले सोध गर्न लागे, वहिनीको माइतीघर कहाँ हो? मेरो माइतीघर चैभुवाको साँवाहरू हुन् भनिन्। मुक्कुवाहाङको शक्तिको रहस्य के हो भनी धेरै कुराकानी गरी वुझ्दा त, अचम्म लाग्दो रहेछ। उनी आफ्नो बच्चा जन्मनासाथ मारि दिने अनी पत्नीको स्तनपान आफैं गर्ने भएकोले उनको सन्तान एउटै पनि थिएन। तर, जुनवेला उनको मृत्यु भएको थियो, त्योवेला उनको पत्नी गर्भिणी अवस्थामा थिइन्। यो देखी अजरप्पाहाङले उनको माइतीघर पुऱ्याए? अनि के भनी माइतीमा जिम्मा लगाए भने, हेर तिमी हाम्रो शत्रुको श्रीमती रहेछौ, तिमीले छोरो जन्माए हामी शत्रु साधना गर्दछौं। छोरी जन्माए राम्री हुँदा बुहारी बनाउन लैजान्छौं, नराम्री भए नोकरनी बनाउन लैजान्छौं, जन्मनासाथ हामीलाई खवर दिनु हामी हेर्न आउँछौं, भनी चेंभुवाहा साँवाहरूलाई जिम्मा लगाई त्यहाँवाट अजरप्पाहाङ फर्कि आए।

चार महिनापछि मुक्कुवाहाङको छोरो जन्मियो, तर मार्लान् भन्ने डरले मावलीहरू एक मत भई छोरी जन्मेको खवर चेंभुवावाट अजरप्पाहाङलाई पठाए। खवर पाई अजरप्पाहाङ मुक्कुवाहाङको गर्भ हेर्न



चेंभुवा आउँदैछ भन्ने सुईको पाउना साथ मावलीहरूले बच्चाको लिंग डोरीले बाँधि पछाडि घुमाई दिई ठिक्क बच्चीको योनी जस्तै पारी राखे। हेर्दा त, भने जस्तै छोरी नै जन्मेछ, छोरी नै जन्मेको देखी अजरप्पाहाङले भन्यो कि ल आजको मितिले ठिक १८ वर्षको हुँदा फेरि हामी हेर्न आउँछौं राम्री भए बुहारी बनाउँछौं नराम्री भए नोकरनी बनाउँछौं, १८ वर्षको पुग्दा पुनः हामीलाई खवर गर्नु हामी हेर्न आउँछौं भनी फर्किए।

मुक्कुवाहाङको छोरो पालन पोषणको राम्रो व्यवस्थाले गर्दा दिनदिनै हुर्कँदै बढ्दै गए। उनका मावलीहरूले बाल्यकालदेखि नै अस्त्रशस्त्र विद्या गोप्यरूपमा दिन लागे। बालकले उमेरअनुसार पाउनु पर्ने नैतिक शिक्षा दिक्षा आमा र मामाहरूबाट पाइरहेको थियो। पछि जवान हुन लाग्दा उनलाई राजनीति, कुटनीतिमा पनि उत्तिकै परिपक्व गराउँदै लगे। १८ वर्षको हुँदा हातहतियारको विद्यामा, राजनीति, कुटनीति विद्यामा, आफु हृष्टपुष्ट भएजस्तै भयङ्कर पितासमानको भइसकेको थियो।

उता आजरप्पाहाङ पनि खवर त यतिवेला नै दिनुपर्ने किन ढिलो हुँदैछ, राम्री भोकी नराम्री भो भन्दैं मनमनै सोच्न लागेका थिए। ढुङ्गा खोज्दा देवता पाए झैं उतिखेरै चेंभुवाबाट एकजना मानिस हेर्न जानुपर्ने खबर लिएर आयो। अजरप्पाहाङ पनि खबर पाएको भोलिपल्ट बिहानै दुई चारजना मानिसको साथमा मुक्कुवाहाङको छोरी हेर्न भनी चेम्भुवाको बाटो लाग्यो। मावलीहरूले पनि मुक्कुवाहाङको छोरोलाई सुन्दरी छोरीको भेषधारण गर्न लगाई १८ वर्षपछी केटी हेर्न आउने अजरप्पाहाङको प्रतीक्षागरी बस्न थाले। नभन्दै अजरप्पाहाङ टुप्लुक्क आइपुग्यो, उनको स्वागत गरी बस्न लगाई केटीसमेत देखाए। केटी हेर्दा साह्रै राम्री देखेकोले हामी बुहारी बनाई लैजान्छौं भने। केटीको आमाले पनि ठिकै छ लैजानुहोस्, तर हामी छोरीचेली दिई पठाउँदा एकैचोटी दान दाइजो वकसपत्र समेत दिई पठाउन पाउँछौं कि पाउँदैनौं भनी सोधिन्। अजरप्पाहाङले पनि पाउँछौ भनेपछि केटीको आमाले पनि त्यसोभए एउटा शर्त तपाईहरूले मान्नुपर्छ भनिन्। केटापट्टिकाले पनि हुन्छ मान्छौं भनेकाले गोप्यरूपमा छोरीलाई दाइजो दान वकस भनि डोलीमा तरवार हतियार लगाई बिर्को बन्द गरी दिइन्। त्यस्तै अन्य सरसामानहरू ठिक पारी सबैको अगाडि

सत्य वाचाको शर्त राख्दै भनिन्, **येत्नाम, फाङनाम थाल्लिक सिम्बो फेम्बो हम्मेल्लो, साफ्री माङदाङ फुम्मेन्लो**, अर्थात् ८,९ दिनसम्म वर बधुले आपसमा लसपस नगर्नु, डेली नउघारी दिनु, सरसामान नछोई दिनु, माइतीहरूसमेत बसी पाउ भतेर खाई खुवाई सकेपछि मात्र आफु खुशी गर्नु है, भनी शर्त राख्दै छोरी पठाइन्। अजरप्पाहाङ केटीको दान वकस र उनका माइतीहरूसमेत लिएर आफ्नो गाउँको बाटो लागे। यता गाउँमा केटीलिएर आउँदैछ है भन्ने खवर सुनेर गाउँलेहरू सबै विवाहको मुहुर्तमा हर्ष उल्लासका साथ रमाइरहेका थिए। केटी ल्याई पुऱ्याई धुमधामसँग शुभविवाह अजरप्पाहाङको घरमा सु-सम्पन्न हुँदै गयो। वेहुलाका घरमा एउटी बुढी युमासाम पनि बस्थिन् उनले नौली बुहारीको चालचलन शिलस्वभाव, राम्ररी निन्दा गर्न लागिन्, युमासामलाई पटक्कै छोरीको शिल स्वभाव नभएको देखि शंका हुन थाल्यो र चित्त नबुझेकोले घरमा भएका बुढापाकाहरूलाई पनि आश्चर्य मान्दै कोनी है, कोनी तिमीहरूका नयाँ बुहारी त, म हेर्न जान्दिन है, भनी सुनाउने गर्थिन्, तर, बुढी युमासामको कुरा कसैले पत्याएनन्। उल्टै बुढीलाई पो कस्ती गनगने रहिछे, मर्ने वेलाको भीर खोज्ने जस्ती भनेर सराप्थे।

समयले पर्खिएन, पाउ भतेरको दिन विहानैदेखि दुलहीले तोङवा भर्न लागिन्, माइतीहरूलाई शुद्ध तोङवा भरि राखिन्, बाँकी आगन्तुक दुलहापट्टिका मानिसहरूलाई विषयुक्त तोङवा भरी ठिक्क पारिन्। दुनामा फिलुङगेको अचारसमेत ठिक्क पारी सर्वप्रथम शुद्ध तोङवा अचार माइतीहरूलाई राखि दिइन्। त्यसपछि विषयुक्त तोङवा र अचार दुलाहा पट्टिकालाई राखि दिइन्। सवैले आज पाउ भतेरको दिन नौलो दुलहीले भरि दिएको तोङवा भनी प्रशंसा गर्दै पिपा लगाई तोङवा पिउन थाले। केहीवेर पछि कोही वहोस् भई लडे, कोही रन्थनिन थाले, माइतीहरूलाई केही नभएकोले यही हो मौका ठोक, भन्ने इशारा दुलहीलाई दिएपछि दुलहीले त्यही मौका छोपी डेलीवाट धारिलो तरवार निकाली दुलहापट्टिका मैं हुँ भन्नेहरूलाई छपाछप मुला काटे झैं काटि मारे, कैयौं घाइते भए, कैयौं भागेर सुईंकुच्चा ठोके। अजरप्पाहाङ समेत डराएको देखि बचेका दुई चारजना बुढापाकाहरू आपसमा सल्लाहगरी दुलहीको यस्तो भयङ्कर



शत्रु साधना गर्ने कुटनीति बुझी डरले पाउ पर्दै भन्न लागे, तपाईलाई हामीले चिनेनौं, हजुर माफ गर्नु होला, तपाई हाम्रै दाजुभाइ हुनुहुँदोरहेछ, अव उप्रान्त तिमीले पाउने हक हिस्सा जगर वगर समानरूपमा पाउनुहुन्छ, हामीलाई आफ्नै दाजुभाइ सम्झी यो युद्ध रोक्नुहोस्, भनी अनुरोध गरे। त्यसपछि मात्र शान्त भई, सन्धि सम्झौतागरी दुलहीले आफ्नो सकल स्वरूप देखाए। दुवै पक्षका सँगै बसेर भन्न लागे, आज जे जस्तो भयो, भइगयो, आइन्दादेखि कसैले पनि यस्तो नगरौं भन्ने सत्य वाचा बाँधे। मुक्कुवाहाङको छोरालाई उनीहरूले हामी पान्थर उत्तर वस्छौं, त्यही गएर मिली वसौं, जाऔं भने मुक्कुवाहाङको छोराले पनि ठिकै छ केही सालभरको लागि म मावली चेम्भुवा नै गएर वस्छु त्यसपछि छँदैछौंनी भन्दै विदा भई उनी चेम्भुवाको बाटो लागे।

मावली पुगेर वस्न लाग्दा लाग्दै मुक्कुवाहाङको छोरोलाई मावलीहरूले नै विवाह गरी दिए। उनले त्यो दिनदेखि गृहस्थी जीवन प्रारम्भगरी समय विताउन थाले। त्यसवेलाका महिलाहरू पहाडमा टाढा टाढा सम्म दाउरा, घाँस, मेलापात र पानी पधेंरो जाने गर्दथे, अझै पनि गर्दोछन्। यसप्रकार उनको पत्नीले मेलापात गर्नु गएको वेला वनकेराको भ्याङ्मुनी जेठा छोराको जन्म दिएकोले लावुङमासिं मुनि वसेर जन्मिएकोलाई लावुङमा लादुङमा वाट स्थान विशेषको नामाकरण अप्रभंश हुँदै 'लादो' हुन गएको र पछि फेरि कान्छो पनि दाउरा घाँस काट्न जाँदा जंगलमा सउरको रूखमुनि अर्थात् चिक्चोसिं मुनि जन्म दिएकोले उनको नामाकरण पनि चिक्चो हुनगई जेठो लादो चेम्जोङ र कान्छो चिक्चो चेम्जोङ गरी दुईभाइ मुक्कुवाहाङको नातिहरू भए। यसप्रकार चेम्जोङहरू दुईथरिका हुन गए। जेहोस्, युमासामको जेठो नाति मुक्कुवाहाङपट्टिका नाति, पनाति, खनातिहरू लिम्वुवान भरिनै चिक्चो चेम्जोङ र लादो चेम्जोङ दुई थरीका भई प्रसिद्ध हुन गएका छन्, भने कान्छा नाति मावोहाङ पट्टिका नाति, पनाति, खनातिहरू मावो, मादेन, फेन्दुवा र यक्सोवा थरले विभुषित भइरहेका छन्।

## जयजिते र खलबले

आजभन्दा लगभग ३०० वर्ष अघि पान्थरको फाक्तेप डाँडागाउँमा याङमुन्दे नामको मानिस घरजमगरी बसेका थिए। उनका जयजिते र खलवले नाममा कहिल्यै नछुट्ने दुई छोराहरू थिए। दुवैजना माछीजाल खेल्न, शिकार मार्न र कुन्दमल खोज्न सिपालु थिए। त्यसैले कहिल्यै काहिँ पिताको आज्ञाले वनजंगल खोला खोल्छी हातहतियार माछीजाल वोकेर घुम्न डुल्न सँगसँगै जान्थे। कहिलेकाहिँले गाई, भैंसी चराउन गोठवाट पञ्चमीको डाँडापाखामा पनि जानु पर्दथ्यो, घरभित्रबाट याङमुन्देले दुवै छोराहरूलाई वोलाउँदै भने,

**याङमुन्दे**, ए जयजिते, खलवले यहाँ आओ, पिताको आवाज सुनी दुवै हतारिँदै पिताकहाँ पुग्दै ...

**दुवै** : किन वोलाउनुभएको वुवा? भनी सोधे। याङमुन्देले पनि ...

**याङमुन्दे** : आज वेलैमा जंगल गई कन्दमुल खोजेर ल्याउनु, माघेसंक्रान्ती मनाउनुपर्छ, भनी दुवैलाई जंगल जाने अनुमति दिए। उनीहरू पनि जंगल जानु भनेपछि हुरूक्क हुने ती दाजुभाइ खुशीले हतार हतार सरसामान झोला धनुवाण, माछीजाल वोकी घरवाट निस्की जंगलतिर लागे। कन्दमुल खोज्दै जाँदाजाँदै सिवा खोला र निवु खोलाको दोभान पुग्न लागिरहेको थियो। चराचुरूङ्गीको रोदनीय स्वर अनि खोलाको सुसाईले निम्त्याई रहेको थियो, जयजिते र खलवले खोलाको वगरमा टुप्लुक्क पुग्यो, अनि दुवै माछा मारौं कि कन्दमुल खोज्न जाऔं भनी विचार मन्थन गरिरहेका थिए, त्यसैवेला कतावाट हो कुन्नी पत्तै नपाई एकजना अपरिचित युमा नजिकै उभिएर सोध्न थालिन्।

**युमा** : तपाईहरू को हुनुहुन्छ चिन्न सकिन नी, –जयजिते अगुवा हुँदै ।

**जयजिते** : हामी परदेशी हौं, वजै भने।

**युमा** : अनि यहाँ के गर्न आउनुभएको त? 'खलवले हतारिँदै'

**खलबले** : वजै हामी शिकार खेल्छौं, कन्दमुल खोज्छौं, र माछा पनि मारौं कि भनेर यहाँ आएको नी भनेपछि 'युमाले सोधिन्'।



**युमा**: उसो भए कन्दमुल कहाँ पाइन्छ? जयजिते जवाफ दिँदै...

**जयजिते** : ठुलाठुला वनजंगलमा पाइन्छ नी वजै युमा फेरि सोध्छिन्

**युमा** : यो कन्दमुल कसरी खाइन्छ? जयजिते तरिका वताउँदै

**जयजिते** : धोइपखाली काँचै पनि खाइन्छ अझ पोलेर पकाई खाए झन मिठो हुन्छ, वजै इच्छा प्रकट गर्दै

**युमा** : खोई, म पनि अलिकता चाखी हेरौं न जयजिते सँग ठट्टा गर्दै

**जयजिते** : तपाईलाई पनि कन्दमुल खान मन पर्छ कि क्या हो।

**युमा** : होइन, कन्दमुलको स्वाद कस्तो हुँदोरहेछ विचार गरौं कि भनेर नी।

जयजिते र खलवले दुई दाजुभाइले युमाको मनसाय वुझेपछि, युमालाई वगरमा ढुङ्गाको पिरा दिएर वस्न लगाई कन्दमुल पोलेर चखाउने विचार गरे। दुवैले क्षणभरमै आगो फुकी कन्दमुल भुङ्ग्रोमा हालेर पाकेपछि वजैलाई '**युमा**' पातमाथि राखेर खान दिए, स्वादिष्ट भएको आभासमा फेरि युमाले ...

**युमा** : माछा पनि मारन, पोलेर चाखौं, भनिन् युमाको अर्कोपनि मनसाय वुझी माछीजालले खोलाको माछा छोपी पोलेर खान दिए, युमा ज्यादै खुशी भएर, भन्न लागिन्, तपाईहरूले खान दिनुभएको कन्दमुल, माछा दुवै साह्रै मिठो रहेछ, अव म तपाईहरूलाई के दिउँ छैन साथमा केही ल्याएको भनी आशिर्वाद दिन लागिन्, सदा तपाईहरूले चिताएको पुगोस् है भन्दै युमा वाटो लागिन्।

दाजुभाइ पनि पिताको इच्छा पूरा गराउनलाई प्रशस्त माछा कन्दमुल कुम्ल्याएर उकालो वाटो लागे, वाटोमा आपसमा कुराकानी गर्दै यो कस्ती वुढी रहिछे, घर, थर पनि वताएन, कहाँ वस्ने होला, त्यो पनि सोधिएन, भन्दै साँझतिर घर आइपुगे, पितालाई माछा, कन्दमुल देखाए पिता पनि माघेसंक्रान्ति सप्रिने भो भनी खुशी भए।

## प्रथम चरण

केही दिनपछि फेरि पिताको आज्ञा पाएर जयजिते र खलवले

शिकार खेल्न भनी धनुवाण भिरेर वनजंगलको वाटो लागे। उनीहरूले हिंड्ने वाटो प्रायः ती दुई खोलाको दोभान भएरै जानु पर्दथ्यो। जाँदाजाँदै युमालाई भेटैकै ठाउँमा अचानक एक युवती सुन्दरी केटीसँग भेट भयो। कहाँकी केटी रहेछन् भनी दाजुभाइ मख्ख परी हेरिरहेका थिए, त्यसैवेला युवती नजिकै आई सोध्न लागिन्।

**युवती** : आत्तान्नुवे हजुर, थे थे चोकी केवात्सिवा वे? खलवले कुरा काट्दै...

**खलबले** : हेक्याङ हेने आत्तान केयुङमा वे? युवती उत्तर दिँदै

**युवती** : आङगा ग थो याक्चाना केयुङमारो, भनिन्।

जयजिते र खलवले दुवै एउटै परिचय दिइसकेपछि सोध्न लागे

**जयजिते** : याक्चाना कहाँ पर्छ, त्यो कस्तो ठाउँ छ? भनी सोधेकोले उनीहरूको मनसाय बुझी युवतीले भनी।

**युवती** : त्यसोभए मेरो घर याक्चाना हेर्न जाउँ न त, भनिन्, र दुई दाजुभाइ मञ्जुर भई तीनजना भएर याक्चानाको बाटो लागे।

दुवै दाजुभाइ नै आज नयाँ मान्छेको नयाँ घर गाउँ हेर्न पाइने भो भनी खुशीको कौतुहलता वोकेर, युवतीका गफ सुन्दै याक्चानाको वाटो अघि वढी रहेका थिए।

युवतीका मिठा मिठा गफ सुन्दै, उकाली ओराली वाटो काटेको पत्तै नपाई याक्चाना युवतीको घर आँगनमा टुप्लुक्क पुगे। युवतीले पनि मेरो घरगाउँ यही हो भनी संकेत दिँदै सिकुवावाट टाँगिएको तानमा थचक्क वसी तान वुन्न थालिन्। दुवै दाजुभाइले पनि तान वुनेको हेर्न लागे, तर दुवैजना तानको थोली सुनचाँदीको बुट्टाले सिंगारिएको र तानको धागो सिकुवादेखि कुर्से ढुङ्गा हुँदै तमोरपारि सम्म टाँगिएको देखी तीनछक्क परे। घर हेर्दा उस्तै राम्रो, आँगन सफासुग्घर फूल वगैंचाले सजिएको यो सव विचारगरी हेर्दा त त्यहाँ वस्न नसुहाए जस्तो भई वस्न मानेनन्। आखिर युवतीसँग विदा मागी घर फर्किए, वाटोमा दाजभाइ युवतीकै वारेमा कुरा गर्दै.....

**जयजिते** : ए भाइ यस्तो सुन्दर युवती आजसम्म तिमीले कतै देखेका थियौ? भाइ खलवलेलाई सोधे।



**खलबले** : के हो, दाइ युवती साह्रै मनपऱ्यो कि के हो? भनी उत्तर दिए।

**जयजिते** : होइन, सुन्दर छ कि छैन भनी तिमीलाई सोधेको मात्रै पो त।

**खलबले** : दाइ, असाध्य सुन्दरी छ, तर... दाजु सजग हुँदै

**जयजिते** : के तर... भन न, तव पो थाहा हुन्छ, भाइ भन्दै

**खलबले**: उनको थोली सुनचाँदीको बुट्टाले वनिएको, तान अनन्तसम्म टाँगिएको र अनुवाररूपले सजिएको सम्झादा त, साधारण युवती हुन् जस्तो मलाई लागेन दाइ... भन्यो।

**जयजिते** : ठिक भन्यौ भाइ, त्यही त, अचम्म छ, उनी पक्कै पनि असाधारण युवती नै हुनुपर्छ, भन्दै गफगाफ गर्दै त्यो दिन खाली हात लिएर घर आइपुगे। दुवै थकाईले लम्फु भई सिकुवाका खाटमा लामो सासको खुइय गरी वसे, साँझ परिसकेको थियो, थकाईले दुवै गलिसकेका थिए। खाटमा वस्दा वस्दै लम्पासार भई थकाई मेटिरहे। थकाई पछिको लामो सुइयाले आज हाम्रो हात खाली छन्, भन्ने संकेत दिइसकेको थियो। त्यसैले त्यो वुझेर उनीहरूलाई परिवारका मानिसहरूले आराम गर्न मस्त दिइरहेका थिए। खाना सवैले खान थाले, रातले चन्द्रमालाई डोऱ्याउन थाले, तर किन हो किन छोराहरूको मायाले आमालाई घचघच्याउन थाल्यो, आज किन यिनीहरू खाना खान आउँदैनन्, सञ्चो पो छैन कि भन्दै भित्रवाट आमा चिच्याउन थालिन्।

**आमा** : ए जयजिते, खलवले, खाना खान आओ, मस्तले निदाएका जयजिते र खलवले आमाले वोलाएको आवाज के सुन्थ्यो सुनेनन्। आमाले वोलाउँदा पनि नआएकोले किन यिनीहरू आउँदैनन् भनी ढोका वाहिर वत्ति वोकेरै निस्कि, वत्तीले ओज्याएर हेर्दा त दुवै घुर्दै निद्रामा मस्त पो रहेछन्, त्योदेखि आमाले जयजितेको एक हातले हात समाउँदै झट्काउँदै व्युँझाइन्, र भाईलाई पनि उठाएर चाँडोगरी भित्र खाना खान आओ सेलाई सक्यो भन्दै वत्ती लिएर पुनः भित्र पसिन्।

**जयजिते** : ए भाइ भाइ भन्दै दुई हातले समाउँदै उठाए र जा खाना खान आमा भित्र वोलाउँदै हुनुहुन्छ, भने.. तर भाइ

**खलबले** : दाइ जानुहोस्, मलाई ज्यादा थकाई लागेको छ, म खाना खान्न, त्यति खान मन लागेको छैन भनी उघ्न खोज्दै.. रहन्छ।

**जयजिते** : हेर भाइ, थकाई त दुवैलाई लागेको छ, हामीलाई भन्दा वढ्ता थकाई, आमालाई हाम्रो खाना वनाउँदा लागेको छ। अझ खाना पस्केर पर्खिरहनुभएको छ, आफु थाकिएको छ, भन्दैमा दया गर्ने आमालाई अझ थकाउनु अहा हुँदैन, भाइ जति रूचेको खाएर आमाको पनि त चित्त वुझाई दिउँ न, हिंड जाऊ छिटो, भने पछि वल्ल खाना खान खलवले पनि उठ्छ, दुवै भान्छा कोठातिर लाग्छन्।

## दोस्रो चरण

कयौं दिन जयजिते र खलवले पिताको आज्ञानुसार गाई भैंसी चराउनमै समय विताउन लागे। दुवै दाजुभाइ अरू वस्तुभाऊ भन्दा माउ भैंसी र माऊ गाईको साह्रै ख्याल राख्थे। त्यसैले होला, घरमा प्रशस्त दूध, दही, महि, घ्यु हुने गर्दथ्यो। सायद दूध, दही महिको स्वादले पूर्ण भएर होला, उनको वुवाले पुनः शिकार गर्न जाने अनुमति दिए। तव दुवै दाजुभाइ सरसामान ठिकठाकगरी वोकेर एउटा कुकुरसमेत गरी तीनजना भई जंगलतिरको वाटो लागे। कुकुर अघि पछि यता उता लुखुर लुखुर कुदिरहेको थियो, वाटोसँगैको डिल ढुङ्गामाथि चढेर कुकुर ड्डर्र ड्डर्र गरी मालिकहरूलाई इसारा गरे। दाजुभाइ पनि यसले के देखेर ड्डर ड्डर्र घुर्छ भनी दृष्टि लगाउँदा त खोला दोभान सुनसान ठाउँमा विहानै सुनको मृग पो जंगलवाट निस्केर मस्त चरिरहेको रहेछ। त्योदेखि कुकुर अघि अघि मानिस पछि पछि गरी तीनैजना दौडिए, कुकुर दोभान पुग्दै मृगलाई लगार्न थाले, हेर्दा हेर्दै दौडिएर दुई दाजुभाइ पनि खोला दोभान पुगे। तर कुकुरसँग मृग क्षणभरमै लापत्ता भई अदृष्य भयो। दुवैजना चउरमा पुगी कुकुर मृग कति छिटो कता लागेछ यहाँवाट भनी चारैचिर हेर्न लागे तर अत्तोपत्तो भएन। केवल युवती मात्र देखी उनी कहाँ नजिकै गई कुकुर र मृग कतै देखेका छन् कि भन्दै जयजितेले सोध्न थाले।

**जयजिते** : हजुर यता एउटा कुकुर र मृग दौडी आएको देख्नु भएन?



नजर घुमाउँदै

**युवती** : अहा देखिएन त भनिन्। दाजुभाइ सोचविचार गर्दै

**जयजिते** : हजुर, कुकुर र मृग आएको तपाई सिवाय अरू कसलाई थाहा होला र कृपया भगवानको लागि वताई दिनुहोस् न भनी विन्ती विस्तार गरे युवती खुशी हुँदै...।

**युवती** : म एउटा शर्त राख्छु, मान्छौ भने वताइदिन्छु, नत्र वताउँदिन भनिन् –दुवै दाजुभाइले सहमति जनाउँदै...

**दुवै** : मान्छौं हजुर, कस्तो हो त्यो शर्त भन्नुहोस् न मञ्जुर गर्दै विचार वुझी युवतीले भन्न लागिन्

**युवती** : तपाईहरूले मलाई तपाईहरूको घरसम्मै वोकेर पुऱ्याउनु पर्दछ, मान्छौ भनेकाले दुवै दाजुभाइ कुकुर मृग छाडी युवतीलाई थोर्ङसिलिङको वाटोगरी पालैपालो वोकेर हिंड्न लागे। उकालो वाटो हिंड्दा हिंड्दा दुवैजना थाकेर यासोक स्थित कुम्मायक र कुसायक भन्ने ठाउँमा विसौना गरेछन्। थकाई मारेपछि फेरि त्यहाँवाट वोकेर पुँवा सिरान ल्याई पुऱ्याउँदा थाहै नपाई पिठ्युवाटै युवती हराइन्। दुवै जनाको आँखा छलेर कता गइन् भनी चारैतिर आँखा लगाई हेरे, देखेनन्। दाजुभाइ नै निराश भएर घर आइपुग्दा त अघि नै घर आइपुगी खाटमा खुट्टा हल्लाउँदै पो वसिरहेकी रहिछन्। कुकुरपनि खुट्टा नजिकै पर्खेर वसे झैं गरी हेरिरहेको, त्यो देखेर दुवैजना छक्क परे, आश्चर्य प्रकट गर्दै दुवैले...।

**दुवै** : होइन, तपाईलाई त पिठ्युमा पो वोकेका थियौं, कता हराउनु भो, भनि सोधे।

**युवती**, आ, तपाईहरूलाई भोक तिर्खा लाग्यो होला भनी म अघि नै घरमा हतारिएर आएको नी, भनिन्। अघि आई घरका अन्य मानिसहरूसँग हेलमेल भई भुटेको मकै भटमास र मही सिन्कीको अचार चट्ट खाजा खान दिइन्, दुवै दाजुभाइ खुशी भए, दुवैले उनको लागि ठुलो सल्लाको फेंद टुक्रागरी कोपेर कतै काँटी नठोकी एउटा खटिया वनाइ दिए। त्यसैमा रात काट्न थालिन्, अन्य दुई दाजुभाइका श्रीमतीहरू त्यो चालचलनदेखि राम्ररी विचार गर्न लागिन्। तर युवतीले आफ्नै मान्छे

ठानी दुवैलाई कामभन्दा सघाउँथिन्, बोली वचन नैतिक आचरण जस्ता शील स्वभावका कुराहरूमा समेत स्नेहको भावमा सिकाउन थालिन्। घरमा दिनदिनै राम्रो हुँदै गयो, लक्ष्मीले वास गरे झैं उज्ज्वल हुन लाग्यो। तर एकदिन बोकाको मुखमा कुभिण्डो नआँटे झैं दुवै भाइका श्रीमतीहरूले यो ता सौता हुन पो आकी रहिछे भन्ने शंकागरी दुवैले मार पिटेर खेद्ने सल्लाह गरे, र एउटीले कुच्चोद्वारा खुट्टामा बसाल्न थाले भने अर्कीले जगल्टा उखेल्न लागे। यो झगडा भएको देखि जयजिते र खलवले दुवैले पिट्न दिएनन्, युवती वेकसुर कुटाई खाएकोले मन दुखाउँदै क्षणभरमै अदृष्य भइन्।

## तेस्रो चरण

टाढाबाट बोकेर ल्याएको पाहुना जस्तो मान्छेलाई वेकसुरमा कुटेर खेदो गरेकाले र दुवै पत्नीहरूको असहृय वाण जस्तै बोली वचनहरूले दुवैको हृदयभरि चोटैचोट पर्न थाल्यो। कैयौं दिन सहेर बसे, तर नराम्रो कर्म र वचनको अगाडि दिक्क भई मन वहलाउन दाजुभाइ नै पितासँग आज्ञा मागेर माछी जाल धनुवाण बोकी निवोखोला दोभान ओरालो झरे, ति दुई खोलाको पवित्र संगम थलोलाई घरीघरी चिहाउँदै प्रतीक्षा गरिरहेका छन् कि छैनन् भनी मनका धमिलोहरू पखाल्न, दया र मायाको अभाव वोकेर प्यास मेटाउने अभिलाषाले दोभान हुँदै खोलाको सङलो पानीतिर लम्कन्छ। ढुंगेवगर अनि पानीको संगममा टुक्रुक्क वसी अंजुली भरि सङलो पानीको दुई घुट्कोले हृदयभरिको प्यास मेटेर वगिरहेको चंचल पानीमा माछा छ छैन हेर्दै माछी जाल सम्भाल्दै पानीमा छ्याप्प छ्याप्पगरी जाल हान्दै तान्छन्। चाँदीका टुक्रा झैं टल्कने भुरा माछाहरू टाढावाट हेर्दा माछा नभई चाँदीकै टुक्रा टिप्दै डेलीमा भरेजस्तो देखिन्छ, यसरी नै माछा मार्दै घरी खोलाको सिरानतर्फ घरी खोलाको पुछारतर्फ तल माथि गरी माछा मारिरहेका थिए। यत्तिकैमा खलवले माछी जाल वोकेर दौडिदै माछी जाल पानीमा छ्याप्प हान्दै तान्न लाग्छ, ठुलो माछा छोपेको दाजु जयजितेलाई संकेत गर्दै नजिकै वोलाउँछ, जाल तानी वाहिर निकाली हेर्दा त साँच्चै गतिलो माछा परेछ। दुवै खुशी हुँदै समाउन खोज्छ तर



माछा ज्यादै उफ्रन्छ एकजनाले समात्न नसकी दुवैले समातेर डेलीको मुखभित्र कोचारिदिन्छ। तर भित्रपनि माछा उफ्रि नै रहन्छ, उफ्रेर दिक्क लागेकोले खुकुरीको दापवाट कर्दा थुतेर डेलिभित्रै घोचेर मार्न लाग्छ, तर घोचेर पनि नमरे झैं उफ्रि नै रहन्छ, यो देखि रिसले डेलीको मुख च्यातेर माछालाई वाहिर निकाली तीन टुक्रा हुने गरी काट्छ तर तीनै टुक्राहरू उफ्रदै जोडिएर जस्ताको तस्तै हुन्छ, यो देखि दुवै अचम्म भई थकित हुन्छन्। सम्झदैं, आखिर यो के हो? भनी आकासतिर हेर्दै.........।

आन्छिया थे मिन्नी थे मेन्धामा सा सिक्या हेने थेन्वे, हेने साम्माङसिवी लोदरवी, भनी भगवानको प्रार्थना माङसेवा गरेर माछा हेर्दा त माछा नभई एउटी युवती पो प्रकट हुँदै भन्न लागिन्।

**युवती** : ओसवा, आङगा मनुसेग मेम्वे साम्माङसा ओस्वा, आङगा सामथाक्ला थाक्पेलुङनु तमोर खोला लाम मनुष्येर मिनीआर कुसिङ मिनीताआङ याङिले आत्तीआङ कुसिङ मिन्नीताङिन हेक्याङ हेन्छी-धिक कुसिङ नाप्मी किनिछिवी फाआङ झल्कर पिनेछिङिल्ले थ्याङ अखे वे' वरू निभुखोला वानाभुन्जीरे थी आभिन्दे छ, हेक्याङ हिन्छी हिम्मो ता अुँ भनिन्, र युवती पुनः क्षणमै लोप भइन्।

दुवै जयजिते र खलवले पनि यिनी त युमा साम्माङ पो रहिछन्, वल्ल चिनियो भनी डेलीभरी माछा वोकी घरतिरको बाटो उकालो लागे। साँझमा घरमा पुगी माछा डेलीभरि ल्याएको परिवारका मानिसहरूलाई देखाउँदै, युमा साम्माङको बारेमा कुरा गर्न लाग्दा समयले पर्खिएन, सवैले खाना खाई रात्रीको निद्रामा लीन भए।

## चौथो चरण

भोलिपल्ट बिहानै गाई भैंसी हेर्न जाने आज्ञा पिता **याङमुन्दे** वाट भएअनुसार दुवै दाजुभाइ कैयौं दिन पछि नुनतेल चामल हप्ता दिनलाई मनग्गे पुग्नेगरी कुम्लोमा वोकेर गोठ भएतिर वाटो लागे।

विहानी घामले पहाडका काखापाखामा नाकाहरूलाई स्पर्श गर्दै डाँडा काटिरहेको छ, दाजुभाइ खुराकका पोका वोकी गोठतिर लम्किरहेका छन्, सायद उनीहरू आउँदै गरेको देखेर होला, टाढैवाट गाई भैंसीहरूले

वाँ, आ, ए गर्दै आफ्नो धनीहरूलाई संकेत गर्न लागे।

दुई दाजुभाइ चाँडै नै गोठ खोल्माको लिस्नु चढी सरसामान विसाई ओर्लेर वस्तु भाउहरूलाई घस्याउन लागे, आगो फुकेर तताउँदै खानाको तरखर गर्दै रहे। दुवैले खाना खाइसकी पञ्चमी डाँडा आसपासका नाङगो चउरमा वस्तुभाउ खोली चराउन लागे, दिनै यसरी समय वित्न लाग्यो। ल्याएको चामल नुन, तेल सकियो। लिन जानलाई दुवै गोठमा वस्तुभाउ छोडी घर आई भोलिपल्ट फेरि विहानै चामल नुनतेल वोकी गोठतिर लागे। गोठमा पुग्दा त थलो रित्तो देखि हतार हतार गरी वस्तुभाउ खोज्न लागे। वाछा, वाछी, पाडा-पाडी, नजिकै तितर वितर भए भैं चरिरहेको देखी एकाएक समाउँदै थलोमा ल्याएर बाँधे, तर माऊ गाई र भैंसी कतै नदेखिएकोले दुवै छक्क परि यता उती खोज्न लागे। कतै भेट्न सकेनन्, आखिर दिउँसोभर भोकभोकै थकित भएर, सोच्न लागे, हे भगवान फुस्कादा पनि एउटा, दुईटा पो फुस्कन्छ। गोठै रित्तो हुनेगरी के यो अचम्म भनी भन्दै टाढा टाढासम्म कतै देखिन्छ कि भनी हेर्न लाग्दा त डाँडामाथिको **वदामलुङमा पो युमा साम्माङ** वसिरहेकी रहिछन्। त्यो देखि ए, यो सव खेलवाड गर्ने त युमा साम्माङ नै रहेछ भन्ने वुझेर आइन्दादेखि हामीलाई यस्तो दुःख नदिनु, भनी भाकल गर्न लागे, हे देवी, आइन्दादेखि जन्मेको भैंसीको पाडो हरेक साल एक एक गरी तिमीलाई चढाउँला, भनी विन्ती गरेपछि, त्यहाँवाट युमा अदृष्य, दृष्य, अदृष्य, दृष्य, हुँदै हराइन्। त्यसो भनि गोठतिर फर्केर आउँदै गर्दा त गाई भैंसी पनि गोठ नजिकै आफैं पो आउँदै रहेछन्, त्यो देखेर दुवै खुशी हुँदै गाई भैंसीलाई पक्री थलोमा वाँधीदिए। थकाईले शरीर गलाएसरी रातले दिनलाई गलाइसकेको थियो। पंक्षीहरू खेतवारीवाट जंगलतिर फर्किरहेका थिए। नीलो आकाशदेखि जुनताराहरूले चियाई रहेका थिए। दुवै दाजुभाइ हतार हतार मकै भुटी सिन्की अचार मुछेर मोहीसँग खाएर ओछ्यानतिर लागिरहेको थिए, क्षणभरमै सुनसान भई मस्तले दाजुभाइ निदाए।

## पाँचौं चरण

कुखुरी काँ... भाले वासी सकेको रहेछ, सुन्दै सुनेनन्, दो पहर



वितिसकेछ, निद्रै छुटेनन्। पाडा पाडी भोकले गाई भैंसी सोकले। व्याँ, आँ, ए, कराउँदै स्वाँ सुँ घत्राक, घुत्रुक आवाज हुँदा पो जयजिते भसंग हुँदै निद्रावाट व्युँभिए। आँखा मिच्दै हेर्दा त, पारि पाखा डाँडामा घामछाया तिरिरी कहिल्यैदेखि खोई कुन्नी, चरी उडी वरी लै नाच्दोरहेछ, फिरिरी...

जयजिते हतारिँदै भाइको ओढ्ने आफुतिर तान्दै...

**जयजिते** : ए भाइ, भाइ उठ! हेर त घाम कहाँ पुगिसकेछ, उठ! भन्दै भाइलाई उठाए।

**खलवले** : उठेर आँखा मिच्दै पूर्व हेरेर... ओ हो कत्रोवेर सम्म आज त निदाइएछ।

**जयजिते** : तिमी ओछ्यान उठाई पट्याएर राख्नु, म वस्तुहरूलाई घाँस दिन्छु, भनि खोल्यो माथिवाट लिस्नु हुँदै घाँस थलोतिर लाग्यो। खलवले कपडाहरू उठाउँदै पट्याएर राख्न थाल्यो, सिरानी पनि उठाउन लागिरहेको थियो। सिरानीमुनिको पैसाको थुप्रोदेखि खलवलेको मन खल्वलिन थाली चिच्याउँदै दाजुलाई वोलायो।

**खलवले** : दाई ए दाई, दाई यता हेर्न आउनुहोस् त, भन्दै करायो। जयजिते आश्चर्य मान्दै आज किन यो विहानै आत्तिदै कराउँछ भन्दै घाँस हाली सकेर भाइ भए कहाँनेर गई हेर्दा त सिरानीमुनि पैसाको थुप्रो पो रहेछ, दुवै छक्क परी सोच विचार गर्न लाग्यो। कसले यहाँ यत्रो पैसा लुकाई छोडी दियो, त्यो को होला नी भन्दै मनमनै सोच्दै लाँदा त, दुवैले पक्कै पनि युमा साम्माङकै काम हुनुपर्छ उनैले छोडि जानुभएको पैसा रहेछ भनी ठम्याए। उनीहरू पनि पैसा पाएकोमा ज्यादै खुशी हुँदै युमा साम्माङले दिनुभएको पैसा भन्दै हल्ला खल्ला गर्दै सवै गाउँवासीहरूलाई बाँडिदिए। गाउँवासीहरूले पनि अचम्म मान्दै पैसा लिादै तिमी त संसारी देवी पो रहेछन् भनी पुकार गर्न लागे। त्यो रमाइलो दिन वितेको केही दिनपछि जयजिते र खलवले भैंसीहरूलाई पानी खुवाउन कुवातिर लौरो लिई वस्तु लगार्दै लाँदै थिए, एक्कासी तिनै युमा साम्माङ वाटैमा देखा परिन्, र दुवैलाई सम्झाउँदै भन्न लागिन्।

**युमा साम्माङ** : तिमीहरूलाई मैले धेरै पटक दर्शन दिँदा पनि मलाई चिन्न सकेनौ, अव म तिमीहरूको १२ पुस्तापछि मात्र फेरि आउने छु।

याद गरी राख्नु, यसवीचमा थाहा नहुनेगरी एउटा हतियार पठाउनेछु, चिनेर लिइराख्नु, भनी वाटैमा लोप भइन् दुवै छक्कपरी हेरिरहे, मनन गर्दै आपसमा हेराहेर गर्देरहे, केही भन्न नपाई युमा साम्माङ अदृष्य भइन्।

कुवामा भैंसी गाईहरू धमाधम पानी खाइरहेका थिए, त्यो देखेर दुवैले वस्तुहरूलाई फर्कन आवाज दिंदै, हे आँ आ जीला... भन्दै कराउने थाले। सायद त्यो आत्मा आवाजहरू पान्थर घुर्पिसेको पञ्चमी डाँडा पाखाकाखाका घाँसे मैदानहरुमा अभै पनि भैंसी गाईहरूलाई बोलाउँदै होलान्।

युमाको उपदेशअनुसार ठीक ३०/४० वर्ष अघि कन्या वुढो भगिनन्द चेम्जोङको घर आँगनमा रोपेको कोला थाममा जुम्ल्याहा कोलाको घरी पलाएको थियो, जो रातभरि नसुती आवाज दिइरहन्थ्यो। त्यो किन कराउँथ्यो सोच विचारै नगरी त्यसै मासिएर गयो। केही महिनापछि नचिनेको एउटा साधु आएर आफसेआफ तिम्रो घरको आँगनमा जुम्ल्याहा कोला घरी फलाएको थिएछ। त्यसभित्र देव अस्त्र थियो, त्यसलाई प्रयोगमा ल्याउनु पर्ने तिमीले नचिनेकोले गर्दा त्यो शक्ति त्यही लोप भइगयो, भनेर फर्केर गएको थियो।

घरका मान्छेहरू यसले भिक्षा पनि नमागी त्यसै त्यति भनी राखेर फर्कियो, यो कस्तो खालको साधु हो भनी छक्क परी हेर्न लागे, तर साधुले डाँडा काटिसकेको थियो।

## पान्थरे जिउँदो मुन्धुम

लिम्वुवानको सत्रथुममध्येमा हेवाँखोला थुम र नुवाखोला थुम, २३८ वर्ष पूर्व प्रीसद्ध मानिएको थियो। यिनै दुई थुमका हरियाली डाँडा, खोला आसपासको भु-भागलाई पान्थर नामाकरणले चिन्नु अघि हेवाखोला थुम र निवुखोला थुम भनी लिम्वुवानमा भन्ने चलन थियो। वि. सं. १८४५ सालमा रणवहादुर शाहले गोरखा राज्यको वागडोर काठमाण्डौ राजधानी वसी सञ्चालन गरेका थिए। भने किरात प्रदेशका खम्बूवान पूर्व अरूण नदी वारि लिम्वुवानका सुभाहाङहरूले राज्य सञ्चालन गर्दथे। कुनैपनि



राज्यमा नयाँ नीति निर्धारणगरी लागु गराउँदा त्यसको प्रभाव छिमेकी राज्यलाई समेत पर्ने भएकोले नयाँ विधान पास गर्न हरेक साल लिम्वुवानबाट एकजना सर्वोच्च सुभाहाङ उनी कहाँ जानु पर्दथ्यो। सोअनुसार लिम्वुवानले पनि सत्रथुमका १७ थुमका १० सुभाहाङहरूमध्येमा एकजना सर्वोच्च सुभाहाङ चुनेर गोरखा राज्यका राजधानी पठाउँथे।

याङरूप थुमका श्रे चाङगा (श्रीजंगा) थेवे योक्तुम्वाले किरात भाषा, लिपि, लिम्वुवानमा पठनपाठन गराउँदै लगेका थिए। लिम्वुवानका १७ थुमका १० सुभाहाङहरूले सर्वोच्च स्थानमा मानि ल्याएको थिए, लिम्वुवानका किरातीहरू, आफ्नो याक्थुङ हाङकोरूपमा उनलाई सम्भन्थे। उनको कार्य विधि व्राम्हणहरूको विरूद्ध सम्भी,त्यो कार्य विधानको विरूद्धमा, कसैसँग सरसल्लाह नभई १८४२ मा याङरूप थुमकै वाजसिं सुभाहाङको कमजोरी वाट फाइदा उठाउन सकिन्छ भनेर उनलाई नै १७ थुमका प्रतिनिधिकोरूपमा रणवहादुर शाहले राजधानी सिधै भिकाए। उनको आड पाएर, उनलाई लिम्वुवानमा व्राम्हण, राष्ट्र, भाषा, लिपि, धर्म, संस्कारअनुसार नै सुभाङहरूले पनि आफ्नो राज्य सञ्चालन गर्नुपर्ने विधान मनोमानी वनाई सन्धि सम्भौता जवर्जस्ती गर्न लगाए।

बाजसिं भएको सन्धि सम्भौताकै आधारमा वि. सं. १८४३ सालमा लिम्वुवानकै निम्ति भनेर छ ढाकर जनाई धनकुटा मार्फत् रणवहादुर शाहले पठाएका थिए। सोअनुसार लिम्वुवानका किरातीहरूले आफ्नो धर्मकर्म छोडी, ६ वटा जनाई भिर्नुपर्ने, चुलो गोवरले पोत्नुपर्ने र गाईको मासु खानेलाई मृत्युदण्ड भोग्नुपर्ने भो। यो रणवहादुरको एकलौटी निरंकुश शासन गर्ने तरिका बुभी लिम्वुवानका १७ थुमका १० सुभाहाङहरू, बाजसिंको कमजोरी देखी छक्क परे। आखिर यो कुरा लिम्वुवानका किरातहरूले पनि वुभ्न थालेपछि १७ थुमवाटै जनगुनासोको पोको सल्कीन थाल्यो। जतातत्तै अशान्तिले छायो, विद्रोहले चर्कोरूप लिन थाल्यो। लिम्वुवानमा व्राम्हण धर्म नीति, नियमको घोर विरोध हुन थाल्यो, सो कुरा वुभी लिम्वुवानमै वसोवास गर्ने अहिमान बस्नेतले राजा रणवहादुर शाहका हजुरमा भोस पोल तुरून्त पुऱ्याई जाहेर गरे। रणवहादुरको कानमा उजुर पुगेपछि रिसले चुरमुरिँदै राजाले भने,

त्यस्तो राजद्रोही भई हिंडेकाहरूलाई म कहाँ समाती ल्याउनु, नमाने गोली हानी मारी दिनु भन्ने हुकुम भएवाट कयौंलाई गोलीका शिकार वनाए? कैयौंलाई वन्दी वनाएपछी नै श्रीजंगा थेवे र उनका शिष्यहरू सिक्किमतर्फ गई वसेका हुन्। धेरैजसो लिम्वुहरू पक्राउपरी 'श्यामनपु' चैनपुरका गोरखा सेनाका गोलीका शिकार भए। कैयौं किराती पुस्तकका ग्रन्थहरू आगोमा पोली ध्वस्त पारी दिएका थिए। लिम्वुवानमा कतै शान्ति भएन, सन्तोषको सास फेर्न नसकिने उकुसमुकुसका दिनहरूसँग रातहरू पनि वित्दै जाँदा अर्को नयाँ सालका नयाँ दिनहरू आए झैं समयहरू सलवलाउन लागेका थिए।

वाजसिंपछि लिम्वुवानवाट १७ थुम १० लिम्वुहरू मिली सरसल्लाहगरी सर्वोच्च प्रतिनिधिकोरूपमा हिंवाखेला थुम याङवरक (याङनाम) वस्ने अटलसिं सुभाहाङ चवेगुलाई गोरखा राजधानी काठमाण्डौ पठाए रणवहादुर सम्म पुगी अटलसिंले आफ्नो कुरा राख्दै विन्ती विस्तार गर्दै पुरानो सन्धि पत्रमा उल्लेख भएअनुसार जनाई लगाउनु पर्ने, गौवध निषेध, व्राम्हण धर्म मान्नुपर्ने, र गोवरले चुला चोख्याउनु पर्ने, यी इत्यादि नियम हाम्रो १० लिम्वुवान भाइ वंशहरूमा हुनु हुंदैन, ठिकै छ, कुलमा गौवध नगरौंला त्यो मान्न तयार छौं तर तागाधारी भई हिंड्दैनौ यसोभन्दा मेरो जिव्रो काटिए काटियोस्, १७ थुमका राई पगरी कुनैले मञ्जुर नगरेको कुरा विन्ती जाहेर गर्दछु, भनी लिम्वुवानका कुरा राख्दै अटलसिंका पालामा वनेको सम्झौता पत्र खारेज गरी नयाँ सन्धि पत्र खडा गरे।

जसमा लिम्वुवानका जनजातिहरूले अनिवार्य जनाई लगाउनु पर्ने नियमका कुरालाई हटाई, आज उप्रान्त गौवध नगर्नु। अरू रितिथिति अघि जस्तै थामिसक्सेका छौं, भन्ने लालमोहर कायमगरी ल्याएकाले १७ थुमका राई पगरी सुभाहरूले के गरी आयो हौ भनी सोध गर्दा पान्थरे हौ भन्ने शव्द चारैतिर एक कान, दोकान, मैदान हुंदै गएकोले लिम्वुवान भरि खुशीको समाचार सुन्न पाई पहिल्यै जस्तो नभई ढुक्कले वस्न थाले।

यो पान्थरे शव्दको अर्थ वास्तवमा थामेर आयो है भन्ने हुईयाँ चलेकोले पान तक्तु = पान्थरूवाट पान्थर भएको जिउंदो इतिहास हो।



# एकलव्यहाङ

निराश मुडमा... (एकलव्य र नागदत्त कृष्णसुदामा जस्तै साथी साथी भएकोले एकलव्यहाङको घरकौशीमा दुवै कुराकानी गर्दै)

**नागदत्त :** एकलव्य, तपाई पनि त धनुवाणमा सौखिन हुनुहुन्छ नी, अझ तपाईको पिता हिरण्यधनु निसादराज अनि तपाई किरातीहरूका निमित महान् हुनुहुन्छ भने त्यस्तो कुन चाहिं अनौठो घटना भएको थियो, प्राण संकटको म पनि सुनौं न।

**एकलव्य :** सुन नागदत्त, म वाण वनाउनलाई फलामको टुक्रा किन्न हस्तिनापुरको राजधानी गएको थिएँ, त्यहाँकै राजकुमारको लागि फलाम सुरक्षित भइसकेको रहेछ। म खाली हात लिएर आउँदै थिएँ, तर एक विद्रोहले लिएर आउँदै थियो, आउँदा आउँदै शुष्क कुप नजिकै टक्क अडियो। मैले पनि त्यो दृष्यलाई चाख मान्दै हेर्न थालें। एक राजपुत्र काठका खेलौना धनुवाण हातमा लिई निराश भई उभिरहेको थियौ, द्रोणाचार्यले राजपुत्रलाई सम्झाउँदै के भन्नुभयो भने 'राजकुमार, तिमी कुरू वंशीका वीर हौ। तर, शुष्क कुपमा फसेकौ शुद्ध विटिकालाई तिमी निकाल्न सक्दैनौ?' ती सज्जनलाई आफ्नो वाहुवलले निकाल्न सक्यौ भने तिमी महान् वन्नेछौ। राजकुमारले सर्माउँदै गुरू द्रोणाचार्यलाई भने, देव हामी सवले प्रयास गऱ्यौं तर विटिका कुपवाट वाहिर निकाल्न सकेनौं। द्रोणाचार्य अपसोचको लामो सास लिदै, ...राजकुमार यसको उपाय किन छैन? अवश्य छ। धारिला वाणले धारिलै वाणलाई काट्छ भने जीवनमा त्यसको प्रतिशोध पनि त अस्त्र नै हो नी, निराश नहोउ,

म तिम्रो विटिका तुरून्तै निकाली दिन्छु। तव जान्नु प्रतिशोध के हो? भनी गुरू द्रोणाचार्यले मन्त्र जप गर्दै, धनुवाणको ताङदो भाँचिएला जस्तो गरी ताने 'ज्वाला फुके झैं मन्त्रसहित वाण आकासिदै विजुलीको चम्काई हराए जस्तो देखेर एकलव्य मन्त्रमुग्ध भयो' उसैको आङमा शक्ति आङसारी गरे जस्तो देखेर नागदत्त पनि हतासिदै स्पष्ट स्वरमा...

**नागदत्त** : धन्य धन्य, एकलव्य! यो त मन्त्र शक्ति हो, 'भन्दै थिए एकलव्य हाङ, सपनावाट व्युँझे झैं फेरि भन्न लाग्छ'

**एकलव्य** : आ वाण शक्तिमय भयो र राजकुमारको खेलौना धनुवाण हातमा लिदै मन्त्र जपगरी शुष्क कुपवाट विटिका निकाले त्यो देखी सारा राजकुमारहरू खुशी भए, र म पनि खुशी भएँ।

अव म गुरू द्रोणाचार्यको मुर्ति हेर्दा वोलाउला, जस्तो वनाउँछु। खोइ के भनौं नागदत्त मुर्ति ढुङ्गामा, आँखा पानीमा त्यो दृष्य आकृतिको कति ठूलो प्रभाव पर्दोरहेछ। गुरू द्रोणाचार्यलाई जुन दिन आफ्नो मन्त्र शक्तिले विटिका निकालेको देखें, त्यो दिन अज्ञानरूपमा म उभिएको थिएँ। मेरो अज्ञानता कसैले निकाल्न सकेको थिएन। उनैले निकाली दिनु भयो र मेरो मन पनि उनैलाई खोज्दछ। 'यत्तिकैमा ढोका वाहिर आधा शरीर देखाउँदै परिचारिका'

**परिचारिका** : आमा, तपाईलाई खाना खान वोलाउँदै हुनुहुन्छ।

**एकलव्य** : देख्दैनौ, म यहाँ साथीसँग कुरा गर्दैछु, तिमी जाऊ।

**नागदत्त** : वस्, गुरूले यति नै दर्शन दिनुभयो।

**एकलव्य** : आ, आजै रातको सपनामा अचम्म लाग्दो गरी गुरू द्रोणाचार्यलाई देखें, गुरू मलाई मौनमुग्ध भई आकाशमाथिवाट हेरिरहनु भएको थियो। मन्त्र शक्तिको ठूलो चक्र घुमेर मेरो नजिकै आउँथ्यो, जान्थ्यो, आउँथ्यो, जान्थ्यो। त्यो देखेर म डराउँथें, वादल आउँदा गुरू हराउँथे, गुरू देखिादा वादल हराउँथे। गुरू द्रोणाचार्य मलाई नै निश्चल भई हेर्नुहुन्थ्यो। अनि एकैक्षणमा विरूवा उम्रेर, हुर्कदै फूलैफूल फुल्दथ्यो, त्यो फूलको बीचमा गुरूको मुख देखिन्थ्यो। त्यस्तो देखेर हात अगाडि वढाउन मात्र खोजेको थिएँ, फूलको पत्रले दाहिने हातमा चोट पुर्याइदियो, खुन वग्न लाग्यो, त्यो स्पर्शले मलाई आगोले पोले जस्तै भई ऐया... भनी



हात आफूतिर तान्दा सपनावाट म झसंग व्युझिएँ। सपना जस्तो होस्, त्यो दिनदेखि मलाई गुरू द्रोणाचार्यले चारैतिर घुमेर संकेत दिनुभएको जस्तो लाग्छ।

'भित्रवाट आमाको आवाज'

**कुन्तला** : ए एकलव्य! एकलव्य, ता कहाँ छस् हा? भन्नुहुँदै कौशीमै आइपुगिन् र नागदत्तलाई हेर्दै... यो राजधानी गएर आएकोदेखि यसलाई के भो के? साँझ भइसक्यो, खाना खानै आउँदैन।

**एकलव्य** : आमा! आज म खाना खान्न, मलाई माफ गर्नुहोस्, कसरी खानु दिनभरदेखि तपाई भोकै हुनुहुन्छ, 'कुन्तला औंला ठड्याउँदै'

**कुन्तला** : आज म तेरो पितालाई खाना नै नखाई वसेको छ भनेर सुनाई दिन्छु।

**नागदत्त** : एकलव्य, जानुहोस्, खाना खान, आमाको दिल किन दुखाउनु, म पनि जान्छु, अर्को दिन भेटौंला।

'नागदत्त गएपछि, एकलव्य दौडेर आमाको पछिपछि कुरा राख्दै...'

**एकलव्य** : आमा! म आर्यश्रेष्ठ द्रोणाचार्यलाई गुरू वनाउँछु।

**कुन्तला** : अवश्य सिक छोरा, तर सम्भव छैन, किनभने व्राम्हणहरूले हामीहरूलाई शुद्र जाति भनि भेदभाव गर्छन्, वर्गभेद टेंडो छ, आर्य राजकुमारहरूको पो गुरू हुन् त, शुद्र राजकुमार तालाई कसरी चेला वनाउनु हुन्छ?

**एकलव्य** : म गुरूदेवलाई मनाउँछु भन्दै... स-परिवार खाना खान वसे, आखिर पितालाई पनि यो कुरा राख्दै भने, पिताश्री म आर्यश्रेष्ठ, द्रोणाचार्यलाई गुरू वनाउँछु। मैले वहाँलाई नै गुरू वनाउने पूर्ण प्रतिज्ञाको व्रत लिइसकेको छु भनी विन्ती गरे।

'पुत्रको मनसायलाई सान्त्वना दिंदै निसादराज हिरन्यधनु'

पिताश्री ठीक छ, भोलि हस्तिनापुर राजधानीमा गुरू द्रोणाचार्यले राजकुमारहरूको अस्त्र विद्या प्रदर्शन गर्दैछन्। त्यहाँ तिमीलाई पनि साथैमा लिएर जाउँला, भनी छोराको चित्त वुझाई खाना खान लागे।

'भोलिपल्ट राजधानी पुगी गुरू द्रोणाचार्यको शिरमा दृष्टि लगाउँदै खुशीको मुहर्तमा भन्न लागे'

**एकलव्य** : जय गुरूदेव! प्रणाम म एकलव्य शिष्य हुँ, एकलव्य नामको शिष्य आफूकहाँ नभएकोले द्रोणाचार्य छक्क भई

**द्रोण** : तिमी शिष्य हुन आएका हौ?

**एकलव्य** : गुरू! जुन दिन कुमारहरूलाई धनुवाण सिकाउँदा कुपबाट विटिका निकाल्नु भएको थियो, त्यो विटिका होइन, मेरै हृदय त्यहाँ थियो, जसलाई तपाईले निकाली दिनुभयो।

'द्रोणाचार्य त्यो घटनालाई सम्झादै'

**द्रोण** : तिम्रो नाम के हो?

**एकलव्य** : मेरो नाम एकलव्य हो, पिताश्री हिरण्यधनु निसादराजको वंश।

**द्रोणः** एकलव्य! मेरो धनुर्वेद पाएर निसादराजलाई के फाइदा छ र लक्ष्यर्वेदहरूका लागि लक्ष्यवेद नै किन चाहियो, व्राम्हण क्षेत्रीहरू पो चाहिन्छ त, शुद्रहरू धनुर्वेद पाएर के गर्छन्?

**एकलव्य** : गुरूदेव! आजीवन धनुर्विद्याको तपस्या गरीनै रहने छु, धनु विद्यावाट म सत्य सेवाभाव सिक्नेछु, तपाई गुरू, म चेला, अनादिकालसम्मका लागि वनिरहने छौं।

'यति भन्दै द्रोणाचार्य झोक्किएर...'

**द्रोण** : यो कस्तो शिष्य रहेछ? मौन भई सम्झादै... शुद्र भइकन पनि एकदमै निश्कलंक, मणी जस्तै तेजिलो निडर भई वसेको छ। कसरी म उसलाई रोक्न सक्छु र? अन्य, एकलव्य जस्तो महान् शिष्य, यस धरातलमा रहेछ। तर, यहाँ के गर्ने? कहाँ गुरूकुल छ र? यहाँ त राजकुल छ। एकलव्यतिर हिंसाले हेर्दै... लक्ष्यर्वेद सिक्छौ? जाऔ, तिमी निसादको छोरो अस्वीकृत छौ। 'एकलव्य हात जोड्दै....'

**एकलव्य** : जो गुरूको आज्ञा म क्षणभरको लागि न राजकुमार आएको आखिर तपाई मेरो सदाको लागि गुरू हुनुहुन्छ भन्दै त्यहाँबाट घर फर्कियो।

'द्रोणाचार्य पछुताउँदै'

**द्रोण** : आऊ, एकलव्य आऊ भन्दै मौन भई सोच्न थाल्छ, निसाद पुत्र नभन्नु पर्ने रहेछ, आजदेखि आर्यद्रोण शिष्य भयो, यसको नाम जो



महान् साधक हुन योग्य छ, भन्दै एकलव्यलाई यताउति धेरै खोज्न लाग्यो तर भेट्न सकेन।

## छैटौं सर्ग- आत्मा निवेदन

एकलव्य हाडलाई घरमा माता पिता लगायत नागदत्तले समेत आई नपुगेको देखेर चिन्तित मुद्रामा आँखा टोलाई बाटो हेरिरहेका थिए। एकलव्य घरमा के पुग्न मात्र आँटेका थिए, नागदत्तले टाढैवाट देखेर खुशीले दौडादै एकलव्य भन्दै उही लिन पुगे। 'नागदत्त कुरा बढाउँदै...'

**नागदत्त** : एकलव्य! तपाई गुरू आश्रमबाट फर्कनु होला भन्ने हामीले सोचेका थिएनौं। नकि, तपाईको सोचाई उल्टो थियो। हस्तिनपुरमा कहाँ गुरूकुल छ र? त्यहाँ त राजकुल छ, भेदभावपूर्ण धनु विद्या दिइन्छ। कुनै गुरू हुने तरिका पनि त्यो हो र? न त आग्रहपूर्ण बोलाउँछ, साधनाको तरिका पनि त्यस्तो हुन्छ र? भन त, एकलव्य।

'मातापिता छोरालाई कौसीबाट खुशी हुँदै हेरिरहेका थिए, एकलव्यले मातापितालाई ढोग गरे, मातापिता भित्र लागे, एकलव्य, नागदत्त कौशीमा वस्दै पुनः कुरा गर्न लाग्दै...'

**एकलव्य** : के सोध्छौ नागदत्त! मेरो साथी को हो म के भनुँ, साधनानै मेरो जीवनको साथी हो, साधनाको वीज उनको र मेरो कठोर सन्धि वीच रहेको छ।

**नागदत्त** : जान्दछु, एकलव्य, तपाईमा अजय शक्तिको अनन्त स्रोत छ, कस्तो साधनामा लीःन हुनुहुन्छ तपाई? म पनि मुर्ति बनाई तपाईसँगै साधना गर्न जान्छु। गुरूको प्रसाद मलाई पनि मिल्छ होला नी! के मलाई त्यो ठाउँमा लाँदैनौ र? लैजानुहोस् न ल।

**एकलव्य** : प्रिय साथी, नागदत्त, मसँग साथ रहादा कष्ट हराउँछ तर मलाई देहकष्ट काटियोस् भन्ने चिन्ता छैन। यो जान्नु कि जीवनमा सुख प्राप्ति जसरी विश्वास हुन्छ, त्यसैगरी त्यो सुखलाई सुखले नै छलेको हुन्छ। वरू मेरो घरमा, जब छोरा धनुर्विद्या सिकेर आउँछ, पहिले आफ्नो लक्ष्यवेदले पिताको दुःख मेटाइदिनेछ, धनु विद्यामा प्रतापी छोरा फर्केर आउँदा आमालाई कति चुम्बन खानुहुन्छ, भन्ने यो मेरो खवरले सान्त्वना

दिनु, त्यसो भए मेरो दुःख भुल्नेछन्, र म चाँडै साधनामा सफल भई फर्केर आउने छु, तिमीलाई शंका नहोस् म सबैसँग मिल्न चाँडै नै फर्कि आउने छु। लौ त, नागदत्त, ढिलो भो एक पटक सबैलाई मेरो प्रणाम छ भनिदिनु, म साधनाको लागि लागें। जय गुरूदेव!

**नागदत्त** : एकलव्य, जानुहोस् है..., समयले तपाईलाई साथ देओस्...।

केहीबेर नागदत्त हेरिरह्यो, एकलव्य क्षणभरमै टाढा टाढा भइगयो।

## सातौं सर्ग धारणा

छोरा एकलव्यहाङ घर फर्कि नआएकोले उनको आमा कुन्तला ममताको भुमरीसँगै अलाप विलाप थाल्छिन्।

दिनरात बित्यो, मातापिता खोजि हिंडेको छोरालाई समाचारसम्म नपाउँदा, शोकाकुल भयो, मातालाई रूँदै भन्छिन्, आँशुसरी कसरी मलाई छुटायो।

*छैन छोरा निदाउने वेला, अध्ययन हेर्छु रित्यायो*
*आधा रातमा सुताउन उनलाई, काखभरि खेलाउँथें*
*अ.. ल.. सए..लए गीत गाई सुताउँथें*
*सम्झना भो त्यही गीत, किन आज नराम्रो भो*
*छोडी गयो मलाई कसरी, म के जान्नु कसलाई अप्नायो*
*रूँदारूँदै आँसु सुक्यो, रोदन रह्यो किन सकिएन*
*के पाई हराई गएँ, हे प्रभु! यो मन थामिएन।*
*मिमिरिमै तिमीलाई उठाउन, विहानीको गीत गाउँथें*
*उठ्दै गर्थ्यौ प्रणाम मलाई, ममताले म समाउँथें*
*आशिष म यस्तो दिन्थें, जो भन्दै सत्य होई जाने*
*धनु वाण खेलौना दिंदै तिमीलाई, मैले यसरी सम्झाएँ*
*नमार्नु उसलाई जसको आमा सधैं काखमा खेलाउँछ*
*खेली थाकी घर फर्कदा, खाना हातले खुवाउँछ*
*कैयौं कुरा कष्टले हाँसो एक खेर बर्साउँथ्यो*
*यसैगरी ज्ञान सिक्नु, मसाथ रहे मन रून्थ्यो।*
*तिम्रो तिखो विरहको वाणले मेरो मुटु छेडियो*



*छियाछिया भक्कानो भई जीवन त्यसै बिती गो*
*चुम्बन गर्ने जो थियो प्रिय, छैन आजै फूल मेरो*
*तिम्रो छाया मेरो माया, भित्रभित्रै गढी गयो*
*जसको वैभव ठूलो थियो, माया उसकै सजाई*
*आज मलाई के भो यस्तो, घर आफ्नै पराई*
*हिजै रानी कौशल्या भन्थिन्, राम वनवास गाको*
*तेरो छोरा गयो कहाँ, कस्तो हत हृदयको*
*मैले पनि सत्य उनलाई भनें, भन्यौ पूर्णतया*
*सुखले गयो राम वनमा, काम गर्न नयाँ*
*मेरो छोरो यही कतै, खेल्दै होला मृग*
*यति दुःख उठाई तिमीले, गर्‍यौ देवी दया।*

## आठौं सर्ग – ममता

एकलव्यहाङ जंगलमा प्रवेश गरी उपयुक्त स्थानको खोजी गर्दै गएपछि निर्जन घना जंगलको एक ठूलो रूखमुनि कोल्टे परेको ढुङ्गामाथि एकलव्य आसन गरी बसेको छ। धनुवाणले सजिएर गुरू द्रोणाचार्यको ध्यानमा लीन हुँदै, द्रोणाचार्यको वचन दोहोरिन्छ। गुरूदेव, भन्नुहुन्थ्यो, कहाँ यो गुरूकुल हो र? यो त राजकुल हो। कस्तो परिस्थितिको जालमा परी आयौ यहाँ त वर्गभेद गर्दछन्, यस्तो राजधानी चाँडै पतन हुनेछ। म वनवासी एक्लो चेलालाई कसरी गुरूले धुनर्विद्या दिनुहुन्छ, म कसरी कुन प्रकारको चेला बन्छु। विद्या हासिल गर्न कसले मलाई सिकाउँछ। मेरो नजरमा कसले निर्देशन संकेत दिन्छ, चित्रले या मुर्तिले आ मुर्तिले नै संकेत दिन्छ भनेर माटोको मुर्ति द्रोणाचार्यको हेर्दै सजिवरूप मुर्ति खडागरी उनैलाई गुरू मानी साधना लिने अठोट गर्छ। यिनै मुर्तिबाट मलाई यस्तो शक्तिशाली कण प्राप्त होस् जो मेरो धनु साधनाको अस्त्रशस्त्र वीज होस् भनी फलफूल चढाई मुर्तिकोरूपमा रहेको गुरूलाई प्रणामगरी आफ्नो साधना सुरू गर्दछ।

## नवौं सर्ग – संकल्प

एकलव्यहाङ विहान वेलुकी दिनरात गुरूको चरणमा वसी ध्यानमा लीःन हुँदै, गुरूदेव! यो हातले तपाईको मुर्ति वनाएको हुँ, मलाई माफ गर्नुहोला। हस्तिनापुरका राजकुमारहरू एक एकगरी तपाईको वचनमा शिक्षादान लिन्छन् होला, तर म यहाँ एक्लो छु। मलाई नदी वायुको वहाव समान धुनर्वेदको संकेत होस्। त्यो दिन तपाईले भन्नुहुन्थ्यो, निसादपुत्र तिमी अस्वीकृत छौ। यो कसले भनेको थियो, तपाईले या भिष्मको राजनीतिले, 'गुरूहरू धनुर्वेदको अधिकारी भयो भने क्षेत्रीहरूलाई युद्धमा हराउँछन् किनकि क्षेत्रीहरू भरखरै चेतनावाट व्युझ्दैछन्, र शुद्रहरू भारतका आदिवासीहरू हुन्, उनीहरूको कल्पना शक्ति आर्यनहरूको भन्दा ज्यादा हुन्छ' तर, हामी मूल देशवासीहरूलाई किन शुद्र भनियो? आफ्नै भूमिमा शान्तिपूर्ण ढंगले हामी रहन्थ्यौं। कसले आक्रमण पहिले गऱ्यो? आक्रमणकारी को हो? तिनीहरू के आर्य हुन्। हामीलाई हिंसाले शुद्र भनि सदा होच्याई राखे, कुन अधिकारले? यसकारणले कि शक्तिमा उनीहरूलाई यश प्राप्त भएको छ तर शक्ति मानिसको देवता हो, दानवी होइन। मानवको शक्ति त त्यो वेला पो महान् हुन्छ, जुनवेला दानवलाई मानव वनाउन सकिन्छ। देव, तपाईले श्रद्धाभावले निसाद भनि नै रहनु भो। तर, विद्यावाट मानिसलाई वञ्चित गरिन्छ भने यो कस्तो भेदभाव हो? क्रान्तिकारी वन्ने अरू नै उपाय नै छैन र? जसले निषेध गर्दछ, त्यो नै शुद्रको विद्यावान होस्। मलाई तिमी अस्वीकृत छौ भनि तपाई भन्नुहुन्थ्यो। भिष्मको राजनीतिले भन्थ्यो, त्यस्तो राजनीति यो मेरो साधनाले नष्ट होस्। जय गुरूदेव, प्रणाम भन्दै आँखा खोलेर आफ्नो लक्ष्य लिई वाणले डालीमाथिको सर्पलाई निसान पारी दुईटुक्रा हुनेगरी भुईमा खसाल्दै ठीक संकेत दिनुभो गुरूदेव, भनी प्रणाम गर्दछ। यसैगरी आँधीहुरी घामपानीसँग रूझ्दै नदीको वहाव समान एउटा सानो आश्रममा वसी आफ्नो साधनामा निरन्तर एकलव्यहाङ प्रगतिको वाटोमा अघि वढ्दै जान्छ...।



## दशौं सर्ग – साधना

उता हस्तिनापुरको राजधानीमा...

जुन दिन एकलव्यहाङसँग गुरू द्रोणाचार्यको भेट भएको थियो, त्यसै दिनको मध्यरातमा सपनावाट व्युँझेर खटियामाथि धुमधुम्ती वसी चिन्तन गर्दै... आज मैले कस्तो प्रत्यक्ष सपना देखें, जसलाई सम्झादा मन भरङ्ग हुन्छ। विशाल वनवृक्षमुनि एक श्यामवर्ण राजकुमार धनुवाण भिरेर ढुङ्गामाथि ध्यान मग्न भई वसेको। अवश्य मैले शीला दानको वेला देखेको हुनुपर्दछ। उनै वीर राजकुमारले म जस्तै मुर्ति वनाएर सम्पूर्ण मेरो शक्ति खिचेको जस्तो, कस्तो विचित्र मेरो जीवनमा एक द्रोणाचार्य हस्तिनापुरमा अर्को वन जंगलमा। यस्तो गुरू भक्ति शक्तिले नै कुनै शिष्यले गरेको हुनुपर्छ। जसले एक गुरूलाई अनेक रूपमा सजाएको छ। म स्वयं शिक्षादान दिन तयार परेजस्तो, मेरो धनुर्वेद सारा मुर्तिले नै खिचेर लिए जस्तो।

राजकुमारले यसरी लक्ष्य लिदै वाण चलाउने कि वाण रेखा नै विद्युत रेखा भईजाने। अनेकौं लक्ष्य लिएर एउटै रेखामा अनेकौं वाणहरू गइरहेको जस्तो देखिने। केवल उनी मात्र शिष्य थिए जस्तो, तर अफसोच, यो कस्तो अनाचार भयो, मवाट, भिष्मको राजनीतिमा बाँधिएर वेतनको भागिदार वनें। शिक्षा प्राप्त गर्नलाई भेदभाव हुँदैन, सवैलाई समान अधिकार छ। के सूर्यको किरणले भेदभाव गर्छ र? फूल फुलेर कहिल्यै वोल्छ र?

त्यस्तै, साधु नै सुगन्धको अधिकारी भएको छ, जसको नजिक अरू जान्छन्। शिक्षाको पवित्र तिर्थराज ता सृष्टिदेखि नै मानिसको कर्मभूमिमा हुन्छ, निसाद पुत्रलाई कस्तो प्रतिवन्ध लगाएको?

म यहाँ कठोर राजनीतिको शासनले विवश भएको छु। अभागी द्रोण भरद्वाजको उच्च आदर्शले तालाई कहिल्यै अघि वढ्न नदेओस्, जसको छोरा राजकुमारलाई मैले शिष्य बनाउन अस्वीकार गरेको थिएँ। पवित्र धर्म कार्यमा शिक्षादान दिन सकिन, न त गुरूकुल नै स्थापना गर्न सकें। धिक्कार छ, द्रोण तेरो साधना, माफ देऊ, भगवान मैले वाटो विराएँ। राजकक्षमा बसेर अहंकारी भई पार्थलाई नै अद्वितीय धनुवीर बनाउँला

भनें, ब्राम्हण क्षेत्रीको मात्र सदैव रक्षा गर्छु भनें, यो अहंकारकै प्रतिशोधमा आफैंले श्याम वर्ण राजकुमार शिष्यलाई धनुर्विद्याको साधनामा अद्वितीय बनाएको देखें, जोसँग पार्थ पनि सामना गर्न सक्दैन। के सोच्नु र, सपनाको द्रोण विपनाको द्रोण.....

'शिष्य पार्थ गुरूकक्षमा प्रवेश हुँदै'

**पार्थ** : जय गुरूदेव!

**द्रोण** : को हो?

**पार्थ** : गुरूको शिष्य पार्थ।

**द्रोण** : प्रिय शिष्य पार्थ! तिमी आउँदैछौ, आज भेला हुन ढिलो हुन्छ होला।

**पार्थ** : गुरूदेव, आज तपाई निदाउनु भएन जस्तो देखिनुहुन्छ नी, भन्नुहोस् न चिन्ता के पऱ्यो, त्यस्तो गुरूलाई।

**द्रोण** : होइन, होइन, आज राति एउटा धमिलो चित्र मात्र देखेको थिएँ, जसको रक्त रंगले तिम्रो वाण रंगाई दिएको थियो, वस् त्यही कुरा हो।

**पार्थ** : गुरू थाकेजस्तो कुरा गर्नुहुन्छ नी, ब्राम्हण भेलाको सु-अवसरमा कुनै दुःखको सपना देख्नुभयो कि के हो?

**द्रोण** : साँच्चै ठिक भन्यौ पार्थ, एक यस्तो अजीवको सपना देखें कि क्षणक्षणमा यथार्थरूप लिंदै गरेको विपना जस्तै...।

**पार्थ** : देवहरूको सपना त सधैं सत्य सावित हुँदै गएको छ नी, त्यो कस्तो सपना थियो, गुरूदेव।

**द्रोण** : सुनाउला, तिमीलाई कुनै वेला, अहिलेलाई यति नै सम्झ कि टाढाको घना वनमा कुनै राजकुमार शिष्य रूखमुनि बसेर धनुर्वेद साधना सिद्धी गरिरहेको छ।

**पार्थ** : हे देव, कुन शिष्यको सिद्धी पूर्ण हुँदैछ, तपाईकै शिष्यको हो कि अरू कुनै गुरूको?

**द्रोण** : कुनै सच्चा शिष्यको एकै गुरू जस्तो छ।

**पार्थ** : ऊ तपाईसँग सामना गर्न सक्छ?

**द्रोण** : कुनै धनुवीरको दास हो, म यसै भन्न सक्दिन।



**पार्थ** : कृपया, बताउनुहोस्, त कुन वनमा साधना सिद्धी गरिरहेछ।

**द्रोण** : थाहा छैन, मलाई वस यत्ति नै भान हुन्छ कि एउटा घना वनको रूखमुनि पूर्व दिशामा सानो आश्रम छ, त्यहाँ नै बसेर साधना सिद्धी गरी रहेजस्तो लाग्छ।

**पार्थ** : गुरूदेव, आज्ञा दिनुहुन्छ भने आजै थाहा गर्न जाने बन्दोवस्त गरूँ।

**द्रोण** : सोच्दैछु, तिमीलाई मृगको शिकार गर्न इच्छा छ? छ भने त्यही वनमा जाने अनुमति दिन्छु। जाऊ, साथीहरू लिएर सम्भव भयो भने म पनि साथसाथै आउँछु।

**पार्थ** : जो गुरूको आज्ञा, प्रणाम गुरूदेव, भन्दै पार्थ साथीहरू भेलागरी पूर्वतिर जंगलको निशानगरी बाटो लागे।

गुरू द्रोणाचार्यको अदेख शिष्य खोज्न पाण्डुहरूको साथमा जंगल प्रवेश गर्दै... पार्थको मनमतिष्कमा गुरू द्रोणको बोझिलो शब्दहरू दोहोरिन थाल्छ। गुरूले कति गम्भीर भएर भन्नुहुन्थ्यो। रहस्यपूर्ण ढंगले, एउटै गुरू जस्तो उनको चेला...। मभन्दा पनि सच्चा चेला, सपनामा सदैव धनुवाण अभ्यासगरी मभन्दा जान्ने भइसकेको छ रे.....मृगको शिकार गर्न त गुरूबाट आज्ञा भयो तर मेरो शिकार अर्कै छ। आजै हेरौंला कुन त्यस्तो शिष्य सिंह, हात्ती, सर्प, वनराजाको पछाडि सुँगुर भई बस्ने, हेरौंला मेरो प्रतिद्वन्द्वीलाई पनि, कसको चेला रहेछ? कस्तो साधना गर्दोरहेछ, भनि सोचाईबाट ब्युझेंर पाण्डुहरूसँग आपसमा कुराकानी गर्दै जंगल झोर्दै खोज्न लागे तर कतै भेटेनन्।

राजकुमारहरू फर्केर नआएकाले भोकाए होलान् भनी वनभिज्ञलाई बोलाई मिठामिठा खानेकुराहरू व्यवस्थागरी राजगुरूले दुई जवानका साथमा पठाई दिए। दुई जवानहरू थालीमा भोजन बोकी जंगल चहार्न थाले। उनीहरूको साथमा पार्थको कुकुर पनि यताउति अघिपछि लुखुरलुखुर दौडी जान लाग्यो। वन शिविरमा हिंडेको गुरू द्रोणाचार्यले पनि टाढासम्म हेरिरहे।

भतियाहाराको साथमा गएको कुकुरले क्षणक्षणमा वाण हानी रहेको मानिस देखेर दौडेर नजिकै पुगी भुक्न थाल्यो, भतियाहाराहरूले

पनि खोजेका मानिस तिनै हुनुपर्छ भनी टाढाबाटै हेरिरहे।

एकलव्यहाङको ध्यान भंग हुनेगरी कुकुर भुकिरहेकोले धनु वाण रोक्दै...।

**एकलव्य** : हे वीर, कुकुर तेरो आवाजको लक्ष्य ठिक हो तर, मेरो गुरूदेवको ध्यानगरी वसेको वेला नभुक, ता पनि उनको नजिक छस्, गुरूलाई प्रार्थना गर्ने हो भने मौन भई प्रार्थना गर तेरो साधना पनि पूरा हुन्छ।

'त्यति भन्दाभन्दै पनि...'

कुकुर भौं.. भौं.. भौं भौं भौं कुकुर भुकिनै रह्यो। 'एकलव्य कुकुरलाई नजर पार्दै'

**एकलव्य** : कस्तो मात्तिएको केटो जस्तो मुर्ख काम गरेको चुप लाग, चुप, साधनामा ठूलो वल हुन्छ, भुकिस् भने वाणले तेरो मुख भत्काई दिन्छु, अनि भुक्लास् कति भुक्छस्।

**कुकुर** : भौं भौं भौं भौं भौं

कुकुरको आवाज वन्द गराउन एकलव्य धनुवाणको ताङदो चढाउँदै लगातार कुकुरको मुखमा सात वाण हानी दिन्छ कुकुर चुप भएर त्यहाँवाट वायु समान दौडेर पार्थ कहाँ पुग्दछ। पार्थले पनि छक्क परि आफ्नो कुकुरलाई हेऱ्यो, र उसको मुखमा लागेको सात वाणले एकथोपा खुन नझारेको देखेर अचम्मितसँगले निराश हुँदै कुकुरको मुखबाट एकएक गरी सातवटै वाण तानेर निकाली दियो।

यस्तो अचम्मगरी धनुवाण चलाउन सक्ने धनुवीर को हो? भनि पाण्डु पुत्रहरू अक्क न मक्क भई वसिरहेका थिए। पार्थको अहङ्कार पनि क्षणभरमै सेलाएर गयो। केहीवेर पछि पार्थ विस्तारै उठ्यो त्यो देखेर विवश कुकुर पनि विस्तारै उठ्यो र पाण्डु पुत्रहरू पनि सबै उठे। कुकुर अघि अघि दौडेर संकेत दिन लाग्यो, पार्थ पाण्डुहरू पनि पिछा गर्दै घना वनमा पसे, आखिर कुकुरले एकलव्यहाङको गुरू आश्रम नजिक पुऱ्याई टक्क अडी हेर्न थाले। सवैले हेर्न लागे, एकलव्यहाङ गुरूको ध्यानमा क्षणक्षणमा वाण चलाई रहेको थियो। त्यो देखेर सवै उनको नजिकै पुगी पार्थ अगुवा हुँदै नम्र भावले एकलव्यलई सोध्न थाले...



**पार्थ** : हे वीर पुरूष! तपाई को हुनुहुन्छ? कसको यो आश्रम हो? गुरू को हुनुहुन्छ? 'तीन वाक्यमा पार्थले प्रश्न गरे'

**एकलव्य** : नमस्कार, वस्नुहोस्, दुःख भो, तपाईहरूलाई।

'तीन प्रश्नको उत्तर तीन वाक्यमा दिए' राजकुमारहरू आसन गरेपछि, नम्र भई आफ्नो परिचय दिँदै' प्रभु, मेरो नाम एकलव्यहाङ, पिता श्री हिरन्यधनु हो, गुरू द्रोणाचार्य हुनुहुन्छ, ऊ त्यहाँ खडा हुनुहुन्छ। 'गुरू मूर्तिलाई सवैले हेर्दै प्रणाम गर्दै फूल चढाउँछन्। युधिष्ठिर नम्र हुँदै'

**युधिष्ठिर** : गुरू द्रोणाचार्य हस्तिनापुरमा हुनुहुन्छ, कसरी यो सुन्य वनमा आई धनुर्वेद सिकाउनुहुन्छ?

**एकलव्य** : प्रभु गुरूदेव हस्तिनापुरमा हुनुहुन्छ, तर, वहाँको प्रेरणाने नै यहाँ म आश्रम बनाई धनुर्वेद प्राप्त गरिरहेको छु, नकि, साधना त उनको संकेतले मात्र पूर्ण हुन्छ।

**पार्थ** : हे वीर, एकलव्य त्यसो भए तपाईले नै मेरो कुकुरको मुखमा सात वाण छोड्नुभएको हो त?

एकलव्य : भुकेर गुरू ध्यान नष्ट गरेकोले उनलाई चुप गर्न मैले नै गुरूको प्रेरणा पाएर सात वाण हानेको हो।

**पार्थ** : हे वीर, एकलव्य, तपाईलाई त्यस्तो विध्न धनुवाण विद्या कसले सिकायो?

**एकलव्य** : गुरू द्रोणाचार्यले, जो मुर्तिकोरूपमा यहाँ उभिनुभएको छ, वहाँकै संकेतले यो वार्णविद्या मैले पाएको हुँ।

**पार्थ** : मुर्तिले कसरी संकेत गर्छ? त्यो त जड हो।

**एकलव्य** : शान्त देव, कुन जड, कुन चेतन, यो त केवल हामीले देख्ने संकोच मात्र हो, म जडलाई नै जड मानेर वसेको छु, चेतना त अहङ्कारले ध्वस्त पार्दछ, तर, जडपूर्णरूपले निसर्गत प्रकृतिस्थ छ... थोरै तपाईहरूको परिचय त पाउँ।

**पार्थ** : पार्थ मेरो नाम हो, वहाँहरू सवै पाण्डु पुत्रहरू हुनुहुन्छ, हामी सवै गुरू द्रोणाचार्यको शिष्यहरू हौं, तर, यो भन्छु कि एकलव्य गुरूले शिक्षा त दिनुभयो, तपाईलाई जस्तो शिक्षा चाहिँ हामीलाई कहिल्यै दिन सक्नुभएन।

**एकलव्य** : होशियार पार्थ, तपाईको मुखबाट गुरूको निन्दनीय वचन म सुन्न चाहन्न, गुरू सदैव ज्ञान दान निस्पक्ष गर्नुहुन्छ, शिष्य नै ज्ञान प्राप्त गर्न असक्षम छ भने प्रसंग मोड्नु हुन्न, बरू दाजुभाइ मिलेर फलफूल कन्दमुल खाऔं, भन्नुहोस्, के टक्रयाउँ?

**पार्थ** : होइन, एकलव्य गुरू वाटो हेरिरहनु भएको होला, हामी जान्छौं।

**एकलव्य** : गुरू पर्खेर नै वस्नुभएको छ भने म कसरी रोकौं, आफ्नो दाजुभाइहरूलाई, कन्दमुल नै खाऔं, प्रेमको भावनाले गुरूलाई प्रणाम गरौं, वस यो नै मेरो प्रार्थना छ। कुनै वेला यो दासलाई सम्झेर आउनु होला। 'महान् एकलव्यको सम्मुख अँध्यारो मुहर्तमा कन्दमुल खाँदै पार्थ र पाण्डुहरू वसेका छन्। 'पार्थ बाटो लाग्ने हतारमा, उठ्दै पाण्डवहरूलाई जाउँ भन्ने हातको इसारा दिँदै सबै उठ्छन्'। केही परसम्म साथीभाइहरूलाई पुऱ्याउने अठोट गरेर एकलव्य पनि सँगै उठ्छ। सँगसँगै वाटो लाग्दै... धन्य भाग्यले गर्दा दाजुभाइहरू दुःखका साथ यहाँ पाल्नुभएर मलाई दर्शन दिनु भई धेरै कृतज्ञ बनाई दिनुभयो। तपाईहरूको सम्झनाले सदा मलाई वल मिलोस्। यो वनको साधना सकेर तपाईहरूलाई भुल्ने छुइन। कुकुरलाई वाण हानेकोमा क्षमा चाहन्छु। हवस् त नमस्कार पाण्डवहरू पनि अकमकाँदै नमस्कार जनाउँछन्। एकलव्य, हामी फेरि कुनै वेला आउँला भनी एकलव्य आश्रम छोडी वाटो लागे।

## बाह्रौं सर्ग – लाधव

वनको शिविरमा गुरू द्रोणाचार्य मनमनै रात परिसक्यो, राजकुमारहरू कोही फर्केर आएनन्, के अव म आफैं खोज्न जाऔं? कि नजाऔं भनि टोलाएर सोचिरहेका थिए। त्यसैवेला कुकुर अघिअघि उनीहरू पछिपछि आएको देखी द्रोण खुशी भए। सवैले गुरूदेवलाई प्रणामगरी भएभरका कुराहरू गुरूलाई सुनाए, परन्तु, पार्थको मुहार निराशाले छाएको देखेर गुरूले उनलाई एकान्तमा लगी सोधे।

**द्रोण** : पार्थ, एकलव्य एकान्त वनमा किन प्रसन्न छ? कस्तो साधनामा मौनमुग्ध छ? केही जान्न वुझ्न सक्यौ? 'पार्थ नाजवाफ उभिन्छ'



पुनः पार्थलाई सम्झाउँदै, सुन, एकदिन राजधानीमा तिनी आई मलाई भेटेर गुरूदेव प्रणाम मलाई पनि शिष्य वनाउनुहोस् न. भनि विन्ती गरेको थियो। तर, आर्य राजनीतिको विधानअनुसार म उनलाई चेला बनाउन नसक्ने अवस्थामा थिएँ। त्यसैले इन्कार गर्दै जाऊ, निसाद पुत्र तिमी अस्वीकृत छौ भनी दिएँ। उनी जो गुरूको आज्ञा भनी गएको थियो, कहाँ गो, कता गो, अत्तो पत्तो भएन। अनि त्यसै रात सपनामा कुमार एकलव्यलाई मैले देखेको थिएँ, जसको वारेमा तिमीलाई सोधेपछि भनिसकेको छु।

'गुरूले सबै कुरा सम्झाई दिएपछि पार्थ गुरूलाई प्रणाम गर्दै'

**पार्थ** : गुरूदेव, एकलव्यको श्रद्धा विचित्रको छ, तापाईको वडो अजीव मुर्ति वनाएको छ, आफैं भन्छ, जति अभ्यास गरेको छु, त्यो सबै तपाईकै मुर्तिको प्रभाव हो रे, उसको शिक्षाको मन्त्र पनि तपाईकै हो अरे। निसादको छोरो हो, तर यति तेजिलो छ कि जति मन्त्र वाणमा तेज हुन्छ। 'समयले रातलाई डोऱ्याइरहेको छ, हल्का वायुको चञ्चल पहलहरूमा मस्तले सबै शिविरमा निदाइरहेका छन्। तर, पार्थलाई किन हो, निद्रा लागेन। अँध्यारोमा पल्टी टुलटुल आँखा अँध्यारो हटाउने दीप जस्तै स्नेहको आधारले ज्ञानको ज्योति सल्वलाए जसै उनी निदाएनन्।..मनमनै मनमा'

कति धेरै विश्वास वीर एकलव्यमा रहेछ, जो गुरू मुर्ति वनाई भक्तिभावले वसेको छ। कति शान्त अहङ्कार विहीन रहेछ, मलाई सत्य कुरा गर्थ्यो, सदैव गुरू ज्ञानदान निष्पक्ष गर्नुहुन्छ। तर, शिष्य ज्ञान लिन असफल छ भने त्यो ज्ञानदान अनर्थ हुन्छ। सत्यमा नै ज्ञान छ, लिनमा असफल हुन सकिन्छ। म त्यसैले निराश छु। मेरो सब अहङ्कार मेरो लागि वाधा भयो, उसैलाई अद्वितीय धनुवीर देखें, तर, कसरी विर्सनु म पनि क्षेत्रीय राजाको पुत्र हुँ। राजवंशको दायित्व मेरो पनि छ, आर्य भिष्मको सपना मैले पूरा गर्नुछ। कसरी के गरी भन्नु धनु विद्यामा शुद्रले जित्यो भनेर... कसरी एकलव्यसँग सामना गर्नु... तिखो वाणले उसको तलको हात नै काटी झारिदिउँ कि अहा, राजनीतिले मान्यता देला परन्तु म क्षेत्रीय वीर भएर यस्तो ठूलो अपराध गर्न सक्दिन। चाहे आर्य जाति नै

नष्ट होस्, कसरी यो समस्या समाधान गर्नु गुरूदेव नै विचार गर्न सक्नुहुन्छ, म त कुवुद्धिको छु, गुरूदेव अव त उठी सक्नुभो होला। 'ओछ्यानवाट विस्तारै उठी गुरू आश्रमतिर लाग्दै...'

**पार्थ** : जय गुरूदेव, प्रणाम!

**द्रोण** : स्वास्ति, तिमी उठी सक्यौ पार्थ।

**पार्थ** : गुरूदेव, निदाउनै सकिन, रातभरि सोच्दै रहें, तापाईको सपना सत्य लाग्यो, तर, उसले कसरी अद्वितीय धनुविद्या कसरी सिक्न सक्यो? त्यो कुन साधनाले गर्दा हो? वुझ्न सकिन। जुन ज्ञान सपनामा तपाई दिँदै हुनुहुन्छ, त्यो ज्ञान तपाईवाट हामीले पाएको ज्ञानभन्दा श्रेष्ठ छ, माफ गर्नुहोला, एकलव्य शुद्र नै संसारको धनुवीर भयो भने आर्य जातिको दशा के हुन्छ?

त्यो दिन स्वयं तपाई भन्नुहुन्थ्यो, पार्थ, कहिल्यै सपनामा भुलेर पनि तिमी वाहेक अरूलाई अद्वितीय धनुवीर वनाउने छैन। तर, आज तिनै शुद्र जातिलाई सपनामा सिकाई महान् पराक्रमी वनाउनु भएको छ। यसले चाह्यो भने विश्व जित्न सक्छ। माफ गर्नु होला, तपाई व्रम्हवेत्ता हुनुहुन्छ, अव तपाईको अगाडि दुईवटा प्रतिज्ञा छ, आर्य वंशको रक्षा गर्नु र पार्थलाई अद्वितीय धनुवीर वनाउनु। यसैको लागि म प्रार्थना गर्दछु भनी वचन दिनुहुन्थ्यो। यदि एकलव्य तपाईको सच्चा चेला हो भने तपाईलाई अवश्य सहयोग दिने छ, नत्रभने आज्ञा दिनुहोस्, म 'भनि नसक्दै...'

**द्रोण** : शान्ति, शान्ति, पार्थ तिमी राजनीतिमुखी हौ, चाँडै नै रिसाउँछौ, सच्चा चेला त गम्भीर अनि शान्त हुन्छ। यो समस्या मेरो हो, तिम्रो होइन, आज शान्तपूर्ण ढंगले सोच्न देऊ, समस्या समाधानको लागि तिम्रो अगाडि म कसम खान्छु।

साँझ भएपछि तिमीलाई साथमा दिएर एकलव्यहाङको आश्रममा जाउँला अहिले पर्ख।

**बाह्रौं सर्ग – द्वन्द्व**

विरूवा हुर्केर जसरी दिनानुदिन हृष्टपुष्ट हुँदै जान्छ, त्यसैगरी आज एकलव्यहाङ पनि धनु विद्यामा पुष्ट भएको छ,। घना जंगलमा



टाढाटाढासम्म वाण हानी कसैलाई निमन्त्रणाको संकेत दिइरहेको थियो। साँझको अवसरमा गुरूको प्रतीक्षागरी रहेको जस्तो छ। धनुविद्या विकास लिने वेला भइरहेको छ। एक दिन अवश्य आउँछौं भनी कुन मुखले भने वस् विश्वास यति नै छ कि गुरूले मेरो कुरा सुन्नुभयो भने मलाई हेर्न अवश्य आउनुहुने छ। एकपटक श्रद्धाले अवश्य आउँछौं भनेको कसरी भुल्छन् होला त। आउनुभयो भने म वहाँहरूको पवित्र कदम कदम पानीको सिस् लिएर जीवन जलन सदाको लागि वुझाउने छु। आ सदाको ...'भौं भौं भौं' कुकुरको आवाज कानमा थुरिन्छ। एकलव्यहाङ झसंग भई चारैतिर आँखा घुमाई घुमाई हेर्न थाल्छ। कुकुर टाढावाट भुक्तै रहेको देखी नियालेर हेर्न लाग्यो। पार्थ जस्तै हा, कुकुर ऊ कुकुरलाई वाण हानेको थिएँ। पार्थपछि अर्को तपस्वी जस्तो वुढा मानिस पनि आइरहेछ, गुरू द्रोणाचार्य हुन् कि क्या हो, ओ हो क्या छिटो पार्थले गुरूदेवलाई लिएर आएको स्पष्ट चिनेपछि... धन्यवाद, पार्थ तपाई कति कृपालु हुनुहुँदोरहेछ।

मेरो सानो प्रार्थनालाई यति ठूलो महत्व दिएको जसरी तीस रातमा एकरात पूर्णिमा आउँछ, त्यसैगरी गुरूदेव आश्रममा आउनुभयो। आजै थाहा भइरहेको छ कि गुरूलाई कसरी स्वागत गरूँ। स्वागत गर्ने कुनै साधन नपाए पछि एकलव्यहाङ खुशीले अत्तालिदै... जय गुरूदेव! गुरूदेवको जय होस्, जय होस्, भनि धनु वाणमा ताङदो चढाउँदै एकवाण छोडी गुरूको चरणमा फूल वर्षा गरिदियो। त्यसपछि सातवाण छोडी दिंदा वाणै वाणले गुरूको परिक्रमा गऱ्यो। त्यसवेला द्रोण टक्क खडा थिए सारा साधनाले गुरूदेवको चरणमा प्रणाम गरी रहे, जस्तो भान गुरूदेवलाई महसुस भयो, तव गुरूदेवले पनि माथि हात उठाई शान्तिको संकेत गर्दै एकलव्यको आश्रम पुगी चारैतिर हेर्न लागे। 'पार्थ रिस उठेको मुहर्तमा गुरूलाई एकलव्यलाई गुरू एकलव्य हेर्दै थिए'

**एकलव्य** : गुरूदेव, वस्नुहोस्, यो मुर्ति तपाईकै हो, जो मैले वनाएको छु, आज तपाईहरू मिलेर एउटै जस्तो देखिनुहुन्छ, 'एकलव्य फल टिप्दै' गुरू, यो फल खानुहोस्। 'द्रोण फल चाख्दै हाँसेर'

**द्रोण** : यो फल त मिठो छ, अझ यो सत्य हो कि तिम्रो साधनाको

